2214

॥ श्रीहरिः ॥

# अपात्रलाई पनि भगवत्प्राप्ति

( नेपाली )

| त्वमेव माता च पिता त्वमेव<br>त्वमेव बन्धुश्च सखा त्वमेव।<br>त्वमेव विद्या द्रविणं त्वमेव<br>त्वमेव सर्वं मम देवदेव॥ |
|---|

नेपाली अनुवादक
सह- प्रा. रामुप्रसाद सुवेदी

जयदयाल गोयन्दका

# प्रकाशकीय निवेदन

'अपात्रलाई पनि भगवत्प्राप्ति' जीवन्मुक्त तत्त्वज्ञ भगवत्प्रेमी ब्रह्मलीन परमश्रद्धेय श्रीजयदयालजी गोयन्दकाका बाह्र प्रवचनहरूको संग्रह हो, जसमा एघार प्रवचन प्राचीन क्यासेटहरूबाट लिइएका छन्। श्रद्धालुहरूको निरन्तर आग्रहका बाबजुद पनि आजसम यिनको प्रकाशनको सुयोग बन्न पाएको थिएन। भगवान्‌का कृपाले त्यो सुयोग यसपटक बन्न सक्यो। प्रेमी पाठकहरूका हातमा यो पुस्तक समर्पित गर्दै गर्दा हामीलाई अपार हर्षको अनुभव भइरहेछ।

पुस्तकमा प्रमुख प्रतिपाद्य विषय आत्म-कल्याण र भगवत्प्राप्ति हुन्। पूरै पुस्तकमा भक्तिको स्वर सर्वाधिक मुखर छ। ज्ञानचर्चाले समेत भक्तिको रंग लिएको छ। भक्तिको त्यो रथ श्रद्धा र विश्वासका पाङ्ग्राहरूले चलेको छ। अजामिल-जस्ता अपात्रको पनि उद्धार भयो, यो परिघटना पुस्तकको नामकरणको सार्थक पीठिका हो। 'नियमहरूको पालनले कल्याण' शीर्षक लेखमा आरूणि र उपमन्युको उपाख्यानद्वारा श्रद्धा र विश्वासको महत्त्व बडो सशक्त रूपले प्रतिपादित गरिएको छ। 'प्रमाद नै मृत्यु हो' शीर्षक लेखमा सनत्सुजातका सूत्रात्मक उपदेशको विस्तृत व्याख्या छ र हाम्रा दैनिक आचरणसित सम्बन्धित प्रमादहरू (जसलाई परमश्रद्धेय गोयन्दकाजीले चोरीको संज्ञा दिनुभएको छ)- का विविध आयामहरूको विवेचन छ।

आशा छ, भगवत्प्रेमी पाठकहरूलाई यस पुस्तकबाट एक नयाँ दिशा मिल्नेछ।

-प्रकाशक

॥ श्रीहरिः ॥

# विषय-सूचि

| विषय | क्यासेट नं० | पृष्ठ-संख्या |
|---|---|---|
| १- "उदाराः सर्व एवैते" को रहस्य- अपात्रलाई पनि भगवत्प्राप्ति | २०९ | ५ |
| २- महापुरुषहरूको रहस्य के हो? | २४७ | २५ |
| ३- भगवान र महापुरुषहरूको बलले साधन तेज गर्नु | ११६ | ४२ |
| ४- समता | ६७ | ५३ |
| ५- नियमहरूको पालनले कल्याण | ९६ | ७३ |
| ६- सबैमा निष्काम प्रेम र शोक- निवृत्तिको उपाय | २३६ | ८२ |
| ७- प्रेमको तत्त्व-रहस्य | ८३ | १०४ |
| ८- भक्त र भगवानको परस्पर लीला | ३ | १२३ |
| ९- अनन्य विशुद्ध प्रेम | ६६ | १३६ |
| १०- प्रमाद नै मृत्यु हो | ३१६ | १५२ |
| ११- शरणागतिका तीन शाखाहरू | २६७ | १७१ |
| १२- वासुदेवः सर्वम् | | १८५ |

❑❑

॥ श्रीहरिः ॥

# अपात्रलाई पनि भगवत्प्राप्ति

## ''उदाराः सर्व एवैते'' को रहस्य–अपात्रलाई पनि भगवत्प्राप्ति

**'उदाराः सर्व एवैते ज्ञानी त्वात्मैव मे मतम्।'**

(गीता ७।१८)

यी सबै भक्त उदार छन् परन्तु ज्ञानी त मेरो आत्मा नै हो, मेरो स्वरूप नै हो। 'सबै उदार छन्' यसको भाव निम्न श्लोकमा स्पष्ट गरिएको छ–

**चतुर्विधा भजन्ते मां जनाः सुकृतिनोऽर्जुन।**
**आर्तो जिज्ञासुरर्थार्थी ज्ञानी च भरतर्षभ॥**

(गीता ७। १६)

'हे भरतवंशीहरूमा श्रेष्ठ अर्जुन! चार प्रकारका सुकृती अर्थात् उत्तम कर्म गर्ने मेरा भक्तहरू मलाई भज्दछन्- आर्त, जिज्ञासु, अर्थार्थी र ज्ञानी।' यी चारवटैमा अर्थको कामनावाला यानी स्त्री, पुत्र, धन, रूपियाँ, शरीर, ऐश्वर्य, राज्य- यिनको जसले हृदयमा कामना गर्छन् ती अर्थार्थी हुन्। सबै पदार्थ नै अर्थ हुन् तिनको कामना गर्नेवाला अर्थार्थी हुन्। अर्थार्थीभन्दा श्रेष्ठ छ आर्त, जस्तै- द्रौपदी। जसलाई काम गर्ने समयमा त कामना नहोस् अर्थात् काम गर्ने समयमा कुनै इच्छा नहोस् तर संकट (आपत्ति)-का समयमा भने आफ्नो माग पेश गरिदेओस् त्यो आर्त हो र जिज्ञासु त्यो हो जो ठूलो-भन्दा-ठूलो सांसारिक आपत्ति प्राप्त हुँदा पनि त्यसका लागि भगवान्सित प्रार्थना

नगरोस्, एकमात्र भगवान्लाई जान्नुको र उनलाई शीघ्र प्राप्तिको इच्छा गरोस्। जसलाई एक नै जिज्ञासा होस् कि परमात्मा प्राप्ति छिटो कसरी हुन्छ। आफ्नो आत्मा-उद्धारको अर्थात् भगवान्को दर्शनको नै जसलाई जिज्ञासा छ, यस्ता पुरुषहरूमा न त संसारको कामना रहन्छ र न संकट-निवृत्तिको याचना, चाहे जति नै संकट आऊन् किन्तु आत्म-विषयको, परमात्म-विषयको मात्र जिज्ञासा छ कि परमात्मा के हो? त्यसको प्राप्ति कसरी हुन्छ? चौथो हुन्छ निष्कामी ज्ञानी, जसलाई कुनै पनि कामना छैन, मुक्तिसम्मको पनि कामना छैन। 'कुनै पनि कामना गर्ने छैन तैपनि भगवान्को प्राप्ति मलाई हुने नै छ' यो पनि कामना छैन। कामना गर्ने छैन तैपनि मेरो आत्माको उद्धार हुने नै छ यो पनि कामना गर्दैन, तात्पर्य यो कि निष्कामी ज्ञानी कुनै पनि कामना गर्दैन। यस्तो कुरा या त सिद्ध पुरुषहरूमा हुन्छ या सिद्ध हुन लायक पुरुषहरूमा हुन्छ। यी चारै प्रकारका भक्तहरूमा जुन सबभन्दा उत्कृष्ट भक्त छ त्यो मेरो आत्मा नै हो।

**उदाराः सर्व एवैते ज्ञानी त्वात्मैव मे मतम्।**

सबै प्रकारका भक्त उदार छन् किन्तु ज्ञानी त मेरो आत्मा नै हो। अठारौं र उन्नीसौं श्लोकहरूमा उसको श्रेष्ठता देखाइएको छ तथा यसभन्दा पहिला सत्रौंमा पनि देखाइएको छ-

**तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते।**
**प्रियो हि ज्ञानिनोऽत्यर्थमहं स च मम प्रियः॥**

यी चारै प्रकारका, अर्थार्थी, आर्त, जिज्ञासु र ज्ञानी भक्तहरूमा म एक परमात्मामा भक्ति गर्नेवाला जुन मेरो अनन्य प्रेमी ज्ञानी भक्त छ, ऊ श्रेष्ठ हो। ज्ञानीलाई म अतिशय प्यारो छु, मेरा अतिरिक्त र कतै किञ्चिन्मात्र पनि उसको प्रीति हुन्न। यदि मुक्तिमा पनि प्रीति रहन्थ्यो त त्यो जिज्ञासु नै हुन्थ्यो। अर्थार्थी,

आर्त, जिज्ञासु– यी तीनवटैभन्दा पनि ज्ञानी अझै उत्कृष्ट हुन्छ। उसलाई म अतिशय प्यारो छु। भक्ति (भेदोपासना)–मा म ज्ञानीको अतिशय प्यारो छु, त्यो ज्ञानी मलाई अतिशय प्यारो छ। जुन एक–अर्कालाई अतिशय प्रिय छ, त्यसलाई भगवान्‌यस श्लोकमा देखाइरहेछन्। दुवैको एकता देखाइरहेका छैनन्। यो देखाइरहेछन् कि ऊ मलाई अतिशय प्यारो छ र म उसलाई अतिशय प्रिय छु। 'त्यो मलाई' र 'म उसलाई' –यस भेदोपासनाको भावलाई यो श्लोक प्रकट गरिरहेछ। उनी भन्छन् कि त्यो अतिशय प्यारो छ भने के अरू सबै प्यारा छैनन्? '**उदाराः सर्व एवैते**' परन्तु '**ज्ञानी त्वात्मैव मे मतम्।**' ज्ञानी त मेरो आत्मा नै हो– मेरो स्वरूप नै हो। यस आधा श्लोकमा यो कुरा भन्छन् कि चारै भक्त नै उदार छन् किन्तु तिनमा ज्ञानी मेरो आत्मा नै हो। उदार सबै छन् यानी श्रेष्ठ सबै छन्। सबै मलाई प्यारा छन् र सबैलाई म प्यारो छु। यिनको श्रेष्ठताका साथ–साथ उदारताको भाव यो हो कि ती उदार चित्तवाला छन् जस्तै कुनै मनुष्यको चित्त बडो उदार छ भने आफ्नो स्वत्व, आफ्नो शरीर, समय, अधिकारको वस्तु आदि अरूका प्रति अर्पण गर्नमा त्यो बडो उदार हुन्छ। यस्ता ती सबै उदार चित्तवालाहरूले आफ्नो स्वत्वलाई मप्रति समर्पण गरिरहेका हुन्छन् किनकि प्रथमतः तिनले श्रद्धा–विश्वास गरेर मलाई भज्छन् परन्तु म त तिनलाई पछि सम्झना गर्छु।

सामान्यतया भगवान्‌को प्रेम त सबै ठाउँमा छ नै। श्रीरामजी भन्छन् कि हनुमान्! मलाई सबै जना समदर्शी भन्छन् परन्तु अनन्य गतिवाला सेवक भने मलाई अतिशय प्रिय हुन्छ–

**समदरसी मोहि कह सब कोऊ।**
**सेवक प्रिय अनन्य गति सोऊ॥**

भगवान् श्रीकृष्णजी पनि भन्नुहुन्छ–

**समोऽहं सर्वभूतेषु न मे द्वेष्योऽस्ति न प्रियः।**
**ये भजन्ति तु मां भक्त्या मयि ते तेषु चाप्यहम्॥**

(गीता ९। २९)

सम्पूर्ण भूतहरूमा म सम छु, मेरो न कोही अप्रिय छ न प्रिय। किन्तु जसले मलाई भक्तिले, प्रेमले भज्दछन् ती ममा र म तिनको हृदयमा प्रत्यक्षरूपले प्रकट छु।

दुवै पंक्तिहरूमा 'अह' यो एकवचनको प्रयोग भएको छ र भक्तहरूका लागि बहुवचनको प्रयोग भएको छ, किनकि भक्त धेरै हुन सक्छन् ; परन्तु भगवान् त एक नै हुन्। तिनले ममाथि विश्वास र भरोसा गरेर यो उदारता गरेका छन्। यदि म पहिला विश्वास गर्थें भने म उदार कहलाउँथे, किन्तु तिनले पहिला ममाथि विश्वास गर्छन् अनि बल्ल म त पछि गएर गर्छु तथा तिनका सापेक्षमा गर्छु, अधिक त गर्दिनँ किनकि ममा उदारता कहाँ छ? उदारता त उनीहरूमैं छ। अतः ती सबै मभन्दा श्रेष्ठ छन्, उदार छन्। म हूँ उदारता लिनेवाला र ती हुन् उदारता गर्नेवाला। भगवान्‌को कति ऊँचो भाव छ, कस्तो भावले आफ्ना भक्तहरूलाई उनी हेर्छन्। अझै ख्याल गर्ने कुरा के छ भने जब एक अर्थार्थीका लागि भगवान्‌को यस्तो भाव छ, एक आर्त भक्तका लागि यस्तो भाव छ, एक जिज्ञासुका लागि यस्तो भाव छ, फेरि ज्ञानीका लागि त कुरा नै के गरौं? द्रौपदी संकट–निवारणका लागि आतुर भएर भगवान्‌को पुकारा गर्छिन् र भगवान्त्यही समयमा आउँछन्। दुर्वासाका कारण द्रौपदी पुकार्छिन् र भगवान् त्यही समयमा प्रकट हुन्छन् जस्तै मानौं त्यहीं आडमा नै बसेका होऊन्। यसबाट हामीहरूले यो विचार गर्नुपर्छ कि निष्कामभावले भगवान् पाइन्छन् निष्कामीका सन्दर्भमा त भन्नु नै

के छ र? जब प्रेमको मात्रा अधिक हुन्छ भने सकामभावले पनि भगवान्‌भेटिन्छन्। जस्तै द्रौपदी आर्त भइरहेकी थिइन् कामना त यही थियो कि दुर्वासाको क्रोधको अग्निले आफ्नो कुटुम्ब बचोस्। द्रौपदीमा कुटुम्ब बचाउनुको कामना छ भने ध्रुवमा राज्यको चाहना थियो। ध्रुवमाथि कुनै यस्तो संकट आइपरेको छैन कि तिनलाई कसैले घरबाट निकालिरहेछ, कसैले जलाइरहेछ, कसैले नष्ट गरिरहेछ, उनको अपमान भइरहेछ– यी सबै कुराहरू त ध्रुवजीलाई भइरहेका छैनन् तिनलाई त मात्र एक चाहना छ कि मलाई पनि राज्य मिलोस्। अतः उनी अर्थार्थी भए किन्तु अर्थार्थी भएर पनि एकदमै भगवान्‌का परायण नै भए र यस्तरी परायण भए कि ठूलो–भन्दा–ठूलो आपत्तिको पनि परवाह गरेनन्। यस्तो परिस्थितिमा भगवान्‌लाई बाध्य भएर उनको पास आउन पर्‍यो। भगवान् त हरेक कुरालाई जान्दछन् नै, उनी जान्दछन् कि ध्रुव आफ्नो राज्यको कामनाले बोलाउँदै छन्। ध्रुवको तीव्र प्रेम, भजन र ध्यान हुनाले भगवान्‌आए र बोले– बाबु! तिम्रो जे इच्छा छ त्यो माँग। ध्रुवले भने– 'भगवन्! मैले पहिला कामनालाई लिएर भक्ति गरेथें, किन्तु अब हजुरको दर्शन भयो, दर्शनपछि ममा अब कुनै पनि इच्छा रहेन।' भगवान्‌ले भने– 'तिम्रो पहिला जुन इच्छा थियो त्यसको पूर्ति त म गर्ने नै छु , अन्यथा सकाम–भावले मलाई भज्नेवालाहरू बुझ्नेछन् कि भगवान्‌को दर्शन गरेपछि त कामना नै नष्ट हुन्छ, कामनाको पूर्ति नै हुने छैन, यस अर्थका कारण सकामीहरू मलाई भज्ने नै छैनन्। सकामी भक्तलाई पनि कायम राख्नु छ, यसकारण ती सबै त तिमीलाई मिल्नेछन् नै, केवल यहाँको मात्रै हैन, तिम्रो त कामना थियो यहाँको राज्यको, किन्तु तिम्रा लागि त ध्रुवपद पनि छ, जसको सारा तारामण्डल परिक्रमा गर्छन् त्यो ध्रुवलोक जबसम्म ब्रह्माजीको

दिन अथवा तिनको आयु छ तबसम्म कायम रहन्छ त्यहाँ तिमी स्थायीरूपले रहनेछौ। यसका अतिरिक्त तिमी अरू पनि माँग।' ध्रुवले भने- 'प्रभो! म त केवल हजुरको गुणगान नै गर्न चाहन्छु, स्तुति गर्न चाहन्छु किन्तु म स्तुति गर्न जान्दिनँ, पढे-लेखेको छैन।' पाँच वर्षका बच्चा घर छोडेर गए त पढ्ने-लेख्ने कहाँबाट। भगवान्ले आफ्नो शंख तिनको कपोलसित छुवाइदिए त तिनलाई सबै शास्त्रहरूको ज्ञान भयो। शास्त्रज्ञानपछि ती आफैं नै स्तुति गर्न लागे। भगवान्ले उनलाई भक्ति पनि दिए र पहिला जुनजुन इच्छा थिए ती सबै वस्तुहरू पनि दिए तथा राज्य समेत दिए। सकामभावले जसले भगवान्लाई भज्दछन् ऊसित पनि भगवान्को कति प्रेम छ र कति उदारता छ? यसरी नै जो श्रेष्ठ पुरुष हुन्छन् तिनको पनि यस्तै नै कुरा हुन्छ। भगवान्ले यति थोक दिएर पनि मनमा संकोच गर्छन् कि मैले यसलाई केही पनि दिइनँ।

तपाईंले ख्याल गरेर हेर्नू कि श्रीरामजीले विभीषण तथा सबै वानरहरूलाई साथमा लिएर लङ्का जित्नुभयो। जितेको परिणामस्वरूप उहाँलाई लङ्का मिल्यो र सीताजी भेटिइन्। मर्यादापुरुषोत्तम भगवान् राम ईश्वर हुन् र सीता ईश्वरी हुन् भन्ने कुरा धर्मको सम्बन्धलाई लिएर हो तर संसारको ऐश्वर्यका रूपमा त त्यत्रो परिश्रम गरेर लङ्का नै मिलेको हो तर रामले त्यही लङ्कालाई जस्ताको तस्तै विभीषणलाई दिए, तैपनि मनमा संकोच गर्छन् कि मैले विभीषणलाई केही पनि दिइनँ। यस्तो कुरा भगवान्का सन्दर्भमा त ठीक हो, किनकि भगवान् लङ्का मात्रै होइन, यदि ब्रह्माण्डै पनि विभीषणलाई दिनुहुन्छ भने त्यो भगवान्का लागि केही पनि हैन। किनकि उहाँ असंख्य ब्रह्माण्डहरूका मालिक हुनुहुन्छ। यदि उहाँले एक ब्रह्माण्डको राज्य नै दिए पनि के दिनुभयो, केही पनि दिइएन। मानिलिऊँ मसित करोडौं रूपियाँ

छ र मैले कुनै मान्छेलाई हजार रूपियाँ दिन्छु भने के दिएँ, केही पनि दिइनँ। भगवान्को भाव यो हो कि मैले के दिएँ, केही पनि दिइनँ। प्रथमत: जो-जसले भगवान्लाई भजेका छन् तिनका लागि भगवान् भन्नुहुन्छ कि ती उदारचित्त हुन्। तिनलाई उदार भनेर आफ्नो उदारतालाई तिनको उदारताका अगाडि कुनै पनि मूल्य दिइएन, किनकि प्रथम उदारता भक्तले गरेका छन्। भक्त त सबै उदार छन्। सकामभावले उपासना गर्नेवालाहरूका साथमा पनि भगवान्को यो उदारताको व्यवहार, यति उदारताको व्यवहार। उनको यो अलौकिक भाव सबै भक्तहरूप्रति छ। उनी स्वयं भन्छन् कि ती भक्त श्रेष्ठ र उदार छन्। जिज्ञासुको त कुरा नै के छ र? किनकि जिज्ञासुको भाव हो संसारको जिज्ञासाका अपेक्षा भगवान्को जिज्ञासा गर्नु। भगवान्को भजनध्यान गर्ने जिज्ञासा गर्नु, साध्यका लागि साधनको जिज्ञासा गर्नु। किनकि साध्य हुन् भगवान् र साधन हो उपाय। हजुरमा मेरो परम प्रेम होओस्, अनन्य प्रेम होओस्, विशुद्ध प्रेम होओस् यो साधन हो। भगवान्को प्राप्ति, भगवान्का साथमा नित्य निवास, भगवान्को दर्शन, भगवान्को साक्षात्कार र उनीसित सदा रहनु र उनको सेवा गर्नु- यी जिज्ञासुका भाव हुन्।

चौथो हो ज्ञानी। अर्थार्थी, आर्त र जिज्ञासु- यी तीनवटै अज्ञानी छन् किनकि तीनोटैमा कामना छ- कसैमा अर्थको कामना छ, कसैमा संकट-निवारणको कामना छ, कसैमा मुक्तिको, भगवान्प्राप्तिका साधनहरूको वा भगवान्प्राप्तिको कामना छ। यस्ता कामनाहरू समेत जसमा छैनन् त्यो मेरो भक्त उच्च कोटिको अनन्य भक्त हो। ज्ञानीका लागि भगवान् भन्नुहुन्छ कि म उसलाई अतिशय प्यारो छु किनकि संसारका कुनै पनि पदार्थमा उसको प्रीति छैन, कामना छैन, यसकारण ऊ मलाई

अतिशय प्यारो छ, यो अतिशय प्रेम जसमा छ, त्यो जिज्ञासुभन्दा पनि श्रेष्ठ हो, किनकि ऊ ज्ञानी हो। ऊ बुझ्छ कि भगवान्‌सित मुक्तिको पनि कामना गर्ने आवश्यकता छैन, दर्शनको समेत कामना गर्नु आवश्यकता छैन, भगवान्‌सित नित्यवास गर्ने कामनाको पनि आवश्यकता छैन, यस्ता विषयमा भगवान्‌ले जे पनि गर्नुहुनेछ, त्यसैमा प्रसन्न रहनेछु किनकि भगवान्‌मा कुनै कमी भए पो आवश्यकता अनुभव गर्ने, परन्तु भगवान्‌सित कुनै पनि वस्तु वा बुझाइ केहीको पनि कमी छैन।

हाम्रा कामना त यहाँका वस्तुमा छन्। भगवान्‌ले जे पनि गरिरहेका छन् यति अधिक गरिरहेछन् कि हामीले बुझ्न सक्ने कुरा नै हैन। यसकारण यदि हामीले कुनै चीजको कामना गर्छौं भने त्यसले हाम्रो मूर्खता मात्र सिद्ध हुन्छ। भगवान्‌भन्नुहुन्छ कि कुनै पनि प्रकारको कामना नगर्ने भक्त नै मलाई अतिशय प्रिय छन् यस्ता भक्तभन्दा बढेर दुनियाँमा मलाई केही पनि प्रिय छैन। भगवान् विष्णुतिर ध्यान दियौं भने भगवान्‌विष्णु भन्छन् कि यस्ता भक्तका तुलनामा मलाई लक्ष्मी पनि त्यति प्यारी छैनन्। श्रीरामतिर हेर्‍यौं भने ती भन्छन् कि सीता पनि मलाई त्यति प्यारी छैनन्। श्रीकृष्णतिर हेर्‍यौं भने ती पनि भन्छन् कि रुक्मिणी-राधिका पनि मलाई त्यति प्यारी छैनन्। अतिशय त्यसलाई भनिन्छ जेभन्दा बढेर अरू केही पनि नहोस्। ज्ञानी को हो? जसलाई म अतिशय प्यारो छु। अधिक के भनौं, ऊ त मेरो आत्मस्वरूप नै हो, त्यो म नै हूँ।

अब अर्को कुरा बताइन्छ। सगुण भगवान्‌को साक्षात्कार जुन समयमा हुन्छ त्यो क्षणको जुन भाव हुन्छ त्यो भाव क्रमपूर्ण तरिकाले नै हुन सक्छ या अचानक पनि? यसको उत्तर यो हो कि क्रमपूर्ण तरिकासित हुनु यो कुरा ठीक नै हो, जस्तै सूर्य

भगवान् प्रात:काल उदय हुन्छन् फेरि शनैः शनैः निकट आएर पछि प्रकट हुन्छन्। विस्तारै-विस्तारै जति-जति सूर्य निकट आउँछन् उति-उति प्रकाश बढ्दै जान्छ र सूर्य एकदम प्रकट हुन्छन्। यसरी नै भगवान्को प्रकट हुनेछ र अचानक पनि हुन सक्छ। जस्तै मानिलिऊँ एक कोठामा अन्धकार छ, घोर अन्धकार छ, त्यसमा बिजुलीको फिटिंग तथा करेण्ट छ र हजार वाटको बल्ब पनि छ। स्विच दबाउँदाबित्तिकै प्रकाश हुन्छ भने यसमा कुन ठूलो कुरा भयो र।

तेस्रो कुरा यो हो कि जहाँ तैयारी आदि केही नभए पनि भाव फेरिंदाबित्तिकै क्षणभरमा भगवान् प्रकट हुन्छन्। चौथो कुरा यो हो कि भगवान्को भक्तिको थोरै या कत्ति पनि भाव नहोस् तैपनि भगवान् प्रकट हुनुभयो भने पनि कुनचाहिं आश्चर्यको कुरा हो। अब यहाँहरूलाई सबैका साझा दृष्टान्त दिएर सम्झाउँछु जसले अझ धेरै कुरा बुझाइमा आउनेछन्। पहिलो दृष्टान्त त यो हो कि क्रमसित विकास हुँदै जान्छ, यो 'प्रतीत हुन्छ' भन्नका लागि सूर्यको उदाहरण दिएँ। सूर्यको उदाहरणमा प्रकाश बढ्दै-बढ्दै पूर्ण प्रकाश हुन्छ। दोस्रो दृष्टान्त बिजुलीको दिएँ कि घोर अन्धकार छ किन्तु स्विच दबाउँदाबित्तिकै झ्वाट्ट प्रकाश हुन जान्छ, जस्तै काम एकदम तैयार भएमा तुरून्त हुन जान्छ, तब समय लाग्दैन, बरू तैयार हुनुमा नै समय लाग्छ। समय लाग्ने कुराका लागि कुआँको दृष्टान्त दिन्छन्। कुआँ खन्दा-खन्दा वाक्क भएर सोचोस् कि 'छोड्दे यसबाट के पानी निक्लला'। जे सोचे पनि पटक-पटक पत्थर काटिरहोस्, काटिरहोस्। यो निश्चय गरोस् कि पत्थरमुनि पानी छ तर काट्न बन्द नगरोस् र काटि नै रहोस्। अन्तमा पत्थरको सीमा समाप्त हुँदाबित्तिकै क्षणमात्रमा दस फुट, पन्द्रह फुट पानी आउँछ। पानी निक्लनुको

एक क्षण पहिलासम्म पनि यो कुरा लाग्योक कि यसमा पानी निक्लनेवाला छैन जसले गर्दा खन्नेवाला निराश हुन्छ। जसले निराश भएर पनि आफ्नो प्रयत्नलाई छोड्दैन उसले सफलता पाउँछ नै। तेस्रो यो छ कि केही भगवान्का भक्त त हुन्छन् तर जोडदार-निष्ठावान् भक्त हुन्नन् तिनको भाव पनि क्षणमात्रमा बदलिन्छ। निष्ठा अटल राख्नका लागि यौटा दृष्टान्त छ। भगवान्का एक भक्त एक वृक्षमुनि बसेर भगवान्को भक्ति गर्थे, भजनध्यान गर्थे, एक दिन नारदजी त्यहाँ पुगे। शायद यो दृष्टान्त शास्त्रहरूमा नहोला, लोकोक्ति नै होला। कुरा बुझाउनका लागि सांसारिक दृष्टान्त त दिन्छन् भने यो त भक्तको दृष्टान्त हो। नारदजी त्यहाँ रोकिए, भक्तले नारदजीको पनि सेवा गरे। अतिथि-सत्कार गरे र सोधे- महाराज! तपाईं कतातिर जाँदै हुनुहुन्छ। नारदजीले भने- भगवान्को परमधामतिर गइरहेछु। भक्तले भने- त्यसो भए तपाईं मेरो पनि यौटा सन्देश त्यहाँ पुर्याइदिनोस् न। नारदजीले सोधे- के हो? भक्तले भने- तपाईं मेरा लागि भगवान्सित यत्ति सोधेर आइदिनोस् कि के कहिल्यै मलाई पनि वहाँको दर्शन हुनेछ? र हुन्छ भने कहिलेसम्म? नारदजीले भने- ठीक छ। तदनन्तर नारदजी नाच्दै-गाउँदै-बजाउँदै परमधाम पुगे। भगवान्ले सोधे- कसरी आउनुभयो नारदजी! नारदजीले आफ्नो आउनाका प्रयोजन बताए। फेरि भने- प्रभु! एउटा कुरा गरौं है, म जब यता आइरहेको थिएँ त बाटोमा मैले देखें कि हजुरका एक भक्त वृक्षको छायाँमा बसेर हजुरको भजन-ध्यान गर्छन् तथा अतिथिहरूको सेवा पनि गर्छन्। भक्तले यो सन्देश दिएर सोधाएका छन् कि के मलाई पनि के कहिल्यै भगवान्को दर्शन हुनेछ र हुनेछ भने कहिले? भगवान्ले टाउको हल्लाउँदै भने कि नारद! दर्शन त बहुतै कठिन छ। नारद

बोले- यदि कठिनै भए पनि के कहिल्यै हुन त हुन्छ? भगवान् बोले- हुनेछ नै, तर जे-जसरी त्यसले भजन-ध्यान गर्छ, त्यस प्रकारको भजनध्यान गर्नाले त त्यस वृक्षमा जति पात छन् त्यति नै वर्षहरू पछि हुनेछ। नारदजी सोच्न लागे- भगवान्ले यो के कुरा बताउनुभयो। भक्तले अतिथि-सेवा पनि गर्छन् भजनध्यान पनि गर्छन् फेरि पनि उनैलाई त्यत्रो वर्ष लाग्ने? भगवान्को कुरा सुनेर नारदजी फिर्ता आए। बाटोमा भक्त भेटिए। नारदजीको अनुहार मलीन देखेर उनले सोधे- किन महाराज! भगवान्सित त भेटिनुभयो? नारदजीले भने- भेटिएँ र कुरा पनि गरें। भक्तले सोधे- भगवान्ले के भन्नुभयो? नारदजीले भने- के भनौं भाइ! भक्तले भने- होइन महाराज! जे-जस्तो कुरा उहाँले भन्नुभयो, कुनै संकोच नगरीकन भन्नुहोस्। नारदजीले भने- भाइ! के भनौं। मैले भगवान्सित जे-जस्तो तिमीले भनेका थियौ त्यस्तो नै सोधें कि के कहिल्यै उसलाई पनि हजुरको दर्शन हुनेछ र हुनेछ भने कहिले? भगवान्ले यो उत्तर दिए कि जुन प्रकारले त्यो भक्ति गर्छ त्यस्तो भक्ति गरिरहेमा त त्यस वृक्षमा जति पात छन् उति नै वर्ष पछि हुनेछ। भनाइ सुन्दाबित्तिकै भक्तको भाव क्षणमात्रमा बदलियो। भक्तले भने- महाराज! के म-जस्ता पतितलाई, म-जस्ता अधमलाई पनि भगवान्को दर्शन हुनेछ? नारदजीले भने- अरे भाइ! कहिले हुनेछ थाहा छ! भक्तले भने- महाराज! जहिलेसुकै होला, यो त भनेनन् कि दर्शनै हुने छैन। दर्शन त हुनेछ, चाहे जहिले होस्। म-जस्ता मान्छेलाई पनि दर्शन हुनेछन्। यति भनेर भक्त प्रेममा मुग्ध भए। प्रेममा मुग्ध भएर, विह्वल भएर नाच्न लागे। नारदजी पनि नाच्न लागे, भक्तको प्रेमभावलाई देखेर भगवान् आए। नारद बोले- भगवन्! तपाईंले त मसित यो भन्नुभएको थियो कि त्यस वृक्षमा जति पातहरू

छन् उति नै वर्षपछि दर्शन हुनेछ। किन्तु तपाईं त तुरून्त नै आउनुभयो। भगवान्ले भने- नारद! मैले जे भनेको थिएँ त्यसमा यौटा शर्त थियो, के त्यो तिमीलाई सम्झना छ? नारद बोले- के? भगवान्ले भने- यो भक्तले जुन प्रकारले भक्ति गर्छ त्यस प्रकारको भक्ति गरिरहेमा मात्र त्यति वर्षको भाका थियो तर जब उनको भाव नै बदलियो त म के गरूँ, म पनि बदलिएँ। यिनको भाव बदलियो त मेरो पनि भाव बदलियो। तिमी पनि त बदलियौ, यिनका साथमा नाच्न-गाउन लाग्यौ। तिम्रो पनि भाव बदलियो, मेरो पनि भाव बदलियो। भाका सबै खत्तम भयो।

अब चौथो कुरा छ, जस्तै तपाईंले भन्नुभयो कि जसमा भगवान्प्रति कुनै भाव छैन तैपनि के उसका लागि समेत भगवान् आउनुहुन्छ? हो, उसका लागि पनि भगवान् आउनुहुन्छ, यसको उदाहरणमा अजामिल छन्। अजामिलको भगवान्मा कुनै पनि भाव थिएन, उनले आफ्नो पुत्रलाई नारायणको नामले पुकारे। हेर्‍यौं भने अजामिलले आफ्नो पुत्रलाई बोलाएका हुन् न कि भगवान्लाई, भगवान् त अन्तर्यामी छन् यस कुरालाई उनी पनि जान्दछन् नै कि पुत्रलाई बोलाएको हो न कि मलाई, किन्तु भगवान्को नाम 'नारायण' उच्चारण गर्नाले भगवान्का दूत आए। यदि अजामिलको नामोच्चारणमा भगवान्को भाव हुन्थ्यो भने भगवान् स्वयं आउँथे, दूत आउँथेनन्। अजामिलमा भगवान्को भाव थिएन, भावको कमी थियो, यसकारण दूत आए। विष्णुदूतहरूले यमदूतलाई धपाए। धपाएपछि अजामिलको हृदयमा भगवान्को भक्तिको स्थापना भयो। हरिद्वारमा गएर साधना गरे र अन्तिममा उनलाई भगवान्को प्राप्ति भयो। अजामिललाई भगवान्को प्राप्तिमा यति विलम्ब यसकारण भयो कि उनले नारायण नामको उच्चारण पुत्रको भावले गरेथे, भगवान्को भाव

थिएन। भगवान्को भाव हुन्थ्यो भने त उनी तुरून्त आएका हुन्थे।
अब हामीहरूले केही सूत्रमा विचार गर्नु छ। हामीहरू बहुतै साधारण मान्छे हौं। हाम्रा हृदयमा यस्तो भाव बन्नुपर्‍यो कि भाव बदल्नाले नै भगवान् आउँछन् चाहे हामी पापी नै पनि किन नहोऔं तैपनि आउँछन्। भगवान् यति दयालु र यति प्रेमी छन् उनी नआउनुको कारण केवल यत्ति नै हो कि हामी उनीलाई हृदयबाटै दयालु र प्रेमी मान्दैनौं। हामी आफ्नो पापका कारण नै उनलाई दयालु र प्रेमी मान्दैनौं। यो मानिलिनोस् कि हामी चाहे जस्तासुकै पापी होऔं, भगवान् त प्रकट हुन सक्नुहुन्छ नै तब न गीताको यो श्लोक घटित हुनेछ–

**अपि चेत्सुदुराचारो भजते मामनन्यभाक्।**

(९। ३०)

कोही चाहे कस्तै पनि पापी होस् मलाई अनन्य भावले भजेमा शीघ्र नै धर्मात्मा हुन्छ। '**क्षिप्रं भवति धर्मात्मा**' यो होइन कि यति ठूलो पापी छ त्यसकारण धर्मात्मा बन्नका लागि यति धेरै समय लाग्नेछ, यस्तो कुरा छैन। चाहे जति पनि पापी होस्, तुरून्त नै धर्मात्मा बन्नेछ, अर्थात् परमात्माको प्राप्ति हुनेछ, परम शान्तिको प्राप्ति हुनेछ। भगवान्का दयातिर हेरेर मुग्ध भइरहौं कि भगवान् यति दयालु हुनुहुन्छ। भगवान् आउनुमा जुन विलम्ब भइरहेछ त्यसको खास कारण यो हो कि भगवान्को दयालुतालाई हामी बुझ्दैनौं, केवल मुखले भन्छौं। भगवान् आउनुमा विलम्बको कारण यो होइन कि हाम्रा पापका कारण भगवान् आउनमा विलम्ब गरिरहेका छन्। जब घोर अन्धकारमा बिजुलीको प्रकाश हुन्छ भने बिजुली प्रकट हुनका लागि अँध्यारोसित डराउँदैन कि यति भारी अँध्यारो छ, म कसरी प्रकट होऊँ। प्रकाश हुनका लागि बिजुलीको स्विच अँठ्याउनु मात्र ढिलो हो। स्विच दबायो

कि बिजुली प्रकट हुन्छ। गुफामा चाहे हजारौं वर्षदेखिको अन्धकार होस्, किन्तु बिजुली प्रकट हुँदाबित्तिकै क्षणमात्रमा अन्धकार भाग्छ र त्यहाँ प्रकाश हुन्छ, यसरी नै हृदयमा स्विच लगाउनुको आवश्यकता हुन्छ, भगवान्को करेण्ट त सबै ठाउँमा लागेको छ नै। भगवान् सबै ठाउँमा व्यापक छन्। जसरी तारमा बिजुली व्याप्त रहन्छ, तारमा करेण्ट सबै ठाउँमा व्यापक छ उसरी नै भगवान् सबै ठाउँमा व्यापक छन्। उनको करेण्ट सबै ठाउँमा फैलिएको छ तर स्विच त अँठ्याउनु नै पर्नेछ। आफ्नो हृदयमा भगवान् जस्ता छन् उनलाई त्यस्तै मानिलिनु नै वास्तवमा स्विच अँठ्याउनु हो। स्विच अँठ्याउनेवालाको हृदयमा यो निश्चय होस् कि स्विच अँठ्याउँदाबित्तिकै उज्यालो हुनेछ, तब न त्यो स्विचलाई अँठ्याउँछौं, होइन भने स्विच किन अँठ्याऔंला। उसको पूरै विश्वास छ कि अँठ्याउँदाबित्तिकै उज्यालो हुनेछ। पूरै विश्वाससित भगवान्लाई दयालु र प्रेमी मान्नाले नै तुरून्त भगवान् प्रकट हुनेछन्। भगवान् परम प्रेमी र परम दयालु छन् यस कुराको हाम्रा हृदयमा पूरा विश्वास हुनुपर्छ। विश्वास हुनाले जानकारी दृढ हुन्छ। आरम्भमा जानकारी हुन्छ, त्यसपछि विश्वास हुन्छ, त्यसपछि पूर्ण जानकारी हुन्छ। भगवान् भन्नुहुन्छ– मलाई सब प्राणीहरूको सुहृद् जानेमा मनुष्यलाई परम शान्ति प्राप्त हुन्छ। **'सुहृदं सर्वभूतानां ज्ञात्वा मां शान्तिमृच्छति।'**

यहाँ यो कुरा भनेनन् कि साधन गर्नाले नै परम शान्ति मिल्छ बरू उनी त भन्छन् कि मनुष्य जब मलाई सबैको सुहृद् जान्दछ तब जान्दाबित्तिकै शान्ति मिल्दछ। सुहृद्को अर्थ हो, बिना कारण नै प्रेम गर्नेवाला, बिना कारण नै दया गर्नेवाला। भगवान् कारण हेर्नुहुन्न, यदि पात्रता हेर्ने हो भने त कारण हेरेको भैहाल्यो नि। हामीलाई पात्र मानेर प्रेम र दया गरे त कारणतिर दृष्टि गइहल्यो

नि। यसका बारेमा केही भाव भरतजी भन्नुहुन्छ–

**जन अवगुन प्रभु मान न काऊ। दीन बंधु अति मृदुल सुभाऊ॥**

(रा० च० मा० ७। १। ३)

भगवान् आफ्ना दासहरूका दोषतिर हेर्दै हेर्नुहुन्न, किनकि यदि वहाँले मेरा दोषहरूतिर हेरेमा त मलाई दर्शन नै हुनु असम्भव छ। भगवान् दीनहरूका बन्धु हुन् र म दीन हूँ। भगवान्को स्वभाव बडो नै कोमल छ। उनी आफ्ना प्यारा भक्तका कष्टलाई सहन गर्न सक्दैनन् यस्तो उनको कोमल स्वभाव छ। मेरो नीचता, मेरो व्यवहारतिर भगवान् कहिल्यै हेर्नुहुन्न। यदि उहाँले आफ्ना विरदतिर हेर्नुभयो भने फेरि उहाँ आउनुमा विलम्ब नहुनुपर्छ नै। भरतजी भन्नुहुन्छ–

**मोरे जियँ भरोस दृढ़ सोई। मिलिहहिं राम सगुन सुभ होई॥**

मेरो मनमा दृढ विश्वास छ कि प्रभु आफन्तजनका अवगुणतिर कहिल्यै हेर्नुहुन्न, किनकि उहाँ दीनबन्धु हुनुहुन्छ तथा उहाँको स्वभाव अत्यन्त मृदु छ।

प्रभुको स्वभावलाई सम्झना गरीगरी मेरो मनमा निश्चय छ– निश्चयमात्र हैन, दृढ विश्वास छ कि भगवान् भेटिनुहुनेछ, यसमा कुनै शङ्काको कुरै छैन र साथमा शकुन पनि शुभ भइरहेका छन्। यहाँनेर पहिला भनिएको छ कि मेरो दाहिने भुजा र मेरा दाहिने नेत्र फर्फराइरहेछन् फर्फराइले मित्र या भाइसित मिलन हुन्छ, यसकारणले पनि राम आउनेछन् नै। मिलन नभएर भाका टरेमा यदि प्राण रहन्छन् भने बुझ्नुपर्छ कि संसारमा म समान कोही पापी छैन–

**बीतें अवधि रहहिं जौं प्राना। अधम कवन जग मोहि समाना॥**

भाव यो हो कि मलाई दृढ विश्वास छ कि भगवान् भाका पूरा हुने बेलासम्ममा अवश्य नै भेटिनुहुनेछ। यदि भाका बित्यो

भने फेरि मेरो प्राण रहने छैन। यदि सच्चा प्रेम छ भने त्यही समयमा मेरा प्राण जानेछन्। भाका अहिलेसम्म मेरो प्राणको आधार बनेको छ। भाका समाप्त भयो भने आधार रहने छैन। जब आधार छैन भने प्राण छैन। निश्चय नै बुझ्नुपर्छ कि मेरो प्राण रहने छैन। यदि प्राण रहिहाल्यो भने म समान कोही पापी छैन। मेरो प्राण यदि रह्यो भने म अग्निमा प्रवेश गर्नेछु! अग्निमा प्रवेश गरेर म प्राणत्याग गरिदिनेछु। फेरि सोच्छन् कि यदि अग्निमा प्रवेश गरेर म प्राणत्याग गर्छु भने यो त आत्महत्या हुनेछ, ममा प्रेम भएको कहाँ हुनेछ? यस्तो आत्महत्या त कोही पनि गर्न सक्छ, आत्महत्या त लोक-लज्जाका कारण कोही पनि गर्न सक्छन्। प्रेम त त्यसको नाम हो जब भाका बित्छ त प्राण आफैं नै जाओस्। यस्तो चिन्तन हुँदा बित्तिकै भरतको मन रामको विरह-सागरमा डुब्न लाग्यो। त्यतिञ्जेलसम्ममा ब्राह्मणको रूप धारण गरेर हनुमानजी त्यहाँ आइपुगे, जस्तै डुब्न लागेका लागि डुङ्गा आउँछ-

**राम बिरह सागर महँ भरत मगन मन होत।**
**बिप्र रूप धरि पवन सुत आइ गयउ जनु पोत॥**

उनी आएर तिनलाई बँचाए र भने कि भरत! जुन भगवान्का नामको तिमी रटन लगाइरहेका छौ, सीता र लक्ष्मणसहित ती भगवान् श्रीराम आइरहेछन्। भरतको प्राण बँच्यो। जसरी माछाको प्राण गइरहेको बेलामा कसैले उसलाई उठाएर जलमा हालिदेओस् त उसका प्राण बँच्छन्।

भरतजीका लागि हनुमानजी आए- भगवान्का दूत आए, भगवान् किन आएनन्? हनुमानले खबर दिए कि भगवान् आउनुभयो। यो एक प्रकारले ठीकै हो कि हनुमानजी आए त भगवान् नै आउनुभयो, तर्कको कुनै कुरा नै हैन। किन्तु माथिको

दृष्टान्तअनुसार त भगवान् नै आउनुपर्थ्यो। क्षणभरमा भगवान् आउन पनि सक्थे। भगवान् आउनुमा कुनै कठिनाइ त थिएन। जसरी हनुमानजी आए उसरी भगवान् नै पनि आउन सक्थे, भगवान् त सामर्थ्यवान् थिए। सबैथोक गर्न सक्थे। भगवान् आफैं किन आएनन्? यसको कारण यस्तो प्रतीत हुन्छ- भरतले भनेका छन् कि मेरो हृदयमा दृ? विश्वास छ र शकुन पनि मलाई राम्रा भइरहेका छन्। शकुनलाई यहाँ बीचमा किन ल्याइयो? जब शकुन राम्रा भइरहेका छन् त शकुनकै प्रतीक्षा गर्नुपर्छ। शकुनका कुरा नगरी 'भगवान् भेटिनुहुनेछ' केवल यत्ति नै शब्द भन्नुपर्थ्यो। 'यदि' किन भनियो, शर्तात्मक 'यदि' शब्दको के आवश्यकता थियो? यदि आएनन् भने मेरो प्राण रहने छैन। किन नआऊन्? भरतले यत्ति नै भन्नुपर्थ्यो कि मलाई दृढ़ विश्वास छ, भगवान् आउनेछन्। यस्तो भाव भएको भए भगवान् नै स्वयं आउँथे र भगवान्को मनमा पनि यो भाव जन्मिन्थेन कि हनुमान! तिमी गएर पत्ता लगाऊ कि भरतमा मेरा लागि कस्ता भाव छन्। उनी मलाई चाहन्छन् नि? भगवान् क्षणमात्रमा प्रकट हुन सक्छन् यसैले हामीले यो भाव लिनुपर्छ कि भगवान् आउनुमा जुन विलम्ब भइरहेछ केवल यसकारण कि हामी तिनलाई आफ्नो सुहृद् जान्दैनौं। भगवान् भन्नुहुन्छ कि सुहृद् जान्दाबित्तिकै भक्तलाई परम शान्ति मिल्दछ। पहिले नै भनिएको छ कि सुहृद् अर्थात् बिना कारण नै प्रेम गर्नेवाला र बिना नै कारण दया गर्नेवाला। भगवान् सुहृद् हुन् र बिना नै कारण दया तथा प्रेम गर्नेवाला हुन्। यदि हामी कारण खोज्छौं भने खोज्दै गरौं। सम्पूर्ण भूतहरूका सुहृद् हुनाका कारण भगवान् बिना कारण दया-प्रेम गर्नेवाला हुन्। यदि हामीले भगवान्को प्रभाव मानिलियौं भने हामीलाई आफ्नो न्यूनता हेर्नुको आवश्यकता नै के? के आफूमा जुन दोष

छन् तिनको निवारण गरेर नै भगवान्लाई तिमी बोलाउन चाहन्छौ? जस्तै स्यानो सालभरिको बच्चा छ- त्यो दिसा-पिशाबमा लथपथ छ, बडो अपवित्र छ, आमाका लागि रून्छ, अरू मान्छेले लोलोपोतो पार्दा पनि कसैले भनेको ऊ मान्दैन। आमाका लागि रून्छ। आमा दौडेर आउँछे। बच्चा असाद्धे व्याकुल छ। आमा माया देखाउँछिन् मीठा शब्द बाबु, छोरा, राजा आदि बोल्छिन् तर ऊ कुनै पनि प्रकारले रुन रोकिन्न। आमा चेष्टा गर्छे, उसलाई पखालेर, सफा गरेर चुप गराउने किन्तु ऊ व्याकुल छ माताको काखका लागि। व्याकुलता देखेर आमाले एकपटक उसलाई आश्वासन दिनका लागि आफ्नो हृदयसित लगाउँछे फेरि उसको दिसा-पिशाब सफा गर्छे, पहिला उसलाई उठाउँछे फेरि उसलाई तथा आफूलाई पनि शुद्ध गर्छे। यसरी नै बच्चा झैं हामीहरू पनि भगवान्का लागि आतुर होऔं। 'भगवान् दयाका सागर छन्।' यो भन्नु पनि हामीहरूको कमजोरी हो, किनकि सागरको त सीमा हुन्छ, भगवान्को दयाको त सीमा नै छैन। उनमा अनन्त दया छ, अपरिमित दया छ, अपार दया छ, असीम दया छ। सबै दुनियाँको दयालाई यदि एकमुष्ट गरेर भगवान्लाई दयाको सागर समान मान्ने हो भने सबै दुनियाँबाट जम्मा गरिएको दया त्यो दयासागरका सापेक्षमा एक थोपा बराबर पनि हुने छैन, भगवान् त्यति दयालु हुनुहुन्छ। भगवान्को दया बुझ्दाबित्तिकै भगवान्को दर्शनमा विलम्ब हुनुको कुनै कारण रहन्न। भगवान् यति प्रेमी हुनुहुन्छ कि उहाँ आफूलाई पनि बेचिदिनुहुन्छ। प्रेममा भगवान् स्वयं बेचिन्छन्। भगवान्का प्रेमी भक्तहरूले भगवान्लाई उभ्याएर निलाम गरिदिए पनि तिनका लागि उनी निलाम समेत हुन्छन्। यस्ता प्रेमीको आगमनमा विलम्ब हुनुमा भगवान्को दोष त छँदै छैन, किन्तु मेरा दोषका

कारण भगवान् आउँदैनन् यो मान्नु पनि भगवान्माथि नै दोष लगाउनु हो। हामीमध्ये कतिले भगवान्माथि दोष नलगाएर आफैंमाथि नै दोष कायम गर्छौं कि हाम्रा दोषका कारण भगवान् आउँदैनन् जबकि यथार्थमा भगवान् त हाम्रा दोषहरू हेर्दै हेर्दैनन्। **'जन अवगुन प्रभु मान न काऊ।'** हाम्रो यो हेराइ, आफ्ना दोषहरूलाई हेरेर भगवान् आउनुमा विलम्ब मान्नु यो पनि भगवान्माथि नै दोष लगाउनु हो। हामी यस कुरालाई बुझौं कि भगवान् यति दयालु छन् यस्ता प्रेमी छन् कि हाम्रा दोषहरूलाई हेर्दैनन् भगवान् तुरून्त प्रकट हुन सक्छन्। मलाई सब भूतहरूको सुहृद् जानेर नै मनुष्यलाई शान्ति प्राप्त हुन्छ। **'सुहृदं सर्वभूतानां ज्ञात्वा मां शान्तिमृच्छति'** त्यो जान्नु दुई प्रकारका हुन्छन्- भगवान् बिना कारण नै दया गर्नेवाला र बिना कारण नै प्रेम गर्नेवाला हुन्। यसप्रकारको साधारण ज्ञान त सुहृदताको पूर्वज्ञान हो। यस ज्ञानद्वारा भगवान्लाई सुहृद् मान्दछ। सुहृद्को मान्यताद्वारा फेरि जुन ज्ञान हुन्छ त्यो भगवान्को विषयमा अन्तिम क्षणको ज्ञान हो।

भरतजी भन्नुहुन्छ- **'जन अवगुन प्रभु मान न काऊ।'** यस कुरालाई हामीहरू पढ़ौं र सुनौं, सुनेर त्यसलाई बुझौं। हामी बुझ्छौं कि हाम्रा दोषहरूलाई देखेर भगवान् विलम्ब गर्छन् त्यसो हो भने-**'जन अवगुन प्रभु मान न काऊ। दीन बंधु अति मृदुल सुभाऊ॥'**

यो चौपाई चरितार्थ कहाँ भयो, कहाँ मानियो। यदि यस चौपाईलाई हामीहरू मानौं त यो भन्नुको सम्भावना नै हुन्न कि हाम्रा दोषहरूलाई देखेर भगवान् विलम्ब गर्नुहुनेछ। यस चौपाईको अर्थको ज्ञानले मान्यता बन्छ कि वास्तवमा भगवान् यस्तै नै छन् यस्तो हामीहरूले बुझौं। यसमा श्रद्धा-विश्वास गरौं। यस

मान्यतापछि हामीमा भगवान्‌लाई सुहृद् जान्नुको ज्ञान होस् त भगवान्‌ले क्षणमात्र पनि ढिलो गर्नुहुने छैन। यस्तो बुझेर, विश्वास गरेर यस कुरालाई आफ्नो हृदयमा दृढ गरिलिनू। यसमा श्रद्धा-विश्वास गरौं र फेरि मान्दाबित्तिकै जुन ज्ञान तपाईंलाई हुन्छ त्यस ज्ञानको फल हुनेछ भगवान्‌को तत्काल प्राप्ति।

भगवान्‌को भाव तथा उनको रहस्य एवं प्रभाव र भगवान्‌को सुहृदता, दयालुता तथा क्षणभरमा भगवान् पाइने यी सबै कुराहरू बताइयो।

नारायण! नारायण! नारायण!

॥ श्रीहरिः ॥

# महापुरुषहरूको रहस्य के हो?

महापुरुषहरूको जुन भाव हुन्छ त्यो बुझाइमा आओस् र त्यहीअनुसार आफ्नो भाव बनोस् त कल्याण हुन्थ्यो, जसरी भगवान्को भाव बुझ्नाले कल्याण हुन्छ। किनकि भगवान् स्वयं भन्छन् कि महापुरुष मेरा नै स्वरूप हुन् मेरा आत्मा नै हुन्। भगवान् त हामीहरूका लागि अव्यक्त छन् साकार-स्वरूपले पनि अव्यक्त छन् र निराकार-स्वरूपले समेत अव्यक्त छन्। गीतामा भगवान् श्रीकृष्णले भनेका छन् कि भगवान्को स्वरूप सूक्ष्म हुनाका कारणले अविज्ञेय छ- त्यो जान्नमा आउँदैन। "**सूक्ष्मत्वात्तदविज्ञेयम्**" (१३। १५) मनुष्य सूक्ष्मबुद्धिद्वारा भगवान्को अनुभव गर्छन् या यस्ता सूक्ष्मदर्शी ज्ञानी जसको बुद्धि शुद्ध छ, स्थिर छ र पवित्र छ तिनले भगवान्को साक्षात्कार गर्छन् या जसमा श्रद्धा छ, विश्वास छ, प्रेम छ तिनले भगवान्को तत्त्व बुझ्छन्। सूक्ष्म भएका कारण भगवान्को सगुण निराकारस्वरूप- जुन सबै ठाउँमा प्रत्यक्ष व्यापक छ त्यसलाई समेत आफ्नो श्रद्धा र बुझाइको कमीका कारण प्रत्यक्ष झैं देखिइरहेको छैन र साकाररूपले त प्रकट नै छैनन् किन्तु महात्मा पुरुषहरूको शरीर साकाररूपले प्रकट छ- यो त हामीलाई सुविधा प्राप्त छ। महात्माहरूको वास्तविक स्वरूप हाम्रा लागि अविज्ञेय छ, भगवान् पनि अविज्ञेय छन्। अविज्ञेयतामा त भगवान् र महात्मा- दुवै समान छन्। महात्माको त्यो अविज्ञेय यथार्थ स्वरूपलाई हामीले जान्न सक्यौं भने सँगसँगै परमात्मालाई पनि जान्नेछौं।

महापुरुषहरूका विषयमा भनिन्छ कि धेरै उच्च कोटिका महापुरुष मान–बढाइँ, पूजा–सत्कार, प्रतिष्ठा इत्यादिलाई व्यावहारिक रूपमा त विरोध गर्छन् नै र आफ्नो अन्तरहृदयबाट समेत विरोध गर्छन्। किनकि बाहिरका जति पनि क्रियाहरू छन् तिनलाई एक दम्भी मनुष्यले पनि गर्न सक्छ, जसले गर्दा संसारमा अझै दम्भ फैलिन्छ। मानौं जस्तै कुनै सज्जन छन् र तिनले कसैलाई महात्मा मानिलिए। उसलाई महात्मा मानेर भन्छन् कि तपाईं मलाई भिक्षा दिनुहोस्, हजुरको हातको भिक्षा खाने मेरो इच्छा छ र महात्माले पनि भान्छाबाट आफ्नो हातले उनलाई भिक्षा दिए। अब सज्जनले मान्छन् कि यी महात्मा हुन् र यिनका हातको भिक्षा हुनाले यसमा केही विशेषता आएको छ। विशेषता आएको मानेर प्राप्त भिक्षालाई खाए। खाएर यस्तो प्रचार गरे कि भाइ! अमुक महात्माका हातले जुन चीज छुन्छ त्यो पवित्र हुन्छ र त्यसमा महानता आउँछ। महानताको प्रचारले फेरि जो दम्भी, पाखण्डीहरू महात्माका रूप बनेर बसेका छन् तिनले संसारमा आफ्नो प्रसाद बाँड्नेछन् र भन्नेछन् कि हाम्रो प्रसाद लिअ– तिम्रो मुक्ति हुनेछ। वास्तविक प्रसादको रूप त त्यो हो जसको भोजन गर्नाले वास्तवमा कल्याण होओस्, किनकि गीतामा भनिएको छ–

**प्रसादे सर्वदुःखानां हानिरस्योपजायते।**
**प्रसन्नचेतसो ह्याशु बुद्धिः पर्यवतिष्ठते॥**

(२। ६५)

भगवत्प्रसाद ग्रहण गरेमा सम्पूर्ण दुःखहरूको अभाव हुन जान्छ, चित्त प्रसन्न हुन्छ र त्यस प्रसन्न चित्तवाला पुरुषको बुद्धि शीघ्र नै राम्रो प्रकारले एक मात्र परमात्मामा नै स्थिर हुन्छ।

भगवान् स्पष्ट घोषणा गरेर भन्छन् कि प्रसादले चित्तमा सात्त्विक प्रसन्नता हुन्छ, प्रसन्नताबाट सबै प्रकारका दुःखहरूको नाश हुन्छ र परमात्माको स्वरूपमा तुरून्त स्थिति हुन्छ। ढिलाइको काम हुन्न, शीघ्र नै हुन्छ। आफूमा श्रद्धागत कमीका कारण जब भनेजस्तो हुन्न त त्यसले झुटो महात्मा बनेर महात्माको महिमालाई खसालिरहन्छ। मान्छेहरूमा यो श्रद्धा पैदा गर्छ कि शास्त्रहरूमा त यो कुरा लेखिएको छ कि महात्मा जसलाई आफ्ना हातले प्रसाद दिनुहुन्छ उसलाई खाँदाबित्तिकै मुक्ति प्राप्त हुन्छ र परमात्माको ज्ञान हुन्छ। प्रसाद खानाले मात्र यस्तो थोरै न हुन्छ त्यो त यदि कोही खानेवालाको श्रद्धा छ भने हुन्छ। कल्याण नहुनुमा दोष त आफ्नो हुन्छ तर राखिदिन्छ उनीमाथि। यसरी संसारमा दम्भाचारको प्रचार हुन्छ। यसकारण उच्च कोटिका महापुरुष यस दम्भाचारको सम्भावना दिन्नन्। दम्भाचारलाई मेटाउनका लागि बाहिरको पूजा-प्रतिष्ठालाई व्यक्तिगत आफूमाथि सहन गर्दैनन्। तर यदि कुनै महात्मा बुझ्छ कि मेरो चरणको जल, मेरो चरणधूलि या हातले दिएको प्रसाद, शरीरको पूजा, उच्छिष्टको भक्षण गर्नाले भोक्ताको मुक्ति हुन्छ- यस्तो प्रचार गर्छ अथवा आफैं भगवान् बनेर- आफ्ना चरणहरूमा तुलसी, पुष्प चढाउनाले चढ़ाउनेवालाको मुक्ति हुन्छ, म यसैको योग्य छु- यसरी आफूमा योग्यता स्थापन गरेर र व्यक्तिगत महात्मा बनेर जो पूजा ग्रहण गर्छ भने त्यो भगवान्लाई सहन हुन्न। यस्तो काम तपाईं गुरु बनेर गर्नुहोस्, पिता बनेर गर्नुहोस्, भगवान्लाई कुनै आपत्ति छैन, तपाईं कुनै स्त्रीको पति बनेर गर्नुहोस्- कुनै आपत्तिको कुरा छैन। किन्तु महात्मा बनेर, आफूलाई ईश्वरका स्थानमा स्थापन गरेर त्यस्तो गर्नु- पूर्णतया न्यायविरुद्ध हो, अन्याययुक्त हो।

एउटा ख्याल अर्को पनि गर्नुपर्छ, यस्ता कुराको विरोध केवल वचनले मात्र हैन, क्रियाले पनि होस्। केवल क्रियाले मात्रै हैन, आफ्नो हृदयको भावले पनि होस्। हाम्रो हृदयको भाव यो होओस् कि कसैले हामीसित अत्याचार गर्न नपाओस् त कसैले पनि गर्न सक्ने छैनन्। यदि हामीसित कसैले त्यस्तो व्यवहार गर्छ भने हामीभित्र त्यो भाव सशक्त छैन। जहाँ भाव सशक्त हुन्न त्यहाँ दम्भाचारको सम्भावना छ। होइन भने कसैले गर्न सक्दैन। यदि गर्छ भने फेरि तिमी महात्मा के भयौ, तिम्रो पनि त केही प्रभाव हुनुपर्छ। होइन भने तिमी पनि दम्भ गर्छौ। माथिबाट त 'न', 'न' गर्छौं तर भित्रबाट स्वीकार गर्छौं, यस्तैलाई नै त दम्भ भनिन्छ। उच्च कोटिका पुरुष यस विषयमा भित्रबाट पनि मनसा–वाचा–कर्मणा–सबै प्रकारले त्यसको परिणाम नराम्रो मानेर विरोध गर्छन्। यसमा कुनै हित छैन।

शास्त्रहरूमा लेखिएको छ कि महापुरुषहरूको दर्शन, भाषण, स्पर्श, वार्तालाप, चिन्तन आदिको बडो प्रभाव हुन्छ– यो ठीक हो। शास्त्रहरूमा त यहाँसम्म बताइन्छ कि महात्माको दृष्टि जहाँसम्म पुग्छ, त्यहाँसम्म पवित्रता हुन्छ। उच्च कोटिका महात्मा पुरुषको कुनै कुरासित सम्बन्ध जोडिन्छ, कुनै पनि कुरासित तिनको शरीरको स्पर्श हुन्छ भने तिनमा त्यस्तो विलक्षणता आउँछ– ती चीज पनि उस्तै नै हुन्छन् र यो पनि भनिन्छ कि यदि कसैलाई महात्माले सम्झना गरेमा, स्मरण गरेमा त जसलाई याद गर्छन् उसमाथि प्रभाव पर्छ– त्यसको आत्मा शुद्ध हुन्छ। महात्मालाई कसैले याद गरोस्, त्यसका विषयमा पनि यस्तै नै कुरा शास्त्रहरूमा आउँछ। वास्तवमा यस्ता महात्मा को हुन्छन्?

भगवान्‌द्वारा पठाइएका जो महापुरुष संसारमा संसारको उद्धारका लागि आउँछन् तिनमा यस्तो विलक्षणता हुने गर्छ। उनमा नै हुने गर्छ या साधन गर्दागर्दै जो यहाँ महात्मा बन्छन् तिनमा पनि हुन सक्छ? हो, हुन सक्छ किन्तु त्यसको हामी प्रचार गर्दैनौं किनकि धेरै मान्छे यही कुराको सिकोमा झुटो महात्मा बन्नका लागि तैयार छन्।

यस्ता जो सच्चा महापुरुष हुन्छन् तिनीहरूसँग भगवान् पनि विलक्षण व्यवहार गर्छन् र जति विलक्षणता भगवान्‌लाई ल्याउनु छ ल्याउँछन्। विलक्षण उच्च कोटिका महात्मा पुरुषमा पनि भगवान् आफ्नो प्रभाव, आफ्नो अधिकार दिएर आफ्नै जस्तो शक्ति दिएर आफ्नो लोककल्याणकारी काम गराउन सक्छन्। किनकि भगवान्‌लाई आफ्नो परमधामबाट यहाँ कसैलाई पठाउन परोस् र त्यही योग्यताको कोही यहाँ छँदै छ भने यो थोरै न हुन्छ कि वहाँबाट पठाउनुको शोख होस्। मानौं जस्तै राजस्थानमा कतै हाम्रो घर छ र त्यस घरलाई अधिकार दिएर मलाई बेचाउनु छ भने म ऐले जहाँ छु त्यहाँबाट आफ्नो एक मान्छेलाई अधिकारपत्र दिएर पठाऊँ यसको कुनै आवश्यकता थोरै न हुन्छ। मेरा कोही विश्वासी मान्छे यदि देशमा–राजस्थानमा छ भने उसैलाई नै अधिकारपत्र दिएर भनिदिन्छु कि त्यसको बिक्री गर्नू, मलाई मञ्जुर छ। यस्तै नै हुन्छ। यो हुन्न कि यहाँबाट कसैलाई पठाउनुको आवश्यकता होस्। किन्तु जब यस्तो विश्वासपात्र कोही छैन भने भगवान् वहाँबाट पनि कुनै अधिकारी पुरुषलाई पठाइदिन्छन् र उनैबाट काम चल्छ। यदि यसरी काम चल्दैन भने आफैं पनि आउनुहुन्छ यसमा कुनै मनाही छैन।

यस्ता जुन महापुरुष हुन्छन् तिनीहरू बाहिरी क्रियाको जुन निषेध गर्छन् कि भाइ! यस्तो-यस्तो गर्नुहुँदैन त यो उनको अन्तरको भाव हो। तिनीसँग यदि कसैले भित्रको भावले, मनले, बुद्धिले, श्रद्धा-प्रेमले त्यस्तो व्यवहार गर्छ जसको ती निषेध गर्छन् त त्यसमा सकामभाव, निष्कामभाव, दम्भ इत्यादि अलग-अलग भाव हुन सक्छन्।

यदि उपर्युक्त भावलाई त्यसले कसैका सामुन्ने प्रकाशित गर्छ भने या त त्यो दम्भी हो आफूलाई पुजाउन चाहन्छ या मान-बढाइँ-प्रतिष्ठाको इच्छुक छ कि संसारमा मेरो मान, मेरो बढाइँ, मेरो इज्जत- यी सबै होऊन् जसले गर्दा सबैले मलाई मानून्। यदि वास्तवमा उसमा यस्ता भाव छन् भने तिनको सुधार हुनुपर्छ। यदि सुधार हुन्न भने उसमा त्यो भाव छैन। प्रश्न हुन्छ कि यदि यसप्रकारको भाव छ भने त्यसलई प्रकट गर्नुको के कारण होला? यदि भनौं कि अरूहरूका अगाडि त प्रकट नगरोस्, किन्तु जुन महात्मामा श्रद्धा र विश्वास हुन्छ, उनीलाई जनाउनका लागि गरोस्। उनीलाई जनाउनका लागि गर्न चाहोस् त ऊ त यस कुरासित घृणा गर्छ, यसकारण ऊ त निषेध गर्नेछ र अर्को कुरा यो हो कि तिनको विषयमा तिम्रो यो भाव हो कि ती जे पनि गर्छन् ठीक गर्छन् ती सबैथोक जान्दछन् त यहाँनेर तिमीमा कमी आयो कि जो जान्दछन् उनीलाई तिमी फेरि किन जनाउँदछौ? जब ईश्वरलाई कुनै कुरा जनाउनुको आवश्यकता रहँदैन र तिमी महात्मा पुरुषलाई ईश्वरका तुल्य मान्दछौ भने उनीलाई पनि जनाउनुको आवश्यकता रहँदैन। ईश्वर जे पनि गर्छन् सबै कुरा हामीसित सोधेर गर्दैनन्- एक अज्ञात झैं रहेर गर्छन्। जस्तै

भगवान् आएर अवतार लिन्छन्। भगवान् श्रीरामचन्द्रजीले अवतार लिए र वानरहरूको सेनालाई पठाए। हनुमानजीका हातमा मुद्रिका दिए, भित्रबाट जान्दथे कि सीताको मिलाप हनुमानबाट हुनेछ, होइन भने अंगदलाई दिन्थे, जाम्बवानलाई दिन्थे या अरू पनि त धेरै सेवक थिए तिनीहरूलाई दिन्थे, परन्तु उनी भित्रैबाट जान्दछन् जसबाट कार्य हुनु छ, किन्तु बाहिरबाट यस्तो गर्छन् कि मानौं सबैले गरून् भन्ने भाव छ। समुद्रमा आएर बाटो माँग्छन् कि हामीलाई मार्ग देऊ। ईश्वर भएर पनि समुद्रको चापलुसी गर्छन्। अत्यन्त सामर्थ्यवान् हुँदाहुँदै पनि, जान्दाजान्दै पनि मर्यादाअनुसार लीला गर्छन् यसरी नै महात्मा पुरुष मर्यादा राख्दै लीला गर्छन् तिनको पनि त यो एक प्रकारले लीला नै हो। भगवान् अर्जुनसित भन्नुहुन्छ–

**कर्मणैव हि संसिद्धिमास्थिता जनकादयः।**
**लोकसङ्ग्रहमेवापि सम्पश्यन् कर्तुमर्हसि॥**

(गीता ३। २०)

अर्जुन! जनक आदि ज्ञानीजनले पनि निष्कामकर्मद्वारा नै परमसिद्धि प्राप्त गरे। यसकारण तिमीलाई पनि शास्त्रको मर्यादाअनुसार कर्महरूको आचरण गर्नुपर्छ। केका लागि? लोकसंग्रहका लागि, लोकमर्यादाका लागि। जस्तै भगवान् लोकसंग्रहका लागि गरिरहेका छन्। भगवान् भन्नुहुन्छ कि मेरा लागि तीनै लोकहरूमा कुनै पनि कर्तव्य छैन, तैपनि म कर्ममा नै व्यवहार गर्छु। मलाई केही चीज प्राप्त गर्नु छैन, किनकि म आप्तकाम हूँ– सबैथोक मलाई प्राप्त छ। यद्यपि मेरा लागि कुनै कर्तव्य छैन, फेरि पनि म शास्त्रविधिअनुसार, मर्यादाअनुसार कर्म गर्छु,

सावधान भई कर्म गर्छु। यसरी नै तिमीले पनि सावधानीसित कर्म गर्नुपर्छ। लोकसंग्रह के हो? जुन मान्छे शास्त्र-विपरीत मार्गमा गइरहेछन् तिनलाई जब तिमीमा शास्त्रविधि अनुकूल कर्म भेटिने छैन त तिनीहरूलाई शास्त्रविपरीत कर्म गर्नमा प्रोत्साहन मिल्नेछ तर जब तिमी सत्-मार्गमा जानेछौ त सत्-मार्गका जिज्ञासुलाई सत्-मार्गमा चल्न मद्दत मिल्नेछ, यो नै लोकसंग्रह हो। यदि तिमी यो बुझ्छौ कि भगवान् मेरा प्रेमी, मेरा मालिक हुन् मलाई भगवान्को प्राप्ति भयो, यस्तो स्थितिमा मद्वारा शास्त्र अनुकूल कर्म होऊन् त के र नहोऊन् त के। थोरै बेरका लागि मानिलिऊँ कि तिम्रा लागि कुनै पनि कर्तव्य छैनन् तैपनि तिमीले आफ्नो प्रभावलाई जानेर लोकसंग्रहका लागि कर्म गर्नुपर्छ।

थोरै बेरका लागि मानिलिऊँ कि म मान्छेहरूसित भन्नेछु कि यस्तो गर्नुपर्छ, यस्तो गर्नुपर्छ, यसरी चल्नुपर्छ। किन्तु मसित जो रहन्छन् जो मसित प्रेम गर्छन् मेरा जो मित्र हुन् जति पनि मेरा प्रेमी छन् तिनीहरूसित आम मान्छे जस्तो व्यवहारको आशा गर्छन् त्यसका विपरीत कमी देख्नेछन्। कमी देखिंदा तिनीहरूमा त दोष आउनेछ नै तर प्रेरक ममाथि पनि दोष आउनेछ।

जो शास्त्र विपरीत मार्गमा चल्नेवाला छन् जुन मनुष्य भगवान्का भक्तिले रहित छन् तिनीहरूलाई त्यसले एक प्रकारबाट प्रोत्साहन दिइरहेछ, जसलाई जस्तो बन्नुपर्थ्यो त्यस्तो बन्दैन, वास्तवमा उसमा जुन कमी छ त्यस कमीको प्रभाव अरूहरूमाथि पर्नेछ। बरू उसमा जुन राम्रा कुरा छन् तिनको त्यति प्रभाव पर्ने छैन। म मान्छेहरूलाई भनूँला कि ब्लैकमार्केट गर्नुहुँदैन, सेलटैक्सको चोरी गर्नुहुँदैन, आयकरको चोरी गर्नुहुँदैन र व्यापार सच्चाइसित

गर्नुपर्छ। व्यापारमा झुट, कपट, चोरी, बेइमानीको व्यवहार हुनुहुँदैन। अर्कोतिर यदि हाम्रो दोकानको जुन व्यापार छ, जसमा हाम्रा दाजुभाइहरू व्यापार गर्छन् त्यो व्यापारमा ती सबै दोष तिनलाई देख्नका लागि मिल्यो भने, ती संसारी मान्छेहरूमा दोष छन् नै, मिलेपछि आफ्ना दोषहरूको रक्षाका लागि तिनै दोषको आड लिंदै भन्नेछन् कि हेर, तिनीहरूको काममा पनि त यस्ता-यस्ता दोष आउँछन् नै। देखिएका ती दोषको कलंक कामदारमाथि मात्र हैन, ममाथि पनि लगाउनेछन् कि हेर्नोस्, ती कामदारमाथि त हजुरको प्रभाव परेको छैन भने हामीमाथि कसरी पर्छ। यसकारण सत्संग सुनेर मान्छेको व्यवहारमा परिवर्तन हुनुपर्छ। मेरा जो निकटवर्ती मान्छे छन् तिनैमाथि पनि सत्संगको प्रभाव पर्दैन भने अरू मान्छेहरूसित कसरी आशा गर्नुहुनेछ कि हामी तिनको प्रभावबाट केही लायक बन्नेछौं। साथमा रहनेहरूले नै प्रयोगमा ल्याउँदैनन् तिनमा कुनै विशेष महत्त्व देख्नमा आउँदैन भने अरु मान्छेहरूलाई उन्मार्गमा प्रोत्साहन दिलाउँछन् र अरू सत्मार्गमा चल्ने मान्छेहरूलाई पनि रोक्छन्- रोकावट हाल्छन् यस्तो कुकाममा ती निकटवर्ती मान्छे नै हेतु बन्छन्। यसमा विचार यो गर्नुपर्छ कि बाहिरका यी जति दम्भ र पाखण्ड छन् तिनबाट अरूलाई बँचाउनका लागि राम्रा पुरुष लोकमर्यादाको त्याग गर्दैनन्। जस्तै भगवान् लोकमर्यादाको त्याग गर्दैनन्। यसकारण भगवान् भन्नुहुन्छ कि यद्यपि मेरा लागि कुनै पनि कर्तव्य छैन, फेरि पनि म लोकमर्यादाअनुसार चल्छु। म चल्छु त तिमी किन चल्दैनौं। सारांशमा यसरी बुझ्नुपर्छ कि जुन उच्च कोटिका पुरुष हुन्छन् जो महापुरुष हुन्छन् तिनका विषयमा

शास्त्रले जे कुरा बताइरहेछ ठीक बताइरहेछ। तिनको महिमा जति भनिन्छ त्यो भन्दा पनि अझै धेरै-धेरै छ। वाणीको सामर्थ्य छैन कि तिनको महिमा भन्न सकियोस्। जब भगवान् स्वयं भन्नुहुन्छ कि ज्ञानी-महात्मा पुरुष मेरो नै आत्मा, मेरो नै स्वरूप हो भने तिनको कति महिमा छ, तपाईं विचार गर्नुहोस्। वास्तवमा तिनको महिमा कोही भन्न सक्दैन। जब तिनको यस्तो महिमा छ र यस्तो महिमालाई हामीहरू सुन्छौं भने सुनेर बुझौं र बुझेर मानौं त हाम्रो दशा त्यही समयमा फेरिनेछ। हाम्रो जीवन त्यही समयमा बदलिनेछ। जस्तै भगवान्‌लाई सुहद् जानेमा उसको जीवन वास्तवमैं बदलिन्छ। भगवान्‌का दया र प्रेम तत्त्वलाई मानेर तिनमा श्रद्धा र विश्वास गर्छ भने भगवान्‌लाई तुरून्त जान्दछ र परम शान्ति प्राप्त हुन्छ। यसरी नै महापुरूषका झैं भक्तलाई पनि लाभ हुनुपर्छ, उसको अवस्था बदलिनुपर्छ। यदि उसको अवस्था बदलिन्न भने बुझ्नुपर्छ कि उसको बुझाइमा गल्ती छ। गल्ती भन्नाले श्रद्धाको कमी थाहा हुन्छ। जुन श्रद्धाको कमी छ त्यही नै त्यसको गल्ती हो। यही कारणले त्यसले महात्माको प्रभावलाई जान्दैन। जसले महात्माको प्रभावलाई, गुणहरूलाई, स्वभावलाई जान्दछ फेरि के त्यो एक क्षण पनि महात्माबाट अलग भएर रहन सक्छ? र के त्यो परमात्माप्राप्तिबाट कहिल्यै वञ्चित रहन सक्छ? के त्यो परमात्माबाट वञ्चित रहने भावलाई सहन गर्न सक्छ? त्यसको अवस्था नै एकदम बदलिन्छ।

यो कुरा बुझ्नुपर्छ कि जो उच्च कोटिका महात्मा पुरुष हुन्छन् तिनमा कुनै स्वार्थ रहँदैन। शास्त्रका विधि-निषेध उनीहरूमाथि लागू हुन्नन्। उनीभन्दा कुनै शास्त्र उच्च छैनन् जसले उनीलाई

आफ्नो मर्यादामा बाँधिदेओस्। उनैले शास्त्रको मर्यादा राख्छन् शास्त्रलाई आदर दिन्छन् कि शास्त्रमा यो कुरा लेखिएको छ, आफ्नो वचनभन्दा पनि धेरै शास्त्रलाई आदर दिन्छन्। वास्तवमा शास्त्र हो के? उनै महापुरुषका वचनहरूको नाम नै शास्त्र हो। गीता के हो? भगवान्‌को वचन। भगवान् के हुन्? महापुरुष। यस्ता जो महापुरुष छन् तिनका लागि कुनै पनि कर्तव्य छैन र उनी जे पनि गर्छन् त्यही वास्तवमा शास्त्र हो। यसकारण भगवान् स्वयं भन्नुहुन्छ–

**नैव तस्य कृतेनार्थो नाकृतेनेह कश्चन।**
**न चास्य सर्वभूतेषु कश्चिदर्थव्यपाश्रयः॥**

(गीता ३। १८)

तात्पर्य यो हो कि महापुरुषलाई केही पनि गर्नाको कुनै प्रयोजन हुन्न र नगर्नाको पनि कुनै प्रयोजन हुन्न, किनकि उनमा कुनै कर्ता नै छैन। बिना कर्ताको कुनै कर्म नै हुन्न, जस्तै घडीलाई न त केही गर्नाको प्रयोजन छ र न नगर्नाको। चापी लगाउनेवालाले जस्तो र जति चापी लगाइदेओस्। घडीलाई त कुनै प्रयोजन नै छैन। घडीलाई यो पनि प्रयोजन छैन कि म चल्नेछु या चल्ने छैन। यो आवश्यक छैन कि तपाईं शुरु गर्नुहोस्। जस्तो र जति तपाईं चापी लगाइदिनुहुनेछ, त्यसमा जति पावर हुनेछ, जति ताकत हुनेछ त्यो चल्नेछ। पावर समाप्त भएमा घडी आफैं बन्द हुनेछ। प्रारब्ध नै महात्मा पुरुषमा पावर हो, त्यो भगवान्‌द्वारा दिइएको पावर हो। भगवान्‌को जो विधान छ, त्यो भगवान्‌को पावर हो त्यसैले उनमा क्रिया हुन्छ, जुन घडी झैं हो। उसको आफ्नो केही पनि छैन। जति समयसम्म त्यसको शरीर भगवान्‌लाई कायम

राख्नु छ, राख्नुहुनेछ। त्यसबाट जे काम भगवान्‌लाई लिनुपर्नेछ, लिनुहुनेछ। उनलाई न गर्नुको प्रयोजन छ र न नगर्नुको प्रयोजन छ। उनमा त कुनै कर्ता नै छैन। घडीमा कुनै कर्ता छैन त्यो आफैं नै चल्दछ। घडीमा कोही हिंडाउने थोरै न छ। ऊ (महात्मा) पनि घडी-जस्तै हो। त्यसबाट कर्म हुन्छन् तर ऊ गर्दैन र जुन हुन्छन् त्यसलाई रोक्नुको उसलाई आवश्यक पनि छैन र न त्यसलाई गर्नुको खाँचो छ। भयो, हुन्छन् भइरहेका छन्। "**न चास्य सर्वभूतेषु कश्चिदर्थव्यपाश्रयः**" तात्पर्य यो कि त्यसमा आफ्नो स्वार्थको आश्रय, सबै भूतहरूमा किञ्चिन्मात्र पनि स्वार्थ रहेन जुन उसलाई गर्न परोस्। जे केही पनि भइरहेछ भगवान्‌को इच्छानुसार ठीक नै भइरहेछ। भन्नुको अभिप्राय यो हो कि उनमा आफ्नो व्यक्तिगत किञ्चिन्मात्र पनि स्वार्थ छैन। उनको शरीर अन्न पनि खान्छ, दूध पनि पिउँछ, ऋतुअनुसार वस्त्र पनि प्रयोगमा ल्याउँछ, त्यो सबै के हो? त्यो सबै शरीरको प्रारब्ध हो, त्यसको आफ्नो केही पनि छैन। अरू मान्छे पनि भन्न सक्छन् कि हाम्रो पनि जे-जति छ शरीरको प्रारब्ध नै हो। भन्छन् त के आपत्ति, निम्नानुसार घटाएर हेर्नुपर्छ। घटाएर कसरी हेरौं यसमा विचार गर्नुपर्छ। महापुरूषमा शास्त्रको मर्यादा मिल्नेछ, मर्यादापुरुषोत्तमका साँचो भक्तमा मर्यादापुरुषोत्तमको मर्यादा रहनेछ। महापुरूषलाई भगवान्‌को प्राप्ति भएको छ भने त्यस्तोमा पनि मर्यादामा रहनुपर्छ। जस्तै भगवान् अर्जुनलाई भन्छन् कि लोकसंग्रहका लागि तिमीले कर्म गर्नुपर्छ। मलाई केही पनि कर्तव्य छैन तब पनि म कर्म गर्छु। यो कुरा त्यसमा कायम रहनुपर्छ किनकि-

यद्यदाचरति श्रेष्ठस्तत्तदेवेतरो जनः।
स यत्प्रमाणम् कुरुते लोकस्तदनुवर्तते॥

(गीता ३। २१)

संसारमा श्रेष्ठ पुरुष जुन-जुन आचरण गर्छन् त्यसअनुसार अन्य पुरुष आचरण गर्छन्। सबै संसारका लागि ऊ संचालक हो। उनी जुन कुरालाई प्रमाणित गरिदिन्छन् कि यो कुरा सही हो त्यसलाई सही मानेर सबै मान्छेहरू चल्छन्। उनी मान्छेहरूलाई उपदेश गर्छन् कि मान, बढाइँ, प्रतिष्ठा आदि परमात्माको प्राप्तिमा बाधक हुन् विघ्न हुन् परमात्माको प्राप्तिमा एक गेग्रेटा हुन्। यदि ऊ स्वयं मान, बढाइँ, प्रतिष्ठा चाहन्छ त मान्छे के भन्नेछन् कि यो कुरा त भन्नुलाई मात्र रैछन् आफ्नो प्रयोगामा ल्याउन थोरै न हो। यसबाट के हुनेछ कि मान, बढाइँ, प्रतिष्ठा आदिको त्यागको महत्त्व कोही बुझ्ने छैनन्। नबुझ्नेहरूलाई कसले बुझाउनेछ। महात्मा भनिदिनेलान् कि हामी त सामर्थ्यवान् हौं, हाम्रा लागि कुनै दोष छैन, अरूहरूका लागि मात्र दोष छ। तब साधारण पनि भन्नेछन् कि तपाईंका लागि दोष होइन भने हाम्रा लागि पनि दोष हैन। साँचो महात्मामा व्यक्तिगत कुनै स्वार्थ हुन्न। सबै क्रिया वास्तवमा आफैं हुन्छन्। उनमा कर्तापन हुन्न। उनीद्वारा जे चेष्टा हुन्छन् ती सबै चेष्टा न्याययुक्त हुन्छन् भगवान्का मर्यादाअनुसार हुन्छन्।

भगवान् पनि जहाँ विशेष प्रेम हुन्छ त्यहाँ मर्यादालाई छोडिदिनुहुन्छ। शबरीकोमा गए, त्यहाँ तिनका जुठा बयर खाए, मर्यादा कता गयो। जहाँ अतिशय प्रेम हुन्छ त्यहाँ त परमात्माको प्राप्ति हुन्छ नै, किन्तु जसमा प्रेम छैन, जुन पात्र छैन, पापी हो,

ऊ पनि पात्र हुन्छ। पापीलाई पनि मुक्त गरिदिनु के यो मर्यादा हो? अँ! यो पनि मर्यादा हो। यहाँ यो भाव हो कि भगवान्‌लाई जसले दयालु तथा सुहृद् मान्दछ र यस्तो विश्वास राख्छ कि भगवान् कसैको दोषलाई देख्दैनन् त्यसका लागि भगवान् कसैका दोष देख्नेवाला हैनन्। फेरि त्यसका दोष कसरी देख्नुहुनेछ। जुन भन्छ कि भगवान् कसैका दोष देख्दैनन् किन्तु मेरो आत्माको उद्धार नहुनुमा मेरा दोष नै हेतु हुन् भने किन भन्छौ कि भगवान् कसैको दोष देख्दैनन्? भगवान् सबका सुहृद् हुन् भगवान् कसैका दोष देख्नेवाला हैनन् किन्तु तिम्रा दोष भने देख्नेवाला हुन् किनकि तिमीले भगवान्‌लाई त्यस्तै मानिलियौ, यसकारण तिम्रा दोष भगवान्‌ले हेर्छन्। अतः तिम्रो उद्धार हुनमा विलम्ब भइरहेछ। जहाँ भगवान् उच्च दर्जाको भावले उद्धार गर्छन् त्यहाँ पनि हामीले भन्ने कि भगवान्‌ले मर्यादा त्याग गरिदिएर पापीको पनि उद्धार गरिदिए। जहाँ भाव एवं प्रेमको प्रधानता हुन्छ त्यहाँ उनी मर्यादाभित्र छन् त्यो पनि एक मर्यादा हो, त्यस्तोमा नीति र शास्त्रको पनि मर्यादा रोकिन्छ। यसरी ती मान्छेहरू पनि शास्त्रविपरीत गर्न लाग्नेछन् र भन्नेछन् कि हामीमाथि पनि शास्त्रको आज्ञा छैन। उनीहरूसित सोधियोस् कि तिमीलाई होश छ कि छैन? यदि होश छ भने तिमी मर्यादा त्याग गर्न सक्दैनौ।

**यदि ह्यहं न वर्तेयं जातु कर्मण्यतन्द्रितः।**
**मम वर्त्मानुवर्तन्ते मनुष्याः पार्थ सर्वशः॥**

(गीता ३। २३)

यदि म सावधान भई कर्म नगरूँ त मेरो अनुकरण गर्दै सबैले कर्म छोडिदिनेछन् त्यसको जिम्मेदारी ममाथि आउनेछ। मेरो

बेहोशीमा हुने मेरो क्रियाको अनुकरण भने कसैले पनि गर्ने छैनन्। तिम्रो बेहोशी यदि सातौं भूमिकाको हो र तिमीलाई बाहिर-भित्रको केही पनि ज्ञान छैन, चाहे कहीं पनि दिसा-पिसाब गर त्यसको ज्ञान हुन्न, तिमीलाई कसैले कुनै पनि कुरा खुवाइदेओस् तर त्यसको पनि ज्ञान हुन्न, बाहिरको ज्ञान हुन्न, त्यस्तो अवस्थामा तिम्रा लागि शास्त्रको कुनै मर्यादा छैन। तर जबसम्म तिमीलाई ज्ञान छ, खाने ज्ञान छ, पिउनुको ज्ञान छ भोग-विलास गर्नुको ज्ञान छ र सबै पाप गर्नका लागि ज्ञान छ तर तिमी भन कि मेरा लागि शास्त्रको बन्धन छैन भने यो तिम्रो दम्भाचार हो। अर्को कुरा यो सिद्ध हुन्छ कि जुन पुरुष मान, बढाइँ, प्रतिष्ठा चाहन्नन् उनीहरू नै मान, बढाइँ, प्रतिष्ठा नचाहनुको शिक्षा दिन सक्छन्। जो मान, बढाइँ, प्रतिष्ठालाई स्वीकार गर्छन् उनीहरू यस्तो भन्न सक्दैन न् कि मान, बढाइँ, प्रतिष्ठा सुँगुरी-विष्ठा समान छ, मान, बढाइँ, प्रतिष्ठा बिच्छुदंश समान छ, यो खराब चीज हो। मैला समान हो, यसलाई त्यागिदिनुपर्छ। ऊ भन्न सक्दैन। समाजमा त्यस्तालाई भन्नुको अधिकार पनि छैन। यस्ता शिक्षा हामीहरूलाई वीतरागसित मिल्न सक्छ, महापुरुषहरूबाट मिल्न सक्छ। वीतराग पुरुष उनी हुन्-जसमा राग छैन, जुन परमात्माका नजिक पुगेका छन्। संसारका पदार्थहरूमा अथवा कसैमा पनि जसको आसक्ति छैन यस्ता अनासक्त पुरुष नै विशेषरूपले उपदेश गर्न सक्छन्। जुन सिद्ध महात्मा पुरुष हुन्छन् तिनका लागि मान, बढाइँ, निन्दा, स्तुति सबै समान हुन्छन्। किन्तु जो विरक्त पुरुष हुन् उनी त मान, बढाइँ, प्रतिष्ठालाई विष समान बुझ्छन्। अपमान, निन्दा र अप्रतिष्ठालाई अमृत समान बुझ्छन् उनमा ठूलो वैराग्य हुन्छ। उनको स्वाभाविक

व्यवहार मान, बढाइँ, प्रतिष्ठालाई तुच्छ बुझ्नुमा हुन्छ। यस विषयमा महापुरुषहरूलाई त्यस विरक्त पुरुषअनुसार संसारमा व्यवहार गर्नुपर्छ। विरक्त नभएर पनि विरक्त पुरुषहरू समान व्यवहार गर्नुपर्छ। किनकि जसरी सकामी पुरुष संसारमा कामनालाई लिएर यज्ञ-दान-तप आदि विधिले गर्छन् त्यस सिद्ध पुरुषलाई पनि त्यसरी नै कर्म गर्नुपर्छ। किनकि जस्तै सकामी मान्छे यज्ञ, दान, पूजा, प्रतिष्ठा विधिसित गर्छन् त्यस्तो निष्कामी शास्त्रअनुसार शायद नै गर्न सकोस्-

**सक्ताः कर्मण्यविद्वांसो यथा कुर्वन्ति भारत।**
**कुर्याद्विद्वांस्तथासक्तश्चिकीर्षुर्लोकसङ्ग्रहम् ॥**

(गीता ३। २५)

जुन प्रकारले कर्महरूमा आसक्त भएर अज्ञानीजन (मूर्ख) शास्त्रअनुसार कर्म गर्छन् त्यत्तिकै विद्वान्ले पनि आसक्तिरहित भएर लोकसंग्रहका लागि कर्म गर्नुपर्छ। अज्ञानी को हो? सकामी; सात्त्विक पनि छैन, तामसी पनि छैन। सात्त्विक यसकारण होइन कि सात्त्विक पुरुषमा कामना हुन्न, त्यसका समस्त कर्म निष्काम हुन्छन्। सकाम कर्म गर्नेवालाहरूका कर्म निष्काम नहुनाले तिनलाई अज्ञ भनियो। तामसी पनि हैन, किनकि तामसीका कर्मको अनुकरण गर्नका लागि भगवान् कहिल्यै भन्ने छैनन्। राग र आसक्ति- यिनीहरू एक नै चीज हुन्- "**रजो रागात्मकं विद्धि**" रजोगुणलाई रागरूप नै बुझ। रजोगुण राजसी हो। राजसी पुरुष जसरी कर्महरूको आचरण गर्छ, गुणातीत पुरुषले पनि त्यसरी नै आचरण गर्नुपर्छ। यसै प्रकार जो विरक्त महात्मा र वीतराग पुरुष हुन् तिनैको अनुकरण ती महापुरुषहरूले गर्नुपर्छ। हामी मान, बढाइँ, प्रतिष्ठालाई विष

समान बुझौं। यो शिक्षा हामी कसबाट लिनेछौं? यस्तो शिक्षा ती वीतराग पुरूषहरूबाट हामीलाई मिल्नेछ। जुन वास्तवमा गुणातीत छन् ईश्वरका भक्त हुन् मुक्त पुरुष हुन् उनीहरूबाट लिनेछौं। उच्च कोटिका पुरूषहरूमा मान, बढाइँ, प्रतिष्ठाको इच्छा रहँदैन। उनीहरू यस प्रकारको आचरण पनि आफूसित हुन दिन्नन् र आफ्ना हृदयबाट पनि चाहन्नन् वाणीबाट पनि भन्दैनन् र स्वरूपले पनि चाहन्नन्। कुनै पनि प्रकारले चाहन्नन्। संसारको हित गर्नका लागि, मान्छेहरूलाई कुमार्गबाट बँचाउनका लागि, शास्त्र विपरीत मार्गमा जो हिंडिरहेछन् संसारमा जुन दम्भी, पाखण्डी र पापी पाप गर्छन् तिनलाई पापबाट बँचाउनका लागि तथा जो आफ्नो कल्याण चाहन्छन् तिनलाई सत्मार्गमा लगाउनका लागि, शास्त्र अनुकूल कर्म गराउनका लागि ती पुरूषहरूलाई यस्तो गर्नुपर्छ।

माता–बैनीहरू यदि चाहन्छन् कि हाम्रा बालक सदाचारी बनून् तिनमा झुट, कपट, चोरी, बेईमानी आदि दुर्गुण आउन नपाऊन् त पहिला ती माता–बैनीहरू आफू नै त्यस्तै बन्नुपर्छ। यदि उनीहरू आफैं झुट, कपट, चोरी, बेइमानी गरिरहनेछन् र छोराहरूलाई बोलिरहनेछन् कि छोरा! झुटो बोल्नुहुन्न, चोरी गर्नुहुन्न भने त्यसको कुनै असर पर्ने छैन। बच्चाहरू बुझ्नेछन् कि आमा स्वयं त गर्छिन् र मलाई भन्छिन् तँ नगर्। अतः यदि तिनलाई योग्य बनाउनु छ भने पहिला स्वयं बन्नुपर्छ तब उनीहरू योग्य बन्न सक्छन् सुख्खा व्याख्यानहरूबाट हैन।

नारायण! नारायण! नारायण!

॥ श्रीहरिः ॥

# भगवान् र महापुरुषहरूका बलमा साधन तेज गर्नु

सत्संगका जे–जति कुरा तपाईंहरूलाई सुनाइन्छ तिनलाई यदि तपाईंहरू या अन्य कोही पनि दाजुभाइले व्यवहारमा ल्याउनुभयो भने निश्चय नै कल्याण हुन सक्छ। यदि भनौं कि भविष्यको यो कुरा तपाईं निश्चित कसरी भनिरहनुभएको छ? म यो कुरा भगवान्का वचनहरूको बलमा भनिरहेछु। भगवान्ले ठाउँ–ठाउँमा यो कुरा भन्नुभएको छ–

**मत्कर्मकृन्मत्परमो मद्भक्तः सङ्गवर्जितः।**
**निर्वैरः सर्वभूतेषु यः स मामेति पाण्डव॥**

(गीता ११। ५५)

'हे अर्जुन! जो पुरुष केवल मेरा लागि नै सम्पूर्ण कर्म गर्छ र मेरै शरणमा हुन्छ, त्यो मेरो भक्त संसारमा आसक्तिरहित भई, सबै भूत–प्राणीहरूमा वैरले रहित छ भने मलाई प्राप्त हुन्छ।'

भगवान्का वचन कहिल्यै मिथ्या हुन सक्दैनन्। यी मेरा वचन हैनन् भगवान्का वचन हुन्। म त गीता र भगवान्का वचनहरूका आधारमा भन्छु। यसै प्रकारले अरू पनि जे–जति कुरा तपाईंहरूका सेवामा निवेदन गर्छु ती ईश्वर या महापुरुषहरूका वचनहरूको बलमा नै गर्छु जुन मिथ्या हुँदैनन्। भगवान्ले भन्नुभएको छ–

**मन्मना भव मद्भक्तो मद्याजी मां नमस्कुरु।**
**मामेवैष्यसि सत्यं ते प्रतिजाने प्रियोऽसि मे॥**

(गीता १८। ६५)

'अर्जुन! ममा नै मनलाई लगाऊ, मेरो नै भक्त बन, मेरो नै पूजा गर, मलाई नै नमस्कार गर, यस्तो गर्नाले तिमी मलाई नै प्राप्त हुनेछौ, म तिम्राप्रति सत्य प्रतिज्ञा गर्छु किनकि तिमी मेरा प्यारा हौ।' यसरी ठाउँ-ठाउँमा भगवान् भन्नुहुन्छ-

**ज्ञेयं यत्तत्प्रवक्ष्यामि यज्ज्ञात्वामृतमश्नुते।**

(गीता १३। १२)

'जो जान्नयोग्य ब्रह्मको स्वरूप छ, जान्नुमा आओस् तिनलाई नै म तिमीप्रति भन्नेछु, यसलाई जानेर तिमी अमृतलाई प्राप्त हुनेछौ।' अमृतको प्राप्ति र भगवान्‌को प्राप्ति एक नै वस्तु हो।

**क्षेत्रक्षेत्रज्ञयोरेवमन्तरं ज्ञानचक्षुषा।**
**भूतप्रकृतिमोक्षं च ये विदुर्यान्ति ते परम्॥**

(गीता १३। ३४)

क्षेत्र शरीर र क्षेत्रज्ञ जीवात्मा; यिनमा शरीर नाशवान् र जड छ तथा आत्मा नित्य, चेतन, साक्षी तथा आनन्दस्वरूप छ। यस प्रकारको अन्तरलाई जसले ज्ञानचक्षुले अनुभव गर्छ, भूत (प्रकृतिका सबै कार्य), प्रकृति (मूल प्रकृति)-बाट छुट्ने उपायलाई जसले ज्ञानचक्षुद्वारा अनुभव गर्छ त्यसले परमपदलाई यानी परमात्मालाई प्राप्त गर्छ। कतै परमगतिलाई, कतै मेरो भावलाई, कतै अमृतलाई र कतै शान्तिलाई प्राप्त हुनु भनिएको छ-यी सबैको अर्थ एकै हुन्छ।

जब स्वयं भगवान् भन्नुहुन्छ- त्यो मलाई प्राप्त हुन्छ। फेरि त्यही कुरा म भनूँ त के ठूलो हो। भगवान्‌को प्रतिज्ञाको बल पाएर त म तपाईंहरूसित भनिरहेछु। अब मेरा कथनहरूका आधारमा तपाईं निश्चय गरेर हिंड्नुहोस्। कुनै पनि कुरा म तपाईंसित भन्छु भगवान्‌का वचनहरूको बलमा भन्छु। यो बलमा ठूलो आधार छ।

अंग्रेजहरूको कुनै एक ठूलो कारखाना छ, उनी वाणिज्यको पेशा गर्न कहिल्यै नकार्दैनन्। उनबाट कुनै सूती या कपडाको पक्का वाणिज्य हामीले गर्यौं र त्यो हामीले दोश्रोलाई बेचिदियौं, दोश्राले तेस्रालाई बेचिदियो भने त्यसमा विश्वास रहन्छ। जस्तै हाम्रो विश्वास छ अंग्रेजहरूमाथि। अंग्रेजले जुन कपडा या सूती हामीलाई बेचे, चाहे कारखाना फेल होओस् तर उनको वाचामा हत्तपत्त गडबड हुन सक्दैन र हामीले पनि उनको वाणिज्य लिएर तपाईंलाई बेचिदियौं भने तपाईंलाई हामीमाथि विश्वास छ कि कारखानाले नदेला तैपनि यिनले हामीलाई दिनेछन् कारखानाले नदेओस्, यस्तो कुरा छैन; किन्तु नदेओस् तैपनि तपाईंलाई यस्तो विश्वास छ कि यिनबाट हामीले पाउनेछौ। विश्वासले तपाईंलाई पनि हिचकिचाहट हुनुहुँदैन र तपाईंले पनि त्यो वाणिज्य ढुक्कै बेचिदिनुपर्छ। यसमा त फेरि पनि तपाईंलाई भय हुन सक्छ। यद्यपि कारखाना मालिकमा नकार छैन, तैपनि कुनै कारणले मिलमा उत्पादन भएन र कुनै आपत्ति आयो भने मामला गडबड हुन सक्छ। किन्तु भगवान्का वचनहरूमा त गडबड हुनुको कुनै सम्भावना नै छैन र भगवान्का वचन इत्थंभूत हुन्छन् एकदम सोह्रै आना पक्का हुन्छन्। त्यही परिपक्वताका आधारमा मैले तपाईंलाई कुनै कुरा भन्छु भने तपाईंले पनि त्यसमाथि विश्वास गर्नु नै पर्छ। विश्वास गरेमा लाभ–नै–लाभ छ र नगरेमा नोक्सान छ। यस्तै अर्को उदाहरण– गीताप्रेसका विषयमा कुनै पनि कुराको अधिकारीहरूलाई आज्ञा दिन्छु भने त्यस आज्ञालाई प्रयोगमा ल्याउनका लागि तपाईंलाई कुनै हिचकिचाहट हुनु नै पर्दैन किनकि तपाईं कुनै पनि काम गर्नुहुन्छ भने तपाईंका लागि आज्ञा दिनेवाला त म हूँ फेरि तपाईंलाई त्यसमा के चिन्ता, त्यसमा यदि

गडबडी भयो भने त मैंमाथि छहरो आउन सक्छतर ममाथि पनि यसकारण आउन सक्दैन कि म पनि कुनै आधारमा नै तपाईंलाई आज्ञा दिन्छु। यदि कुनै गडबड हुन्छ भने तपाईं एकदम निर्भय हुनोस्। तपाईंलाई त निर्भय हुनु नै पर्छ। कुनै पनि मनुष्यलाई यसप्रकारले आधार मिलोस्, सहारा मिलोस् त त्यो व्यक्तिमा धीरता, वीरता, गम्भीरता यी सबै आउनु नै पर्छ। जस्तै म गीताका आधारमा एकदम निश्चिन्त भएर कुरा भनिदिन्छु, म बुझ्छु कि भगवान्का वचन कहिल्यै मिथ्या हुने नै छैनन्। उहाँका वचन मिथ्या होऊन् तब न मेरा कथन पनि मिथ्या होलान्।

भगवान् महाभारतको द्यूतपर्वमा विलाप गर्दै गरेकी द्रौपदीसित भन्नुहुन्छ– 'द्रौपदी! तिमी विलाप नगर, चिन्ता नगर, सभामा जसले तिमीलाई अपमानित गरेका छन् तिनीहरू निश्चय नै मारिनेछन्। चाहे समुद्रले आफ्नो मर्यादा त्यागोस् र आकाश ओइरिएर असम्भव कुरा पनि सम्भव होओस् या सम्भव पनि असम्भव होओस् तैपनि मेरा वचन मिथ्या हुने छैनन्। किन्तु यदि कर्णले हाम्रो कुरा मानेमा उनी भने बँच्न सक्छन्।' द्रौपदीले त भगवान्का वचनहरूमा निश्चितरूपले विश्वास गर्नु नै पर्छ, गरिन्। भगवान्को त कुरा नै के, भक्तहरूतिर ख्याल गरेर हेर्नू। हिरण्यकशिपुले शण्डामर्कलाई आज्ञा दिए कि तिमी प्रह्लादलाई मारिहाल। आज्ञानुसार प्रह्लादलाई मार्नका लागि तिनले कृत्या जन्माएर त्यसलाई आज्ञा दिए कि तिमी प्रह्लादलाई मारिहाल। प्रह्लादको रक्षा सुदर्शनचक्रले गर्थ्यो। कृत्या राक्षसी जब प्रह्लादलाई मार्नका लागि दौडी त सुदर्शनचक्र चलेर कृत्यालाई मारिहाले। त्यसपछि गुरुका दुवै जना पुत्रहरूलाई पनि चक्रले मारिहाले। चक्रद्वारा सबै मारिए। मारिएपछि प्रह्लादमा यो विचार आयो कि

मेरा कारण यी गुरुपुत्रहरू मारिए। गुरूपुत्र मारिनु ठूलो अनर्थ हो। मारिएका गुरुपुत्रहरूको शरीर हेर्दै प्रह्लादले भने- 'यदि गुरु-पुत्रहरूसित मेरो अलिकता पनि कुनै द्वेष-भाव छैन भने यस सत्यका बलले यी सबै जीवित होऊन्। 'प्रह्लादको हृदयको निर्मलता र सत्यका प्रभावले मरेका गुरु-पुत्रहरू जीवित भए। फेरि भगवान्का वचन सत्य होऊन् यसमा त भन्नु नै के छ?

महाभारतको अश्वमेधपर्वमा लेखिएको छ कि पाण्डवहरू अश्वमेध यज्ञका लागि धन ल्याउन उत्तराखण्डका पहाडहरूमा गएका थिए। यता उत्तराबाट मरेको पुत्र जन्मियो। त्यही दिन भगवान् द्वारकापुरीबाट हस्तिनापुर पुगिसकेका थिए। कुन्ती र उत्तराले अनुरोध तथा स्तुति-प्रार्थना गरेपछि भगवान्ले त्यस मरेको पुत्रलाई हेरेर भने- 'यदि म सत्यको पालन गर्नेवाला हूँ भने त्यसको प्रभावले यो मृतक जीवित होओस्।' ऊ जीवित भयो। भगवान्का प्रभावले जीवित भयो। यो कुनचाहिं ठूलो कुरा हो; भगवान् त असम्भवलाई पनि सम्भव गर्न सक्छन्। किन्तु गोस्वामी तुलसीदासज्यूको विषयमा पनि सुनिन्छ कि तिनले मरेकालाई बँचाइदिए। कुनै पतिव्रता स्त्रीको पति मरेको थियो र ऊ सोह्र श्रृङ्गार गरेर लाशसितै श्मशान-भूमितिर गइरहेकी थिई। बाटोमा तुलसीदासज्यूलाई स्त्रीले नमस्कार गरी। तुलसीदासज्यूले शरीरको श्रृंगारका सौभाग्य-चिन्हहरूलाई देखेर त्यसलाई सधवा माने र आशीर्वाद दिए कि तिम्रो सौभाग्य सदा कायम रहोस्।

**तुलसी आवत देखके सती नवाया शीश।**
**ये चुड़ला अविचल रहे निश्चय बिस्वाबीस॥**

तुलसीदासज्यूलाई आउँदै देखेर सतीले जब मस्तक नुगाई त तिनले आशीर्वाद दिए कि तिम्रो सौभाग्य निश्चय नै अमर

रहोस्। सतीले फेरि प्रणाम गरेर भनी– 'महाराज! तपाईं सौभाग्यको कुरा भन्नुहुन्छ मेरो पति त मरेको छ। म पतिको लाशसितै सती हुनका लागि श्मशान-भूमितिर गइरहेकी छु। तपाईंका वचन सत्य कसरी हुनेछन्।' तुलसीदासजीले मनमा विचार गरे कि यो त ठूलो गल्ती भयो। किन्तु अब के गर्ने?

**तुलसी मुआ मँगाय के सिर पर मेला हाथ।**
**हम तो कुछ जाने नहीं रघुनाथो रघुनाथ॥**

तुलसीदासज्यूले मुर्दार मगाएर त्यसका मस्तकमा हात राखेर भने– 'मैले त नबुझीकन वचन भनिदिएँ, यस विषयमा म केही जान्दिनँ। प्रभु तपाईं नै जान्नुहोस, तपाईंको काम जानोस्।' मुर्दार जीवित भयो। तुलसीदासज्यू एक महात्मा पुरुष थिए, उनका वचनहरूलाई पनि भगवान्ले सत्य गर्नै पर्‍यो। भगवान्का आफ्ना वचन त सत्य हुन्छन् नै र हुनेछन् नै। यसै प्रकारले गीतामा जे लेखिएका छन् भगवान्का वचन हुन् यस्तो बुझेर आफ्नो हृदयमा दृढ विश्वास राख्नुपर्छ कि भगवान्का वचन कहिल्यै मिथ्या नै हुन सक्दैनन्। एक महात्माका वचन मिथ्या हुन्नन् भने भगवान्का वचन कसरी मिथ्या हुन सक्छन्? भगवान्का वचनहरूमा श्रद्धा राखेमा मनमा विश्वास हुन्छ र विश्वासले बल आउँछ। फेरि त्यसका लागि साधना गर्न कठिन हुँदैन। श्रद्धा-विश्वाससे ठूलो बल मिल्छ र त्यस बलको प्रभावसितै तेजीसित साधना गर्नुपर्छ। हामीहरूले निश्चय नै विश्वास गर्नुपर्छ कि भगवान् छन् मिल्छन् र मिलेका छन् त हामीलाई किन मिल्ने छैनन्? हामीलाई भगवान् अवश्य मिल्नेछन् आफ्नो मनमा यस्तो विश्वास गर्नुपर्छ र यस्तो निश्चित विश्वास हुँदाबित्तिकै धीरता, वीरता, निर्भयता आदि गुण आउँछन् र त्यसको साधना त्यही समयदेखि तेज हुन लाग्दछ।

ईश्वरका कुरा त टाढा राखौं; हामी कुनै एक महात्मामाथि नै विश्वास गरिलिऊँ कि हामी महात्माका निकट छौं त हामीमाथि काम, क्रोध, लोभ आदि मायाका कटक आउनै सक्दैनन्। हामीमा कुनै विकार जन्मिन सक्दैन, किनकि महात्माको हामीमाथि दया हुन्छ। यो विश्वास हुनु नै धेरै महत्त्वपूर्ण हो। अध्यात्मको विषयमा मनुष्य हरेक कुरा यसरी निश्चित गरोस् कि यी दैवी सम्पदाका जुन गुण हुन्छन् ती सबै एकएक उत्तम गुण र आचरणका समूह हुन् यिनलाई धारण गर्नु के कठिन छ र, यी धेरै उत्तम कुरा हुन् यिनबाट मनुष्य वञ्चित कसरी रहन सक्छ, जब भगवान्को दया हुन्छ भने दुर्गुण र दुराचार आफूसित आउनै कसरी सक्छन्?

यो संसार प्रत्यक्ष र साँचो-जस्तो देखिन्छ। यो नै किन; सपनामा जुन मायिक संसार हुन्छ, त्यो पनि सत्य देखिन्छ। जसलाई जुन समय सपना आउँछ त्यस समय त्यसले त्यो एकदम सत्य र प्रत्यक्ष नै बुझ्छ। जब आँखा खुल्छ त बल्ल ऊ बुझ्छ कि यो त स्वप्न थियो, किन्तु जुन समयमा स्वप्न आउँछ त्यस समयमा त त्यो वस्तु प्रत्यक्ष देखिन्छ। सपना त त्यसका भावनाको नै दृढता हो, त्यसका संकल्पको नै दृढता हो अरू त्यहाँ के हुन्छ र? यसै प्रकारले यो संसार वर्तमानमा अर्थात् जाग्रत्-अवस्थामा हामीलाई जुन सत्य देखिन्छ यस बारेमा पनि ज्ञानी महात्माहरू भन्छन् कि यसको यो सत्यात्मक स्थिति मानिएको हो, वास्तवमा छैन। यसकारण जे-जति कुरा तपाईंहरूलाई भनिन्छ गीता या शास्त्रहरूका आधारमा भनिन्छ। गीताका वचन त साक्षात् भगवान्का वचन हुन् र शास्त्रका वचन महापुरुषहरूका वचन हुन्। ती वचनअनुसार तपाईं हिंड्नुहोस् त तपाईंको कल्याण

हुन सक्छ; म हिंड्छु त मेरो। त्यहींमाथि दृढतापूर्वक भन्न सकिन्छ, ग्यारेन्टी दिन सकिन्छ कि भगवान्‌का वचनहरूको पालन गर्दा त झन् निश्चय नै कल्याण हुन सक्छ। किन्तु यो भन्न सकिन्न कि कुनै पनि मान्छेले मेरा चरित्रहरूको, कर्महरूको अनुकरण गर्‍यो भने त्यसको उद्धार हुन सक्छ। मेरा सबै आचरण त्यसका लागि अनुकरणीय हुन्नन्। मेरो व्यवहारमा तपाईंले जुन कुरा राम्रो लाग्छ त्यसलाई भने तपाईं अनुकरण गर्न सक्नुहुन्छ किन्तु जुन तपाईंलाई खराब लाग्छ त्यसको आचरण गर्नुपर्दैन। भगवान्‌को आज्ञाको पालनले उद्धार हुन्छ भने त त्यसमा भन्नु नै के? महापुरुषहरूको आज्ञाको पालनले पनि कल्याण हुन सक्छ। ईश्वरको त दर्शन, भाषण र चिन्तनले नै मात्रै पनि कल्याण हुन सक्छ। राम्रा पुरुषहरू (महापुरुषहरू)-का दृष्टिमा हामी राम्रा छौं र महापुरुषहरूमाथि हाम्रो छाप पर्छ कि यो साँचो मान्छे हो, श्रेष्ठ मान्छे हो भने त्यसको यहाँ पनि आदर छ र भगवान्‌का परमधाममा त आदर छ नै। यसकारण राम्रा पुरुषहरूका सम्मुख राम्रो भएर नै रहनुपर्छ। राम्रो भएर रहनाले हामीमा खराबी टिक्न सक्दैन। भनिन्छ कि काकभुशुण्डिज्यूको आश्रमबाट योजनभरि दूरीसम्म भगवान्‌को माया फैलिंदैनथ्यो, फेरि आश्रममैं मायाका विकारहरूको तागत नै के? जो कोही त्यहाँ जान्थे तिनका दुर्गुण र दुराचार पहिले नै भाग्दथे र सबै सद्‌गुण-सदाचार स्वाभाविकरूपले तिनमा आउँथे।

सानो बच्चा छ, त्यसलाई कुकुर या बिरालोको भय लाग्छ। भयको बेलामा ऊ दौडेर आमाको काखमा आई बस्छ भने एकदम निर्भय हुन्छ। यसै प्रकारले हामीले आफूलाई भगवान्‌को काखमा बसालिदियौं भने निर्भयता आउँछ। भगवान् त सर्वत्र

उपस्थित छन्। सुनिन्छ कि मार्कण्डेय ऋषिको जब आयु समाप्त भयो त यमराज त्यहाँ आए। यमराजले मार्कण्डेयजीको प्राणलाई जसै निकाल्ने चेष्टा गरे, मार्कण्डेयजीले आत्तिएर भगवान् शिवको मूर्तिको आश्रय लिए। आश्रय लिंदाबित्तिकै स्वयं भगवान् शिव प्रकट भए र त्रिशूल हातमा लिई यमराजलाई मार्न खोजे। यमराज हात जोड्दै भगवान् शिवको शरणमा आएर बोले- 'मेरो के अपराध छ?' शिवजीले भने- 'अरे! यो मेरो भक्त हो, तिमी यसको प्राण निकालिरहेछौ तैपनि भनिरहेछौ कि मेरो के अपराध छ?' उनी बोले- 'महाराज! यसको आयु त समाप्त भयो र तपाईंको नै विधान हो यो सबै। म त तपाईंको आज्ञापालन गर्ने एक सेवक हूँ।' शिव बोले- 'यसको आयु कहिले समाप्त भयो।' यमराज बोले- 'महाराज! आजैका दिन यसको मिति थियो।' शिव बोले- 'कुन कल्पको दिन? आजको दिन त ठीक हो, किन्तु कल्प कुनचाहिं?' तब यमराजको आँखा खुल्यो। अहिले त कैयौं कल्प बाँकी छन् दिन त ठीक हो, किन्तु कैयौं कल्पहरूपछिको हो। भगवान् शिवले क्षणभरमा असम्भवलाई पनि सम्भव गरिदिनुभयो यानी कैयौं कल्पहरूको आयु दिनुभयो। यमराजले भने- 'महाराज! मेरो अपराध क्षमा गरिदिनुहोस्।' भगवान् शिवको मूर्तिको शरण लिनाले यमराजले मार्कण्डेयलाई मार्न सकेनन् र कैयौं कल्पहरूसम्मको आयु बढ्यो। अब फेरि साक्षात् भगवान्को शरण लिनाले आफूमा निर्भयता आयो भने आश्चर्य नै के?

हामीहरूलाई मनुष्य-शरीर प्राप्त भएको छ, यो भगवान्को बडो दया हो। यस्तो दया पाएर हामीहरू जुन कामका लागि यहाँ आएका छौं त्यो कार्य आफ्नो आत्माको उद्धार शीघ्र गर्नुपर्छ।

यस्तो मौका पटक-पटक मिल्न मुश्किल छ। हामीहरूले आफ्नो साधनातिर हेर्नुपर्छ कि कति ढिलो गतिमा साधना भइरहेछ तैपनि यो विचार आउँदैन कि यदि आजै मृत्यु आयो भने हामी रोक्न सक्दैनौं। मृत्युको भरोसा छैन कि अचानक कुन समय आएर लैजाओस्, फेरि कुनै उपाय छैन। जबसम्म मृत्यु टाढा छ र देहमा प्राण छ त्यति बेलासम्ममा आफ्नो कार्य सिद्ध गर्नुपर्छ। यदि विलम्ब गरिन्छ भने हाम्रो मूर्खता हो, फेरि विलम्ब किन गर्नुपर्छ र। एक-एक क्षण बित्दै गइरहेछ। जसै-जसै क्षण बित्दै जान्छन् उसैउसै हाम्रो उत्तरोत्तर उन्नति पो हुनुपर्छ। समय घडीको सियो झैं रोकिंदै रोकिन्न, यसै प्रकारले हाम्रो साधनाको प्रवाह पनि बग्नुपर्छ। यदि एक क्षण पनि व्यर्थैमा बित्यो भने त त्यसको घोर पश्चात्ताप गर्नुपर्छ। साँचो हृदयले पश्चात्ताप गरेमा फेरि त्यस्ता भुल प्रायः दोहोरिन्नन्। काम फत्ते गरिसकेर अनि संसारमा रहन्छौं भने कुनै हानिको कुरा होइन। यस्तो मनुष्य-शरीर पटक-पटक मिल्नु मुश्किल छ र मनुष्यभन्दा इतर अरू योनिहरूमा कल्याण हुनु असम्भव-जस्तै छ। जब मृत्यु प्राप्त हुनेछ तब हामी आजलाई भोलिको भाकासम्ममा पनि सार्न सक्ने छैनौं, तत्काल जानुपर्नेछ। मृत्युमा पश्चात्ताप गर्दै, रूँदै जानुपर्‍यो भने जीवनको कुनै लाभ भएन। अतः केही पनि गर्नु छ भने पहिले नै गर्नुपर्छ। यो बुझ्नुपर्छ कि आजको दिन त मिल्यो तर रात कट्नु मुश्किलै छ। रात कट्छ भने दोश्रो दिन निक्लनु मुश्किल छ। जसलाई मृत्यु निकट देखिन्छ त्यसबाट साधनाका लागि धेरै उच्च कोटिका चेष्टा हुन्छन्। स्त्री, पुत्र, भाइ-बन्धु र यो शरीर समेत हाम्रो कुन काममा आउनेछन्। मृत्युपछि यी सबैको ज्ञान समेत रहने छैन। जस्तै स्वप्नबाट ब्युँझिएपछि स्वप्नको सृष्टिको ज्ञान

रहँदैन, केहीलाई एकदमै थोरै रहन्छ र धेरैजसोले त स्वप्न नै भुल्छन्। यसै प्रकारले परमात्माको यथार्थ ज्ञान हुँदाका दिन यो संसार स्वप्नवत् हुन्छ। जस्तै सपनाका कुटुम्बसित, रूपियाँ र भोग पदार्थहरूसित हाम्रो कुनै पनि सम्बन्ध छैन, यसै प्रकारले यस संसारसित पनि हाम्रो कुनै सम्बन्ध रहने छैन, यसकारण पैसा, लोभ या संकोचले आफ्नो कर्तव्यको कहिल्यै उल्लङ्घन गर्नुहुँदैन। जुन कामका लागि मानव-शरीर मिलेको छ त्यही काममा लगाइदिनुपर्छ। यदि लगाउनमा विलम्ब हुन्छ भने यो ठूलो नोक्सान भइरहेछ। अहिले यस समयमा त्यो नोक्सान देखिंदैन, किन्तु पछि गएर यसले भयंकर रूप धारण गरी सर्वनाश गर्नेछ। यसकारण मनुष्यले एक क्षण पनि व्यर्थ गुमाउनुहुँदैन र काम पनि दामी-भन्दा-दामी गर्नुपर्छ। जुन सबभन्दा उच्च कोटिको काम हो, त्यही गर्नुपर्छ र श्रद्धा-भक्तिपूर्वक गर्नुपर्छ। निष्काम प्रेमभावले गर्नुपर्छ। यस्तो मौका पाएर परमात्माको प्राप्तिबाट हामी वञ्चित रह्यौं भने हाम्रा लागि ठूलो दुःखको कुरा हो। शोकको कुरा हो, भयको कुरा हो र लज्जाको कुरा हो।

नारायण! नारायण! नारायण!

॥ श्रीहरि: ॥

# समता

**इहैव तैर्जितः सर्गो येषां साम्ये स्थितं मनः।**
**निर्दोषं हि समं ब्रह्म तस्माद् ब्रह्मणि ते स्थिताः॥**

(गीता ५। १९)

ती पुरुषहरूद्वारा संसार यहीं जितियो। उनी जीवन्मुक्त हुन् जसको मन समतामा स्थित छ। ब्रह्म सम हो; विषम संसार हो, प्रकृति हो। ब्रह्म सम र निर्दोष हो, शुद्ध हो, निर्दोष अर्थात् दोषबाट रहित, विकारले रहित शुद्ध; जसको समतामा स्थिति छ उसको ब्रह्ममा स्थिति छ। जस्तै ब्रह्म निर्दोष छ त्यत्तिकै त्यो पुरुष पनि निर्दोष छ। विषमता नै दोष हो। अतः विषमतालाई मेटाइदिनुपर्छ। ब्रह्मप्राप्तिको यो खास लक्षण लेखिएको छ। यसका पूर्वमा भनिएको छ–

**विद्याविनयसम्पन्ने ब्राह्मणे गवि हस्तिनि।**
**शुनि चैव श्वपाके च पण्डिताः समदर्शिनः॥**

(गीता ५। १८)

विद्या-विनय-सम्पन्न ब्राह्मणमा तथा गौ, हात्ती, कुकुर र चाण्डालमा पनि जसको सम-बुद्धि छ त्यो ज्ञानी हो अर्थात् ज्ञानीलाई यी सबैमा सम-बुद्धि हुन्छ। पण्डित अर्थात् भगवत्प्राप्त पुरुष, जसलाई ब्रह्मको ज्ञान भयो त्यस्ता पुरुषलाई पण्डित भन्छन्। विद्या-विनय-सम्पन्न ब्राह्मण सात्त्विक हो र गाई पशुहरूमा सात्त्विक हो या यस्तो भन्नुहोस् कि गो-भाव सात्त्विक छ। हात्ती पशुहरूमा राजसी हो किनकि राजाहरूको सवारीका

योग्य छ। कुकुर पशुहरूमा तामसी हो र चाण्डाल मनुष्यहरूमा तामसी हो। मनुष्य र पशुहरूमा, सात्त्विक, राजस र तामस चाहे पशु होस् या मनुष्य, ती सबैमा जसको सम-बुद्धि छ त्यो ज्ञानी हो, पण्डित हो, साँचो ज्ञानी महात्मा पुरुष हो। हामीहरूलाई यस्तो नै बन्नुपर्छ। यहाँ पशु र मनुष्यहरू सबैमा समता भनिएको छ।

**सुहृन्मित्रार्युदासीनमध्यस्थद्वेष्यबन्धुषु ।**
**साधुष्वपि च पापेषु समबुद्धिर्विशिष्यते॥**

(गीता ६। ९)

सुहृद्, मित्र, वैरी, उदासीन, मध्यस्थ, द्वेषी, बन्धु, धर्मात्मा एवं पापीमा पनि जसको सम-बुद्धि छ त्यो अत्यन्त श्रेष्ठ पुरुष हो। यहाँ मनुष्यमात्रमा समता भनियो। सुहृद् त्यसलाई भनिन्छ जो प्रत्युपकार नचाहेर निष्काम भावले दया र प्रेम गरोस्, मित्र त्यसलाई भनिन्छ जसले परस्परमा प्रेम गरोस्। वैरी तिनलाई भनिन्छ जसले परस्पर एक-अर्काको अनिष्ट गर्छन् र वैर-भाव राख्छन्। उदासीन त्यसलाई भनिन्छ जो पक्षपातरहित होस्, कत्ति पनि सम्बन्ध नराख्ने। मध्यस्थ त्यसलाई भनिन्छ- दुवै जनामा समभाव राख्ने जस्तै पक्षपातरहित न्यायाधीश। द्वेषी त्यसलाई भनिन्छ- जसको स्वभाव नै द्वेष गर्नुको होस्। बन्धु त्यसलाई भनिन्छ जो आफ्नो कुनै कुटुम्बीजन होस् या त्यस्तै प्रकारको आफ्नो सम्बन्धी होस्। साधु माने श्रेष्ठ पुरुष र पापी माने पापात्मा पुरुष, नीच पुरुष। साधुको अर्थ हो- धर्मात्मा, श्रेष्ठ, पुण्यात्मा पुरुष यी सबैमा जसको सम-बुद्धि होस् त्यो श्रेष्ठ हो, सबभन्दा उच्च हो। यस्तो नै बन्नुपर्छ। चिनीको कुनै पनि मिठाइ बनोस्, खेलौना बनोस् तर आखिरमा चिनी नै हो, त्यसमा अति सुन्दर या घटिया के? सुनका जति आभूषण हऊन् ती सबै सुन

नै हुन् चाहे कण्ठी होस्, बाला होस्, बँगडी होस्, केही पनि होस्। माटाका जति भाँडा होऊन् ती सबै माटो नै हुन्- बटुको, दियो, हाँडी, घैंटो, आग्लो जुनसुकै पनि माटाका भाँडा हऊन् आखिरमा ती माटो नै हुन्। यसै प्रकार परमात्माको जुन स्वरूप होस्, त्यसमा राम्रो र खराब केही छैन, ऊ परमात्मा नै हो। परमात्माको जुन लीला छ, त्यसमा अति सुन्दर र घटिया के? घटिया र अति सुन्दर त मायामा छ, संसारमा छ, जहाँ राग-द्वेष होस् त्यहाँ अनुकूल-प्रतिकूल भाव हुन्छ। मनको अनुकूल हुनुमा राग र मनको प्रतिकूल हुनुमा द्वेष हुन्छ। मनको अनुकूलमा प्रसन्नता र मनका विपरीतमा दुःख र शोक यी सबै त आफ्ना मान्यता हुन्; वास्तवमा के चीज हो यो विचार गर्नुपर्छ। वास्तवमा त एक परमात्मा नै हो। परमात्माको जुन उपदेश छ त्यो मान्न योग्य छ, उनको जुन लीला छ त्यसको अनुस्मरण गर्नुपर्छ, उनलाई आदर दिनुपर्छ। भगवान्को जुन स्वरूप छ त्यसको त कुरा नै के गर्ने। यसको यो तत्त्व हो कि परमात्माको कुनै पनि स्वरूप होस् त्यसमा घटिया र अति सुन्दर के? चाहे निर्गुण होस्, चाहे सगुण होस्, सगुणमा चाहे साकार होस्, या निराकार होस्। साकारमा चाहे भगवान् रामको रूप होस्, चाहे कृष्णको होस्, चाहे विष्णुको होस्, चाहे शिवको होस्, चाहे वराहकै पनि किन नहोस्, सिंहको पनि किन नहोस्? हुन् त भगवान्का नै अवतार। त्यसमा फेरि घटिया र अति सुन्दर के? भगवान्का गुण-प्रभाव-तत्त्व-रहस्यका जे कुराहरू छन् ती सबै अति सुन्दर छन्। आफूलाई यस्तो बनाउनुपर्छ कि जसले गर्दा वस्तुमात्रमा भगवान्को स्वरूप देखिन लागोस् र सबैको चेष्टामात्रमा भगवान्को लीला प्रतीत हुन लागोस्, यसमा न कुनै घटिया छ न अति सुन्दर। सबै

अति सुन्दर–नै–अति सुन्दर हुन् घटिया छँदै छैनन्। भगवान् श्रीकृष्ण कुनै पनि चेष्टा गर्थे त ती सबै चेष्टा गोपिनीहरूलाई अति सुन्दर लाग्थे। सबै चेष्टालाई गोपिनीहरू लीलाका रूपमा देख्ने गर्थे कि भगवान् लीला गरिरहेका छन्। भगवान् श्रीकृष्ण कहिल्यै चोरी गर्थेनन् झुटो बोल्थेनन् यसको तत्त्व–रहस्य गोपिनीहरू बुझ्दथे। आजभोलिका मान्छेहरू यस कुरालाई बुझ्दैनन्। भगवान्का हृदयमा त कुनै कामना नै हुन्थेन, र बिना कामनाको पाप नै बन्दैनन्। पाप बन्छन् आसक्तिले, कामनाले। काम नै पापहरूको हेतु हो। स्वयं भगवान्द्वारा अर्जुनले सोद्धा गीतामा यो कुरा भनिएको छ।

अर्जुनले भगवान्सित सोधे–

**अथ केन प्रयुक्तोऽयं पापं चरति पूरुषः।**
**अनिच्छन्नपि वार्ष्णेय बलादिव नियोजितः॥**

(३। ३६)

यो पुरुष कोद्वारा प्रेरित भएर पापको आचरण गर्छ? मनुष्य पाप किन गर्छ? मनुष्यलाई पाप गर्नुको उद्देश्य छैन, भित्रको इच्छा पनि छैन तब पनि मानौं कसैले बलात् यसलाई पापमा लगाइदिन्छ त्यो को हो, जसले पुरुषबाट जबर्दस्ती पाप गराउँछ। अर्को श्लोकमा भगवान् यसको उत्तर दिइरहेछन्–

**काम एष क्रोध एष रजोगुणसमुद्भवः।**
**महाशनो महापाप्मा विद्ध्येनमिह वैरिणम्॥**

(गीता ३। ३७)

श्रीभगवान्ले बोले– रजोगुणबाट उत्पन्न भएको यो काम नै क्रोध हो, यो धेरै खानेवाला अर्थात् भोगहरूबाट कहिल्यै

नअघाउनेवाला र ठूलो पापी छ, यसलाई तिमी वैरीका रूपमा जान।

यो जुन काम छ त्यो आसक्ति तथा रजोगुणबाट उत्पन्न भएको छ। संगबाट काम र कामले क्रोध उत्पन्न हुन्छ–

**सङ्गात् सञ्जायते कामः कामात् क्रोधोऽभिजायते॥**

(गीता २। ६२)

जुन आसक्ति छ– रागस्वरूप आसक्ति छ, उसैबाट क्रोध उत्पन्न हुन्छ, कामबाट क्रोध उत्पन्न हुन्छ। यसकारण काम नै क्रोध हो, यसको उत्पत्ति रजोगुणबाट हुन्छ। रजोगुणबाट भनिदेऊ या आसक्तिले भनिदेऊ, एकै कुरा हो। '**रजोरागात्मकं विद्धि**' रजोगुणलाई तिमी राग नै बुझ। कस्तो छ यो काम? '**महाशनः**' यानी महान् खानेवाला, यसको पेट भरिंदैन। जस्तै अग्निमा आहुति दिंदा अग्नि झन् प्रज्वलित हुन्छ त्यसरी नै अग्नि जस्तो काम बढिरहन्छ। यसको पेट भरिंदैन। कसैले यदि यस्तो विचार गरोस् कि संसारका ऐश–आराम भोगेर आफ्नो लालसा पूर्ण गरूँ भने पूरा हुनेवाला छैन। राजा ययातिले आफ्नो अनुभव भनेका छन् जस्तै हवि अग्निमा हाल्नाले अझै धेरै प्रज्वलित हुन्छ त्यस्तै संसारमा विषय–भोगहरू भोग्नाले कामना अधिक–भन्दा–अधिक बढ्छ। अतः यसको त्याग गर्नुपर्छ। यो काम महापापी हो। जति पाप हुन्छन् त्यसमा काम नै हेतु हो। पाप गराउने विषयमा यो काम नै तिम्रो शत्रु हो। पापको फल हुन्छ दुःख। जसले दुःख दिन्छ उही शत्रु हो। अतः यस कामलाई तिमी मारिहाल। यो उपदेश भगवान्ले गीताको तेस्रो अध्यायको सैंतीसौं श्लोकदेखि अध्यायको समाप्तिपर्यन्त दिनुभएको छ। भगवान्मा काम थिएन। उनी त पूर्णकाम हुन् नै, उनमा त कुनै इच्छा तथा कामना छँदै

छैनन् र यदि छन् भने आफ्ना प्रेमी भक्तहरूलाई सुख दिने छ, उनलाई आह्लादित गर्ने छ– उनमा प्रेम बढाउनका लागि छ, उनको चेष्टा शुद्ध छ। यसै प्रकारले कैयौं जुन उच्च स्थितिमा पुगेका गोपिनीहरू थिए उनीहरू भगवान्का परिकर थिए, भगवान्का साथै लीला गर्न आएका थिए, उनीहरू पनि भगवान् समान नै थिए। तिनमा राधिकाजी जुन सबभन्दा उच्च थिइन् उनी भगवान्की एक लीलामयी शक्ति नै थिइन्। भगवान्का सबै लीलाहरू, सबै चेष्टाहरू, सबै चरित्र, आफ्ना भक्तहरूलाई खुशी गर्नका लागि हुन् आह्लादित गर्नका लागि हुन् प्रेम बढाउनका लागि हुन् र भक्तहरूको चरित्र भगवान्लाई आह्लादित गर्नका लागि हो, भगवान्लाई खुशी गर्नका लागि हो, भगवान् जे पनि काम गर्छन् भक्तहरूलाई उनमा दोष देखिंदैन। परस्परमा उनीहरूलाई न कुनै भय छ, न कुनै आदर, न कुनै सत्कार, न कुनै संकोच, केही पनि छैन। भगवान्को जुन स्वरूप छ त्यो मधुर छ, उनका लीलाहरू मधुर छन् उनमा जुन गुण छन् ती मधुर छन् भगवान्को प्रभाव मधुर छ, तात्पर्य यो हो कि भगवान्का सबै चेष्टाहरू मधुर छन्। भगवान्का सबै वस्त्र मधुर र भगवान्का सबै स्वरूप मधुर हुन् नै। भगवान्को कुनै पनि स्वरूप किन नहोस् कस्तै पनि किन नहोस् त्यो माधुर्यमय छ। त्यस रूप–माधुरीलाई देखेर गोपिनीहरू हरसमय प्रसन्न रहने गर्दथे यो कुरा बुझ्नेलायक छ। भगवान्का सबै लीला धेरै नै मधुर छन्। भगवान्का जुन स्वरूप छन् ती मधुर छन्। भगवान्का जे उपदेश छन् ती मधुर छन् गीता भगवान्को उपदेश हो। भगवान्का जुन चरित्र थिए ती भगवान्का लीला थिए। हामीहरू पनि व्याख्यान सुन्छौं। त्यसमा यो अति सुन्दर छ, यो घटिया छ, यस्तायस्ती हामी सबैका भाव बन्छन्

तर भगवान्को चर्चा मात्र नै अति सुन्दर हो, सबै मधुर छन्- यी सबैमा समभाव हुनु नै पर्छ। अतः आफ्ना मनका अनुकूल या प्रतिकूल सबैमा समभाव गर्नु छ। माटो र सुन- यिनमा पनि समभाव गर्नु छ। समतामा सुनलाई माटाको रूपमा बुझ्नु छ यानी सुनलाई माटो समान बुझ्नु छ। वैरी र मित्रमा समभाव गर्नु छ भने त्यहाँ वैरीमा मैत्री भाव गर्नु छ। सुख र दुःखमा समभाव हुनुपर्छ अतः त्यहाँ दुःखमा सुखको भाव गर्नु छ। सुख त सुख हो नै, सुखमा आनन्द छ नै, दुःखमा पनि आनन्द-बुद्धि गर्नु छ। यसै प्रकारले समभाव गर्नु छ। यस्तो सर्वत्र देख्नाले सबैमा समभाव आफैं नै हुन्छ-

**यो मां पश्यति सर्वत्र सर्वं च मयि पश्यति।**
**तस्याहं न प्रणश्यामि स च मे न प्रणश्यति॥**
**सर्वभूतस्थितं यो मां भजत्येकत्वमास्थितः।**
**सर्वथा वर्तमानोऽपि स योगी मयि वर्तते॥**

(गीता ६। ३०-३१)

भगवान् भन्नुहुन्छ कि जसले म परमात्मालाई सबै जग्गा हेर्छ तथा सबैलाई म परमात्मामा हेर्छ, त्यसबाट म कहिल्यै अलग्गै हुन्नँ, त्यसबाट कहिल्यै अदृश्य हुन्नँ र ऊ मबाट कहिल्यै अदृश्य हुन्न, त्यसको दृष्टिबाट म कहिल्यै ओझेल हुन्नँ र ऊ मेरो दृष्टिबाट कहिल्यै ओझेल हुन्न किनकि सबै भूतहरूमा म समभावले स्थित छु। यसरी म परमात्मामा जो एकीभावले स्थित हुन्छ यानी ममा तन्मय हुन्छ र तन्मय भएर जो मेरो स्वरूपलाई अनुभव गरिरहन्छ, लोकदृष्टिले ऊ संसारमा जे पनि गर्छ- व्यवहार गर्छ, ऊ ममा नै व्यवहार गर्छ। यानी त्यसको सबै लीला, सबै चेष्टा, सबै क्रिया लीलाका रूपमा हुन्छ।

यहाँ समताको जुन प्रकरण चलिरहेछ, बुझ कि यो साक्षात् परमात्माको स्वरूप हो। एक त समभाव छ र एक परमात्माको स्वरूप छ। आफ्नो बुद्धि र मनको बुझाइमा जुन सम छ, सबैमा समानभावले देख्ने र सबैलाई सम बुझ्नु छ, यो त हो भाव। यो अन्त:करणको भाव हो। जसको अन्त:करणमा यो भाव छ भने बुझ्नुपर्छ कि त्यसको आत्मा परमात्मामा प्राप्त भइसकेको छ। समता परमात्मालाई प्राप्त भएका पुरुषको कसी हो। यो समता के चीज हो? परमात्मा सम हो। परमात्मामा जुन साधक प्राप्त भयो ऊ परमात्मा नै बन्यो, त्यस महात्माको जुन हृदय छ त्यस शुद्ध हृदयमा परमात्माको आभास आउँछ। प्रतिबिम्ब –जस्तै त्यो समभाव हो। यो जुन असली चन्द्रमा हो, त्यसको प्रतिबिम्ब दर्पणमा पर्छ। चन्द्रमाको जस्तो रूप दर्पणमा छ त्यस्तो नै त्यसको प्रतिबिम्ब पर्छ। किन्तु असली चन्द्रमा आकाशमा छ। परमात्माको उपमा चन्द्रमा हो र शुद्ध हृदयको उपमा दर्पणसित दिइएको छ। अन्त:करण जड हो। अत: अन्त:करणका भाव पनि जड छन्-समभाव त्यस परमात्माको आभासमात्र हो, परमात्माको स्वरूप पनि सम छ। यसकारण यो कुरा भनियो कि जसको हृदयमा समता छ, जसको मन समतामा स्थित छ, जसको बुद्धि सम छ त्यो परमात्मामा प्राप्त भइसक्यो। त्यसको आत्मा परमात्मामा विलीन भयो, हामीहरूलाई यस कुराकानीमा विशेष ध्यान राख्नुपर्छ कि सबैमा हाम्रो समभाव होस्, चाहे मनको अनुकूल होस् र चाहे मनको प्रतिकूल। गुणातीत महात्मा पुरुषहरूको अनुकूल र प्रतिकूल यी दुवै जनामा समभाव रहन्छ।

समदुःखसुखः स्वस्थः समलोष्टाश्मकाञ्चनः।
तुल्यप्रियाप्रियो धीरस्तुल्यनिन्दात्मसंस्तुतिः॥
मानापमानयोस्तुल्यस्तुल्यो मित्रारिपक्षयोः।
सर्वारम्भपरित्यागी गुणातीतः स उच्चते॥

(गीता १४। २४-२५)

जो सुख र दुःखमा सम छ ऊ गुणातीत कहलाउँछ। संसारमा सबै सुख चाहन्छन् दुःख कोही चाहँदैन। समता कहाँ छ? परमात्मा भन्छन् कि '**समदुःखसुखः स्वस्थः**' यानी '**स्व**' जो परमात्मा हो, जुन आफ्नो असली स्वरूप हो, त्यसमा जो स्थित छ त्यो पुरुष सुख-दुःखमा सम छ र '**समलोष्टाश्मकाञ्चनः**' यानी माटो, पत्थर र स्वर्ण- यिनमा जसको सम-बुद्धि छ, समभाव छ, प्रिय-अप्रिय, अनुकूल-प्रतिकूल- यिनमा जो सम छ तथा धीर यानी ज्ञानी छ, स्तुति र निन्दामा जुन सम छ, मान र अपमानमा जुन सम छ, वैरी र मित्रको पक्षमा जुन सम छ तथा जसका कर्महरूमा कर्तापनको अभाव छ, अर्थ यो कि कर्तापनको भावबाट रहित छ यस्ता सबै आरम्भहरूको परित्यागी गुणातीत कहलाउँछ- अर्थात् जीवन्मुक्त ज्ञानी महापुरुष। यिनका यी लक्षण हुन्। यी सबैमा प्रधान कुरा हो- 'समता'। मनमा जुन प्रतिकूलताको भाव छ त्यसलाई हटाउनु छ, सबैमा एक भाव गर्नु छ। कसमा समावेश गर्नुपर्छ? प्रतिकूलतामा जे पनि चेष्टा हुन्छ त्यो भगवान्को इच्छाअनुसार हुन्छ। यद्यपि हाम्रो त मनको प्रतिकूल छ, किन्तु भगवान्को भने मनका अनुकूल छ, हामीलाई त भगवान्को अनुकूलतामा नै प्रतिकूलताको समावेश गर्नु छ। भगवान्को जुन अनुकूल छ त्यही हाम्रो अनुकूल। भगवान्को जुन सिद्धान्त हो त्यही आफ्नो सिद्धान्त हो। जे पनि हुन्छ त्यो

भगवान्‌को विधान हो, त्यो न्याययुक्त छ र मङ्गलमय छ, यसकारण त्यसलाई भगवान्‌को लीला बुझ्नुपर्छ। लीलाको तत्त्व-रहस्य बुझेपछि फेरि आफैं नै एकता हुनेछ, दुई भेद हुन्नन्। लीलामा यो अनुकूल हो र यो प्रतिकूल यस प्रकारका यी दुई भेद भए भने त्यो लीला नै हैन। यो बुझेमा कि जे पनि भइरहेछ भगवान्‌को लीला भइरहेछ भने प्रतिकूलताको त्यहाँ सम्भावना नै हुन्न। जब प्रतिकूलताको सम्भावना छैन भने फेरि यी जति राजसी-तामसी विकार छन् सबै नष्ट हुन्छन्। प्रतिकूलतामा भय हुन्छ, प्रतिकूलतामा नै द्वेष हुन्छ, प्रतिकूलतामा नै वैर हुन्छ, प्रतिकूलतामा नै दु ख हुन्छ, प्रतिकूलतामा नै चिन्ता हुन्छ, प्रतिकूलतामा नै ईर्ष्या हुन्छ, यी सबै प्रतिकूलतामा नै हुन्छन्। समतामा यी सबै स्वाहा हुन्छन्। भगवान् भन्नुहुन्छ-

**हर्षामर्षभयोद्वेगैर्मुक्तो यः स च मे प्रियः॥ (गीता १२।१५)**

हर्ष, अमर्ष यानी ईर्ष्या, भय र उद्वेगले जो सर्वथा रहित छ त्यस्तो भक्त मलाई प्यारो छ। भगवान् निर्विकार र उनका भक्त निर्विकार। परमात्माको तत्त्वज्ञान हुन्छ भने सबैमा समता हुन्छ। यो जुन पर्खाल छ यसका लागि सबै सम छ, यो जड छ। यसलाई चाहे तपाईं गाली दिनुहोस् या यसको प्रशंसा गर्नुहोस्, यो चुप छ, दुवैमा सम छ चाहे पर्खालको मान गर, चाहे अपमान गर। यस पर्खाल झैं बन्नुपर्छ, पर्खाल जड हो र हृदय पनि जड हो तर त्यस हृदयसित जब जीवात्माको एकता भएर त्यसको मालिक बनिबस्छ, तब सबै विकार उत्पन्न हुन्छन्। यदि यो जीवात्मा हृदयबाट हटेर परमात्मा प्राप्त गर्छ र केवल जड हृदय मात्र रहन्छ भने अनि जीवात्मामा कुनै प्रकारको विकार हुन्न। दुवै एक हुनाले नै विकार हुन्छ। जड र चेतनको जहाँ एकता छ त्यहीं

नै सबै विकार उत्पन्न हुन्छन्। न केवल जडमा विकार हुन सक्छ, न केवल चेतनमा। चेतन त निर्विकार शुद्ध छ नै, जडमा जुन विकार हुन्छ त्यो चेतनका संगतले हुन्छ। त्यो विकार जडमा हुन्छ, चेतन मानिलिन्छ आफूमा। यसकारण त्यो जन्मने-मर्ने गरिरहन्छ।

महर्षि पतञ्जलि भन्नुहुन्छ '**संयोगो हेयहेतुः**' हेय अर्थात् त्याग्ने योग्य जुन दुःख छ त्यसको नाम हो हेय। त्यस दुःखको हेतु संयोग हो। जड-चेतनको संयोग भन या प्रकृति-पुरुषको संयोग या आत्मा र बुद्धिको संयोग, एकै कुरा हो। बुद्धि भनिदेऊ, प्रकृति भनिदेऊ, जड भनिदेऊ एकै कुरा हुन्। केवल जड पदार्थमा दुःख हुन सक्दैन, हो हुनै सक्दैन। जति जड पदार्थ हुन् दृश्य पदार्थ हुन् जसको साथमा चैतन्यको सम्बन्ध छैन- जस्तै यो पत्थर हो, पर्खाल हो, घडी हो, टेपरेकर्डर हो; यिनलाई चाहे फुटालिदेऊ, दुःख कसलाई हुनेछ? दुःख हुनेछ उसलाई, जसले यसलाई आफ्नो मान्दछ यानी यो टेपरेकर्डर मेरो हो, यो मेरो घडी हो भन्छ उसैलाई दुःख हुनेछ। घडी र टेपरेकर्डरलाई हुने छैन, किनकि घडी र टेपरेकर्डर त जड हुन्। यिनमा अधिकार जमाउनेवाला चेतन हो, जड-मिश्रित चेतनबुद्धिले मिलेको चेतन छ त्यसलाई दुःख हुन्छ, घडीलाई, टेपरेकर्डरलाई हुन्न। यसै प्रकार, यस शरीरभित्र जुन अन्तःकरण छ, बुद्धि छ र त्यसमा जुन एक व्यष्टि चेतन आफ्नो घर जमाएर बसेको छ जसलाई जीवात्मा भन्छन् ऊ सुखी-दुःखी हुन्छ- यस जडको संयोगसित, जडलाई आत्मा मान्नाले। यस्तो किन भइरहेछ? अविद्याले, अज्ञानले '**तस्य हेतुरविद्या**' यस संयोगको हेतु अविद्या हो। जड र चेतन- यिनीहरू दुवै परस्पर एक-अर्काबाट भिन्न हुन् ती दुवैको जुन एकता लाग्छ त्यो अज्ञानका कारण मानिराखिएको

हो। यसकारणले सुख-दुःख हुन्छ जसको हेतु केवल अज्ञान हो जसलाई अविद्या भन्छन्। अनात्म देहमा जुन आत्मबुद्धि छ त्यसको नाम अविद्या हो। शरीर आदि जुन विनाशको वस्तु हो यसलाई सत्य मान्नु, नित्य मान्नु, यसको नाम हो अविद्या। यो शरीर दुःखको घर हो। संसारका विषय-भोग सबै दुःखका घर हुनाले दुःख-रूप नै हुन्। जसलाई तपाईं सुख बुझ्नुहुन्छ त्यसले पनि परिणाममा दुःख दिने हुनाले तथा तिनका संस्कार समेत दुःख दिनेवाला हुनाले सबै दुःख नै हुन्। तर पनि नबुझेर ती दुःखमा नै जुन सुख-बुद्धि हुन्छ त्यो नै हो अविद्या। यो शरीर जुन महान् अपवित्र छ यसलाई 'म शरीर हूँ' यस्तो मानेर, 'म पवित्र हूँ म शुद्ध हूँ' यो मान्नु पनि अविद्या नै हो। अर्थात् विपरीत ज्ञानको नाम अविद्या हो। यो संयोग जुन छ त्यसको हेतु अविद्या हो। आत्मा चेतन हो, शरीर जड हो भने दुवैमा मेल कसरी हुन सक्छ? यिनमा मेल मान्नु नै अज्ञान हो। यस अज्ञानलाई हटाउनका लागि सबभन्दा ठूलो साधन हो ज्ञान। त्यस ज्ञानको प्राप्ति हुन्छ सत्पुरुषहरूका संगतले, यानी ज्ञानीहरूका संगतले ज्ञान मिल्छ जबकि हामीहरू अधिक संगत अज्ञानीहरूको गर्छौं। अज्ञानीहरूका संगतले अज्ञान टाढा हुन्न।

दोश्रो उपाय हो शास्त्रको अनुशीलन। महापुरुषहरूका जुन वचन छन् पत्र छन् लेख छन् उपदेश छन् या पुस्तकहरू छन् महापुरुषहरूका पनि महापुरुष भगवान् श्रीकृष्णजीका जुन वचन छन्- उपदेश छन् ती त साक्षात् महान् अमृत हुन्। जस्तै 'गीता' छ र पनि जति शास्त्र छन् यी ऋषिहरूका वचन हुन् महापुरुषहरूका वचन हुन् तिनको 'संग' तिनमा प्रीति, तिनलाई श्रवण गरी-गरी तिनलाई धारण गर्नाले ज्ञान उत्पन्न हुन्छ। यानी शास्त्रका

अनुशीलनबाट ज्ञान हुन्छ, सत्पुरुषहरूका संगतले ज्ञान हुन्छ र निष्कामकर्मद्वारा अन्तःकरणलाई शुद्ध गरेमा त फेरि त्यसमा ज्ञान आफैं नै जन्मिन्छ। परलोक, ईश्वर, महात्मा, शास्त्र- यिनमा विश्वास गरेमा, मानेमा, तिनमा श्रद्धा राखेमा त त्यस श्रद्धाले पनि ज्ञान जन्मिन्छ। ईश्वरको भक्ति गर्नाले, ईश्वरको कृपाले पनि ज्ञान हुन्छ र ज्ञान-प्राप्तिका जुन धेरै-जसो साधन भनिएका छन् तिनको सेवन गर्नाले पनि ज्ञान जन्मिन्छ। ज्ञानप्राप्तिका धेरै-जसो उपाय छन् तिनीहरूमध्ये कुनै पनि उपाय अवलम्बन गर्नाले ज्ञान हुन्छ। ज्ञान हुनाले अज्ञानको नाश हुन्छ, जस्तै सूर्यको उदय हुनाले अन्धकारको नाश हुन्छ, यसरी नै ज्ञानको उदय हुनाले अज्ञानको नाश हुन्छ। ज्ञानका सम्बन्धमा गीतामा सबै कुराहरू भनिएका छन्- जस्तै भक्ति गर्नाले भक्ति गर्नेवालालाई भगवान्ले ज्ञान दिन्छन् यो भगवान्ले गीताको दसौं अध्यायको दसौं र एघारौं श्लोकमा बताएका छन् महात्मा पुरुषहरूको शरणमा जानाले ज्ञान हुन्छ यो गीताको चौथो अध्यायको चौंतीसौं श्लोकमा र तेह्रौं अध्यायको पच्चीसौं श्लोकमा बताएका छन् निष्कामभावले कर्म गर्नाले आफैं नै ज्ञान हुने कुरा चौथो अध्यायको अठतीसौं श्लोकमा भनिएको छ, ईश्वर तथा परलोक र महात्मा एवं शास्त्र- यिनमा श्रद्धा गर्नाले ज्ञान हुने कुरा चौथो अध्यायको उनन्चालीसौं श्लोकमा भनिएको छ, ज्ञानका साधनहरूले ज्ञान हुन्छ भन्ने कुरा गीताको अठारौं अध्यायको पचासौं श्लोकबाट लिएर पचपन्नौं श्लोकसम्ममा प्रस्तुत साधनहरूद्वारा भनिएको छ। सबै साधनहरूको नाम नै ज्ञान हो, यो गीताको तेह्रौं अध्यायको सातौं श्लोकदेखि लिएर एघारौं श्लोकसम्म भनिएको छ। गीता त ज्ञानले ओत-प्रोत छ, भरिएको छ, गीताप्रेरित जीवन सम्पादन

गर्नाले नै मनुष्यलाई शान्ति मिल्छ, आनन्द मिल्छ। मनुष्यमा राग-द्वेषको मात्रा जति अधिक हुन्छ उति नै ऊ परमात्माबाट टाढा हुन्छ र त्यति नै त्यसमा विषमता हुन्छ। जसको अन्त:करणमा समता आउँछ त्यसमा राग-द्वेषको मात्रा घट्दै-घट्दै एकदमै घट्छ। समता नै परमात्माको स्वरूप हो, यानी स्वरूपको प्राप्तिमा हेतु हुने हुनाले स्वरूप नै भनिन्छ भने कुनै हानिको कुरा हैन। साधकको र सिद्धको- दुवै जनाको समता एउटै कसी हो। जसमा समता नै छैन त्यो साधक साधक हैन, सिद्ध सिद्ध हैन। समतालाई यहाँसम्म पुर्याइदिनु छ कि सबैमा समभाव होओस्। यो जुन विषमता हो त्यो अज्ञानले हो।

एक जना भाइले मेरो प्रशंसा गरिदिए र अर्काले मेरो निन्दा गरिदिए। एकले भनिदिए कि जयदयाल बडो राम्रो छ, महात्मा हो, ज्ञानी हो, योगी हो र अर्काले भनिदिए कि हैन, यो त दम्भी हो, पाखण्डी हो, बदमाश हो, चोर हो। दुवै जनाका शब्द वस्तुत: शब्द हुन् अरू के चीज हुन्?

शब्द आकाशको गुण हो, त्यससित आत्माको के सम्बन्ध? किनकि जुन 'जयदयाल' को निन्दा या प्रशंसा हो- यी दुवै कसका हुन्? जयदयालका हुन् नि? यो जयदयाल हो को? जयदयाल भनिएको शरीरमा जुन आत्मा छ त्यसको नाम त जयदयाल हैन! आत्मा त नित्य र सत्य हो। जब यो शरीर गर्भमा थियो तब पनि आत्मा उपस्थित थियो नै, किन्तु जयदयाल नाम त्यस समय थिएन। जयदयाल नाम त एक औपचारिक हो, काल्पनिक हो, मिथ्या हो। आत्मा जयदयाल कसरी हुन सक्छ? जब यो जन्मियो त घरवालाहरूले भने होलान् कि पुत्र जन्मिएछ। त्यो समय पनि जयदयाल थिएन। थोरै दिनपछि परामर्श भयो

कि यसको के नाम राख्नुपर्ला, कसैले भन्यो होला रामचन्द्र, कसैले कृष्णदत्त, कसैले रामदत्त- यस्तो हुँदा-हुँदै कसैले भनिदिए कि जयदयाल राखिदेऊ त जयदयाल कायम गरिदिए। धेरै दिनसम्म म आफैंलाई थाहा पनि भएन कि यी मान्छेहरू जयदयाल-जयदयाल भन्ने के बोलिरहेका छन् धेरै दिनपछि बल्ल यो बुझें कि मलाई नै मान्छेहरू जयदयाल भन्छन्। तिनीहरूद्वारा छाँटिएको जुन जयदयाल नाम थियो त्यसैलाई म आफ्नो नाम मान्न लागें। त्यसपछि कोही जयदयालको निन्दा गर्थ्यो त म मान्न लाग्थें कि यी मान्छेहरू मेरो निन्दा गरिरहेका छन्। स्तुति गर्थे त म यो बुझ्थें कि यिनीहरू मेरो स्तुति गरिरहेका छन्। वास्तवमा जयदयालको निन्दा तथा जयदयालको स्तुतिमा जयदयालको कुनै सम्बन्ध छैन। म त आत्मा हूँ ममा त्यसको के प्रयोजन। यसको नाम हो ज्ञान। जब ज्ञान हुन्छ भने चाहे कोही निन्दा गरोस् चाहे स्तुति। यसै प्रकारले मान तथा अपमानमा होस्। मान तथा अपमान हुन्छ शरीरको। शरीर त जयदयाल हैन र म कुनै शरीर होइन यो त नाशवान् छ, घट-बढ भइरहन्छ र एकदम विनाश हुनेवाला छ, यस्ता मांसपिण्डलाई म आफ्ना आत्मा मानूँ कि यो 'म हूँ', यही नै त मूर्खता हो। यो मर्नाले आफू मरेको मान्नु, यो कायम रहनाले आफू कायम रहेको मान्नु, यो त जन्मने-मर्ने चीज हो, तर यो जुन आफू मान्ने दृढ मान्यता छ, त्यसैका कारणले आफ्नो जन्म-मरण भइरहन्छ। ख्याल गरेर हेर्नू कि शरीर आत्मा कसरी हुन सक्छ? यदि कुनै कारणले हाम्रो हात काटियो भने काटिएका हातमा यसलाई आफ्नो आत्मा प्रतीत हुन्न, चाहे त्यसलाई जलाऊ, चाहे गाड, दुःखाइ पनि हुन्न, किनकि म त्यसमा आफ्नो आत्मा मान्दिनँ र जहाँ म आफ्नो

आत्मा मान्दछु त्यहीं नै दुःख हुन्छ। यो मानिएको कुरा हो, वास्तवमा हो भने त हात काटिएपछि पनि त्यसमा हाम्रो आत्मा प्रतीत हुनुपर्थ्यो। कुरा त साँचो हैन, मानिएको छ, जब यस्तो कुरा हो तब शरीरमा कुनै प्रकारले आत्मा छँदै छैन। शरीरलाई चाहे कोही मान गरोस् या अपमान गरोस्, काटिएको हातलाई चाहे कोही जलाओस्, चाहे काटोस्। हातको यो एक उदाहरण हो। त्यस्तै अर्को हात छ। त्यस्तै हाम्रा पयर छन्। यो कुरा जब बुझाइमा आयो भने त्यसको नाम हो ज्ञान। फेरि त मान-अपमान दुवै समान हुन्छन्। रत्तिभर पनि तिनमा कुनै फरक रहँदैन, हामी देख्छौं कि एक पर्खाललाई कोही गाली दिन्छ, एक पर्खाललाई कोही प्रशंसा गर्छ तर के ती गालीको हामीमाथि कुनै असर पर्छ? बाटोमा हिंड्छौं, धेरै-जसो पदार्थ पाइन्छन्। कोही कसैको प्रशंसा गर्छ, कोही कसैको निन्दा गरिरहन्छ। तर कसले ध्यान दिन्छ? आफ्नो कुनै सम्बन्ध नै छैन। यसै प्रकारले जब ज्ञान हुन्छ भने यी सबै पदार्थ समान हुन्छन् सबै क्रियाहरू समान हुन्छन्। सबै भाव समान हुन्छन्। सबै पदार्थ, सबै क्रियाहरू सबै भाव, सबै घटनाहरू सबै एकदम समान हुन्छन्। स्वप्नबाट ब्युँझेपछि स्वप्नमा जे घटनाहरू भए तिनमा फेरि के कुनै राग-द्वेष रहन्छ? यो थाहा हुन्छ कि स्वप्नका घटना थिए। सबै काल्पनिक कुरा थिए, मनका संकल्प थिए। त्यसरी नै जब थाहा हुन्छ कि यो संसार भगवान्‌को संकल्प हो र वास्तवमा कुनै चीज छैन फेरि कुनै विकार रहन्न, सबैमा समता आउँछ। यी कुरालाई बुझेर सबैमा समता आओस् यसका लागि विशेष प्रयत्न गर्नुपर्छ। ईश्वरको कृपाले पनि समता आउँछ, महापुरुषहरूका संगतले पनि यो कुरा आउँछ, शास्त्रका अनुशीलनबाट पनि यो कुरा आउँछ,

ईश्वरको भक्तिबाट पनि यो कुरा आउँछ र विचारले पनि यो कुरा आउँछ, अन्त:करण शुद्ध हुनाले पनि यो कुरा आउँछ। अन्त:करण शुद्ध चाहे भगवान्‌को भजनले होस्, चाहे निष्कामकर्मले, चाहे तीर्थ-व्रत गर्नाले होस्, चाहे सत्संगले होस्, अन्त:करण शुद्ध भएमा ज्ञान आफैं जन्मिन्छ। जस्तै उज्ज्वल दर्पणमा आफैं प्रतिबिम्ब पर्छ, त्यसै प्रकार अन्त:करणलाई एकदम शुद्ध र उज्ज्वल बनाउनुपर्छ। अन्त:करण शुद्ध बनाउने सबै उपायमा भगवान्‌को भक्ति सुगम छ, भक्ति गर्दा भगवान्‌को कृपाले यस कलियुगमा धेरै नै शीघ्र अन्त:करण शुद्ध भएर परमात्माको प्राप्ति हुन्छ।

नारायण! नारायण! नारायण!

॥ श्रीहरिः ॥

# नियमहरूको पालनले कल्याण

लोकमा शिक्षाको महान् महत्त्व छ; शिक्षाको धारण र आचरणको पनि महान् महत्त्व छ। अतः कुनै पनि प्रकारको शिक्षाको कुरा भनिन्छ भने त्यसलाई सुन्दाबित्तिकै धारण गरेर लिएमा धेरै नै शीघ्र काम हुन्छ, परन्तु यदि सुनेर प्रयोगमा नल्याए चाहे प्रतिदिन सुनौं, फेरि पनि त्यसको विशेष असर हुन्न। यही स्थिति आम मान्छेहरूको भइरहेछ। धेरै समय शिक्षाको कुरा सुन्छौं तर तिनलाई प्रयोगमा धेरै कम ल्याउँछौं। शिक्षालाई यस दृष्टिले आफ्नो प्रयोगमा ल्याउनुपर्छ कि यो कुरा शास्त्र भन्छन् यसलाई महात्माहरू भन्छन् भनेर। हाम्रा आफ्नै मान्छेहरूले यो गर्नुपर्छ नै, रतिभर पनि अगि–पछि गर्नुहुँदैन। चाहे जेसुकै पनि होस्, सामान्य कुराका लागि पनि चाहे प्राण नै जाऊन् आफूले त्यही कुरा गर्नुपर्छ जुन सुनियो र महात्माहरूद्वारा भनियो। यदि यति दृढ धारणा गर्ने हो भने धेरै चाँडै काम हुन्छ तर यदि तपाईंले आलस्यका कारण, शरीरको आरामका कारण या कुनै पनि अरू बहानाले अवहेलना गरेमा त त्यही काम पनि मुश्किल हुनेछ।

हिजो मैले महाभारतको यौटा कथा पढें, पढ्दा मनमा आश्चर्य भयो। जरत्कारु ऋषिलाई श्रीमतीले सायंकालमा उठाइदिइन् किनकि उनको सन्ध्याको समय भएको थियो। उनी दिउँसोबाट तेस्रो प्रहरसम्म आफ्नी श्रीमतीका काखमा सिरानी गरेर सुतेका थिए। श्रीमतीले तिनलाई उठाइदिंदा उनी आफ्नी श्रीमतीसित

क्रोध गरेर बोले- 'तिमीले मलाई किन उठाइदियौ?' तिनले भनिन्- 'स्वामिन्! सूर्यभगवान् अस्ताचलतिर गइरहेछन् यानी सूर्य अब अस्ताउँदै छन् तपाईंको यो नियम हो कि सूर्य रहँदै संध्या गर्नु। म यदि यस समय तपाईंलाई उठाउन्नथें भने तपाईंको धर्ममा बाधा आउँथ्यो, यसकारण मैले तपाईंलाई उठाइदिएँ।' तिनले भने- 'म सुतिरहूँ र सूर्य अस्ताचलतिर जाऊन् सूर्यमा यो सामर्थ्य नै छैन। यो हुनै सक्दैन। मेरा हृदयमा यो निश्चय छ कि म जबसम्म उठेर सन्ध्या गर्ने छैनँ, सूर्य अस्ताउने छैनन्। यति दृढ विश्वास छ।' यसको भाव यो हो कि यदि कुनै मान्छे सूर्यको उपासना गर्छ भने सूर्यलाई पनि त्यस मान्छेको उपासनामाथि निगाह राख्नुपर्नेछ। यस्तो जसको नियम छ कि सूर्य रहँदै संध्या गर्नु छ भने सूर्य पनि त्यसका लागि रोकिन्छन्। यो कुरा देख्न-सुन्नमा कति आश्चर्यको लाग्छ। आजभोलि त यस्तो देखिंदै देखिन्न कि सूर्यभगवान् पनि रोकियून्। किन्तु महाभारतमा यो कथा आएको छ।

यसै प्रकारले पतिव्रता स्त्रीको कथा पनि छ। एक पतिव्रता स्त्रीले भनिन् कि सूर्योदय हुनाले यदि मेरा पति नै मर्छन् भने सूर्योदय नै किन होस्? स्त्रीको संकल्पले सूर्यको चाल बन्द भयो र सूर्य रोकिए। जयद्रथका लागि पनि भगवान्‌ले यस्तै आश्चर्यजनक कुरा देखाउनुभएको छ। जब जयद्रथ मारियो त हो-हल्ला मच्चियो कि यो अन्याय भयो, सूर्य अस्त हुँदा जयद्रथ मारियो। भगवान् त्यहाँ उभिनुभएको थियो, बोल्नुभयो- सूर्यभगवान् अहिले पनि उपस्थित छन् प्रत्यक्ष कुरा छ। सूर्य अहिले नै अस्त भएका छैनन्। उनी देखिइरहेका छन्। भगवान् सृष्टिको रचना

गर्नेवाला हुन् उनीले चाहेमा जस्तो पनि गर्न सक्छन्। भगवान्का अतिरिक्त संध्या गर्नेवाला व्यक्तिको प्रभाव र पतिव्रता स्त्रीको प्रभाव पनि तपाईंले देख्नुभयो। किन्तु आजभोलि कोही पनि यस्ता प्रभावशाली व्यक्ति देखिइरहेका छैनन्। के थाहा सबै मरे या गए; परन्तु उस समयमा नियमका संकल्पवद्धताले यस्ता-यस्ता आश्चर्यजनक कुराहरू पनि हुन्थे। तपाईंले विश्वास गर्नुपर्छ कि यी कुराहरू जुन शास्त्रहरूमा लेखिएका छन् ती पूरा ठीक छन् कुनै गलत छैनन् किनकि त्यस समयका मान्छेहरू नियमका बडा पक्का थिए। चाहे जे होस् आफ्ना नियमलाई पालन गर्थे तर अचेल हामीमा यो दोष आएको छ कि यदि थोरै पनि आपत्ति आयो भने आफ्ना सुविधाका लागि नियमलाई छोड्दै अलग्गै गएर उभिन्छौं।

उदाहरणार्थ, एलोपैथी औषधीहरूमा मदिरा मिलेको हुन्छ, यिनको सेवनमा कति ठूलो महापाप छ भने कुनै पनि बहानाले यदि एकपटक पनि मदिरा पियौं भने ठूलो दोष हुन्छ, मदिरापानको शास्त्र विरोध गर्छ। यदि तपाईं मदिरापानको प्रायश्चित्त गर्न चाहनुहुन्छ भने गायत्री-मन्त्रको (जसको यज्ञोपवीत भयो उनलाई) एक हजार जप प्रतिदिन तीन साल या एक सालसम्म गर्नुको विधान छ। यदि प्रतिदिन पिउँछ भने त सोचौं त्यसले कति वर्ष गर्नुपर्ला, डॉक्टरी दवाई कोही मुखबाट खान्छन् कोही इंजेक्सनद्वारा खान्छन् शरीरमा थोरै पनि आपत्ति आयो भने मान्छेहरू सहन गर्दैनन् हत्त न पत्त च्युत हुन्छन्। किन्तु प्राचीन मान्छेहरू नियमका यति पक्का थिए कि प्राण चाहे जाओस्, परन्तु आफ्नो धर्मको त्याग गर्थेनन्। त्यही भएर त त्यो बेलामा

धर्मले पनि तिनलाई प्रत्यक्ष फल देखाउँदथ्यो। राजा युधिष्ठिरमाथि ठूलो-भन्दा-ठूलो आपत्ति आयो, किन्तु तिनले आफ्नो धर्मको त्याग गरेनन्। धर्मपालनको यो प्रभाव थियो कि जुन देशमा राजा युधिष्ठिर वास गर्थे त्यस देशमा अकाल पर्दैनथ्यो, महामारी आउन्नथ्यो, दैवी प्रकोप हुन्थेनन्। धनको वृद्धि हुन्थ्यो, धान्यको वृद्धि हुन्थ्यो, धर्मको वृद्धि हुन्थ्यो, सत्यको वृद्धि हुन्थ्यो- यी चीजहरूको वृद्धि हुन्थ्यो। उनी सत्य बोल्दथे यसकारण सत्यको वृद्धि हुन्थ्यो। जुन मान्छेले धर्मको पालन गर्छ त्यसको यति प्रभाव पर्छ कि त्यसका अगाडि अरू मान्छेहरू पनि धर्मको पालना गर्न लाग्छन्। यहाँसम्म भनिएको छ कि युधिष्ठिरका शरीरबाट रगत निक्लेर यदि भुइँमा खस्यो भने त्यहाँ बाह्र वर्षसम्म अकाल पर्थ्यो। राजा नहुषले उनीसित वार्तालाप गरे त नहुषको पापको नाश भयो। कुराकानी गर्नाले, प्रश्नोत्तर गर्नाले, दर्शन गर्नाले पनि पापको नाश हुन्छ। यो कति महत्त्वको कुरा हो। किन्तु युधिष्ठिर धर्ममा डटिरहे यसकारण मृत्युले पनि तिनलाई मार्न सकेन। उनी आफ्नो भौतिक शरीरसितै स्वर्ग गए। उनको सबै ठाउँमा गति थियो, चाहे स्वर्ग होस्, चाहे वैकुण्ठ। जहाँ इच्छा हुन्थ्यो त्यहीं नै जान्थे। उनमा यो अलौकिक शक्ति देखिएको छ। उनी सत्यको पालन गर्थे। सत्यका प्रभावले उनका रथका पाङ्ग्रा जमीनभन्दा माथि हिंड्ने गर्थे, जब युधिष्ठिर रथमा पयर राख्थे तब रथका पाङ्ग्राहरू जमीनभन्दा माथि उठ्थे। वहाँले आफ्नो आयुभरिमा एक नै पटक झुटो बोल्नुभयो। त्यो झुटको नतिजा यो भयो कि त्यही दिन रथका पाङ्ग्राहरू भुइँमाथि खसे। अश्वत्थामा(हात्ती) मार्ने समयमा थोरै जिभ्रो दबाएर भनिदिए कि

अश्वत्थामा त मरे किन्तु मर्‍यो हात्ती। शब्द त सत्य थिए, किन्तु गुरु द्रोणाचार्यले सुनेनन् कि हात्ती मर्‍यो या मेरो छोरा नै मरेको हो। उनका शब्द सुनेर गुरूले आफ्नो प्राण त्यागिदिए। यो तरिकाले झुटो बोल्नुको पाप पनि युधिष्ठिरलाई लाग्यो, किनकि द्रोणाचार्यले जे बुझे त्यही कुरा साँचो मानियो, युधिष्ठिरको कुरा साँचो मानिएन। आफूले कसैलाई कुनै कुरा भनिन्छ वा सम्झाइन्छ भने उसले जे बुझ्छ त्यही कुरा साँचो मानिन्छ। यदि उसले ठीकसित बुझेन भने आफ्नो भन्नुको कुनै मूल्य छैन, आफ्नो नियतमा कुनै दोष हुनुहुँदैन। शब्द त भनिदियौं किन्तु यदि त्यो कपटयुक्त छ भने मिथ्या हुन्छ। यसरी सत्यको प्रभावलाई पनि देखाइएको छ र सत्य त्यागेको प्रभाव पनि देखाइएको छ। यी सबै कुराहरूलाई बुझेर आफ्ना नियम-पालनमा धेरै नै दृढ रहनुपर्छ।

हाम्रा साधकहरूले कतिपटक सत्संगको नियम बनाए। कैयौं दिनसम्म नियमलाई प्रयोगमा ल्याए, फेरि छोडिदिए, फेरि बनाए, फेरि छोडिदिए। यसबाट के लाभ भयो। लाभ त त्यो बेलामा हुन सक्छ जब तपाईं सानासाना नियममा पनि दृढ रहनुहोस्-कायम रहनुहोस्। एकातिर प्राणको पालना गरियोस् र अर्कोतिर नियमहरूको पालन गरियोस्। यो कसरी? यसको उदाहरणमा हिजोअस्ति नै हामीले कथा पढ्यौं। श्रृंगी ऋषिले राजा परीक्षित्लाई श्राप दिए। उनका पिता महर्षि शमीकले उनलाई गुनासो गर्दै भने-वत्स! उनी राजा हुन् धर्मात्मा हुन् सबै प्रकारले जनताको रक्षा गर्छन् अतः राजालाई यसरी श्राप दिनुहुँदैनथ्यो। तिमीले यो ठूलो नै गल्ती गरेका छौ। पुत्रले जोड दिंदै भने कि- गल्ती गरेको छैनँ, मैले जे गरेको छु त्यो ठीक गरेको छु। मेरा कुरा एकदमै सोह्रै

आना सत्य हुनेछन्। मैले कहिल्यै पनि हाँसोमा समेत झुटो बोलेको छैनँ। म स्वेच्छापूर्वक र स्वाभाविकरूपले बोल्छु, कहिल्यै मिथ्या बोल्दिनँ। मेरो वचन सत्य नै हुनेछ। राजा अवश्य मर्नु नै हुनेछ। फेरि पिताले पनि समर्थन गर्दै भने कि ठीक हो तिमी सत्यवादी हौ, बालकपनको सहजतामा नै सत्य बोल्छौ, मैले कहिल्यै पनि तिम्रा कुरा मिथ्या सुनिनँ। तिम्रा वचन सत्य हुनेछन्। तर यो कुरा थपेर भन्छु कि तिमी अहिले पनि बच्चा छौ, म तिम्रो पिता हुँ, पिताका सामुन्ने छोराहरू सदैव बच्चा नै हुन्छन्। यसकारण पनि मेरो यो नै कर्तव्य हो कि यदि तिमी गल्ती गर्छौ भने म तिमीलाई सम्झाऊँ कि तिमीले यो गल्ती गरेका छौ। म राजा परीक्षित्लाई यो नै कुरा भन्नेछु कि मेरो मूढ़मति छोराले तपाईंलाई जुन श्राप दिएका छन् त्यो श्राप त मिथ्या हुने छैन, तर तपाईं यसको बचाउको प्रयत्न गर्नुहोस्। तपाईंले केही गर्नुहोला भनी सावधान गरिदिएको छु। सन्देश दिन उनीद्वारा पठाइएका शिष्य पनि धेरै नै सदाचारी थिए। तिनले राजाको सभामा गएर सन्देश जस्ताको तस्तै जस्तो ऋषिद्वारा भनिएको थियो राजासित भनिदिए। राजाले पनि सुनेर यो नै निश्चय गरे, ठीकै हो मेरो ठूलो अपराध छ। राजाले भने कि उनको श्रापले म मर्नेछु मलाई यसको चिन्ता हैन, परन्तु मबाट जुन यो अपराध भयो त्यसको मलाई ठूलो चिन्ता छ। राजाले श्राप दिनेमाथि दोष लगाएनन् आफूमाथि नै दोष लगाए कि मैले ठूलो गल्ती गरें। ध्यानमा बसेका ऋषिका गलामा मरेको सर्प हालिदिएँ। ती धैर्यशाली ऋषिका गलामा सर्प हालिदिएँ तैपनि उनी त्यत्तिकै बसिरहे। यो होइन कि राजामाथि क्रोध गरे। त्यो

सर्प काँधमाथि रहिरह्यो नै। ऋषिमा कति ठूलो धैर्य थियो। ऋषिका पुत्रले त्यसका बदलामा श्राप दिए। आजभोलिका पिता भएका भए भन्थे कि तिमीले धेरै राम्रो काम गऱ्यौ। त्यसले जसरी दुष्टता गऱ्यो त्यसरी नै तिमीले पनि उसलाई श्राप दियौ। किन्तु शमीक ऋषिले यो कुरा भने कि छोरा! तिमीले यो कुरा अनुचित गऱ्यौ, तिम्रो यो गराइ उचित थिएन। राजासित ऋषिले यो नै कुरा भन्न लगाए कि मेरा मूढ़मति छोराले बाल-चपलताका कारण जुन तपाईंद्वारा अपराध भयो त्यसको बदलामा श्राप दिए, यो काम अनुचित छ। यस्ता हर एक कुराकानी-कहानीबाट हामीले शिक्षा लिनुपर्छ। आजभोलि म महाभारत पढ्छु त मलाई यस्ता शिक्षाका कुराहरू मिल्छन्। उसो त महाभारत मैले धेरैपटक पढे-सुनेको छु, तर जबजब त्यो सामुन्ने आउँछ त प्रत्येकपटक नयाँ-नयाँ भावहरूको जागृति हुन्छ र त्यसबाट ठूलो शिक्षा मिल्छ कि हेर ती महापुरूषहरूमा कस्तो दृढता थियो- त्यत्तिकै दृढता मनुष्यमा पनि हुनुपर्छ।

हामीहरूमा दृढता छैन यसकारणले सफलता मिल्दैन। मान्छे जे मा डटेर रहन्छ त्यसमा सफलता छ। यसकारण आफ्नो जुन कर्तव्य छ, नियमहरूको पालना छ, तिनलाई सदा प्रयोगमा ल्याउनुपर्छ। कुनै पनि प्रकारले पालनाबाट विचलित हुनुहुँदैन। कुनै पनि प्रकारको आपत्ति आओस्, कानुनको आपत्ति आओस्, शरीरको आपत्ति आओस्- कानुनको होस् या दाइको होस् या सरकारको होस्। यद्यपि सरकारको कानुन नमानेमा सरकारले दण्ड दिनेछ। दण्ड चाहे होस् नै तर जहाँ भगवान्को कानुन मान्नुमा सरकारी कानुनको बाधा आउँछ त्यहाँ सरकारी कानुन

मान्नु छैन यो दृढ निश्चय हो। यसरी नै ईश्वरको कानुनको कुरा आउँछ भने त्यसमा पनि खूब सतर्क रहनुपर्छ। सानो वा ठूलो जस्तो पनि कुराको यदि तपाईं पालन गर्नुहुन्छ भने त्यसमा कायम नै रहनुपर्छ।

हिजोअस्ति जुन कुरा मैले पढें, ती सबै कुरा तपाईंहरूलाई भनियो। पहिल्यै पनि काम परेको थियो। प्रतिदिन काम पर्छ यो ताजा कुरा हो, यसकारण तपाईंहरूलाई हिजोको कुरा भनियो। हिजो महाभारतमा यी सबै कुराहरू पढ्नमा आए। यसबाट मनमा यो भाव उठ्यो कि मनुष्यलाई खूब मजबुती राख्नुपर्छ। आफ्नो धर्ममाथि दृढ रहनुपर्छ। दुई–तीन दिन पहिला दृढताका सम्बन्धमा उपमन्युको प्रसंग पढेको थिएँ। कथामा गुरुजीले भन्नुहुन्छ कि उपमन्यु! तिमी भिक्षा ल्याएर सिधै मलाई दिन्छौ फेरि पनि तिमी मोटा–ताजा कसरी छौ? म तिमीलाई खानका लागि भिक्षा पनि दिन्नँ, नखाईकन तिमी मोटा–ताजा कसरी छौ? उनीले भने– म भिक्षा अर्कोपटक मागेर ल्याउँछु। गुरुजीले भने– यो शास्त्रविरुद्ध हो। दुईपटक भिक्षा माग्नुहुन्न। भिक्षामा एकपटक जे पनि मिल्छ, भयो, त्यत्ति नै ठीक हुन्छ। दुईपटक भिक्षा कहिल्यै माग्नुहुन्न। उनी बोले– ठीक हो, अब माग्ने छैनँ। अझै पनि उनी मोटा–ताजा नै रहे, फेरि गुरुजीले सोधे– तिमी सबै भिक्षा ल्याएर मलाई दिन्छौ र म तिमीलाई भिक्षा पनि दिन्नँ, अर्कोपटक मागेर ल्याउँदैनौ भने यसरी मोटो–ताजा कसरी छौ? उनी बोले– म गाईको दूध पिउँछु। गुरुजीले भने– नाइँ, गाईको दूध पिउनुहुँदैन। तिमीले दूध पिएमा बाच्छा भोका रहनेछन्। उनी बोले– ठीक हो, अबदेखि पिउने छैनँ। अझै पनि उनी मोटा–ताजा देखिए। फेरि

गुरुजीले भने– तिमी अर्कोपटक भिक्षा पनि ल्याउँदैनौ, न गाईको दूध नै पिउँछौ तैपनि मोटो–ताजा कसरी छौ? उनी बोले– जब बाच्छाले दूध पिउँछ त्यो बेलामा मुखबाट फिंज निकाल्छ, त्यही फ़िंज पिउँछु। बाच्छाहरू त धेरै छन् नि! त्यसकारण तिनबाट पेट भरिन्छ। गुरुजीले भने– बाच्छाहरूले दूध पिउँदा तिम्रा निम्ति धेरै फिंज छोडिदिन्छन् र भोकै रहन्छन् त्यसकारण त्यो फिंज पनि तिमीले पिउनुहुँदैन। उनी बोले– ठीक छ, पिउने छैनँ। अब उनी न त फिंज पिउँथे, न खान्थे। भोकभोकै मर्ने लायक भए, जब अति भोक लाग्यो त आँकको पात खाए। आँकको पात खानाले उनी अन्धा भए जसले गर्दा उनी एक दिन कुँआमा खसे। गुरुजीले शिष्यहरूसित सोधे कि आज उपमन्यु किन आएनन्? फेरि बोल्नुभयो– जाऔं जंगलमा खोज गरौं। जंगलमा खोज्न गए त कुँआभित्र भेटिए। गुरुजीले सोधे– उपमन्यु कुँआमा कसरी खस्यौ? उनी बोले– महाराज! भोजन त सबै बन्द भएथ्यो। भोक लाग्यो, आँकको पात खाएँ जसले गर्दा अन्धो भएँ। गाईहरूलाई चराउँदा–चराउँदै कुँआमा खसें। गुरुजीले भने– तिमी अश्विनीकुमारका स्तोत्रको पाठ गर। यति भनेर गुरुजी गए। उपमन्युले कुँआमा नै अश्विनीकुमारका स्तोत्रको पाठ गरे। अश्विनीकुमार आए। आएर तिनीसित बोले कि तिमी यो पुवा खाऊ र अमृत पिऊ। उनी बोले– म गुरूले नदिईकन यो अमृत कसरी पिऊँ? फेरि अश्विनीकुमारहरूले नेत्र पनि दिए, बल पनि दिए। त्यसपछि उनी गुरूका साथमा आए। सबै कुरा भने। तब गुरुले भने कि तिमी अब आफ्ना घर जाऊ। तिमीलाई सबै शास्त्रहरूको ज्ञान हुनेछ, तिम्रो अभीष्ट सिद्ध हुनेछ। तिम्रो सारा काम सिद्ध हुनेछ।

वेदहरूको-ब्रह्मको उपमन्युलाई सबै ज्ञान भयो। यसरी गुरुले उपदेश दिए। कुनै पनि कुरा होस् त्यसको दृढतातिर ख्याल गर्नुपर्छ, जुन कुरा भनिन्छ त्यसलाई अवश्य गर्नुपर्छ, कति नै कष्ट होस्। जुन कुरालाई शास्त्रले रोकेका छन् त्यस कामलाई त नगरोस् नै, साथसाथै आफ्ना माता, पिता, मालिक, ठूला, कोही कसैले पनि केही कुरा आफूलाई भनेमा, आज्ञा गरेमा, त्यसका लागि आफ्नो जीवनमा तपाईंले कहिल्यै नाइँ गर्नुहुँदैन, चाहे जेसुकै पनि होओस्। जुन कुराको रोक लागेको छ त्यो कुरालाई जहाँ हो त्यहीं नै बन्द गरिदिनुपर्छ, मान्यजनको आशीर्वादले नै त्यसको कल्याण हुन्छ। उपमन्युलाई पढाउने-लेखाउने केही पनि गरेनन् भोको राखेर धैर्यतामा नै उपमन्युको परीक्षा लिए। आज्ञा दिए, नसोचीकन कि यसले कहाँसम्म कति आज्ञाको पालन गर्न सक्छ। आज्ञामाथि सीमाभन्दा अधिक कडाइ गरे, तिनलाई आँकको पात समेत खान पर्‍यो, जसबाट उनी अन्धा भए र कुँआमा खसे। अझ उनलाई कुँआबाट पनि निकालेनन्। कुँआमा नै परिरहे तैपनि कुनै विचार आएन। उनीलाई जुन आज्ञा दिन्थे उनी गर्थे। यो पनि भनेनन् कि अश्विनीकुमार यदि अमृत दिन्छन् भने तिमी नपिउनू। अश्विनीकुमारले खानका लागि पुवा दिए, तिनले न त पुवा खाए र न अमृत पिए। अन्तमा कार्य सिद्ध भयो नै, किनकि उनले आज्ञा मान्दै गए, जुन कुरा भएका सबै शिष्यहरूमा हेरियो। तीन शिष्य थिए। तीनवटैमा नै यो कुरा थियो कि गुरुले जे भने- तिनीहरूले त्यसको पालना गरे। ती शिष्यहरू पछि गएर आचार्य बने र आफ्ना पनि शिष्य बनाए। तर तिनीहरूले आफ्ना गुरूजति कडाइ गरेनन्। भन्थे कि हामीले

गुरुको कडाइ देखेका छौं, हामीले गुरुको जति कडाइ सहेका छौं, हामी त्यति कडाइ गर्ने छैनौं। यसरी नै त्यो युगमा श्राप दिनु गुरुका हातमा हुन्थ्यो। श्राप दिन ढिलो हुन्नथ्यो। ऐलेको समयमा थोरै पनि भुलचुक भयो भने बेंत उठाएर हानिदेऊ, तर त्यो समयमा त वचन नै बेंत थियो। अलिकता पनि भुलचुक बयो कि श्राप दिनका लागि तैयार। उत्तंक ऋषि आफ्ना गुरुको आज्ञापालनमा एकदम निपुण थिए जसलाई कति हो कति कठिन–कठिन काम बताइए। गुरुमाले भनिन् कि अमुक राजाकी श्रीमतीका कुण्डल लिएर आऊ, फलानो दिन पर्व छ, त्यस दिन म कुण्डल पैह्रेर नै पर्व मनाउनेछु। चौमासको पर्व थियो। उनी आउनुमा थोरै बेर भयो जसले गर्दा गुरूआमा उत्तंकलाई श्राप दिनका लागि तैयार भइन्। बोलिन् कि यदि तँ समयमा नपुगेको हुन्थिस् भने म तँलाई श्राप दिन्थें। एक प्रकारले तरवार निकालेर मार्नका लागि तैयार भइन्। यस्ता परिस्थितिमा पनि उत्तंकको आज्ञापालन गर्ने लगन आश्चर्यजनक थियो, प्राण पनि दिन तैयार रहन्थे। उत्तंकमा शक्ति थियो, हाम्रा मान्छेहरूमा कत्ति पनि आज्ञापालनको शक्ति देख्नमा आउन्न तैपनि चाहन्छन् कि फल मिलोस्, मुक्ति मिलोस्। यद्यपि नियमलाई पालन गर्नु ठूलो कठिन छ, तैपनि नियमको पालन अवश्य गर्नुपर्छ।

आरुणिलाई धौम्य मुनिले आज्ञा दिए कि तिमी खेतमा जाऊ। जंगलको खेतमा आलीबाट जुन पानी बगिरहेछ त्यसलाई रोक। ठूलो कष्टले पहिला कोदालोले पानी रोक्ने चेष्टा गरे तर त्यो पानी रोकिएन नै। नरोकिएसि उनी आफैं आलीमा पसारिए–सुते। यद्यपि त्यो समयमा प्रशस्त जाडो भइरहेको थियो तैपनि सुतेर

पानीलाई रोकिदिए। राति अबेलासम्म आरुणि आएनन् त शिष्यहरूसित सोधे कि आरुणि किन आएनन्? सबैले भने- उनलाई आली बाँध्नका लागि तपाईंले नै पठाउनुभएथ्यो। गुरुजीले भने कि हिंड आरूणिको खबर लिऊँ। गुरुजी सबै जान्दथे, तर उनी अरू शिष्यहरूलाई देखाउनका लागि कि आरूणि कस्ता नियम पालन गरिरहेछन् गुरुजी शिष्यहरूसितै गए। खेतका निकट पुगेर बोलाउनुभयो- आरुणि! आरुणि!! ओ आरुणि!!! कहाँ छौ? आरुणिले गुरुको आवाज सुनी चिच्याए- गुरुजी! म यहाँ छु, पानी रोकिइरहेकै थिएन, त्यसैले म आफैं सुतेर नै पानी रोकिरहेको छु। गुरुजीले तिनको आवाज सुनेर छेवेमा गए। तिनले भने- उठ छोरा आरुणि! गुरुजीका आदेशले आरुणि उठे र गुरुजीका चरणहरूमा नमस्कार गरेर बोले- गुरुजी! अँध्यारो रात थियो, तपाईंले आली बाँध्नका लागि मलाई पठाउनुभएथ्यो। माटोले कुनै पनि प्रकारले आली बाँध्न सकिनँ त आफैं पसारिएँ र पानी रोकिदिएँ। पानीलाई रोकिराखेकै थिएँ, अरू के आज्ञा छ? म फेरि गएर बाँधूँ या अरू कुनै आज्ञा छ? जब तपाईंले पुकार्नुभयो त म बोलें। पानी बगिरहेछ। गुरुजी बोल्नुभयो- छोरा आरुणि! अब तिम्रो काम सिद्ध भयो, आफ्ना घर जाऊ। गुरुआज्ञाको पालन गर्नाले सबै शास्त्र नपढीकन ने उनीलाई आए।

नारायण! नारायण! नारायण!

॥ श्रीहरिः ॥

# सबैमा निष्काम प्रेम र शोक-निवृत्तिका उपाय

सबैमा भगवद्बुद्धि र प्रेम होस् त जीवनको मुढडुंगा सहजै पार हुन्छ। सबैसित हामीहरूले निष्कामभावसित प्रेम गर्नुपर्छ या भगवान्लाई प्रसन्न गर्नका लागि प्रेम गर्नुपर्छ। भगवान् र महात्माजनहरूलाई छोडेर संसारमा जति प्राणी छन्- देवता, मनुष्य, यक्ष-राक्षस आदि सबैमा गुण-अवगुण हुन्छन्। गुणहरूको वर्णन त गर्नुपर्छ, किन्तु कसैका दोषको वर्णन गर्नुहुँदैन। कसैमा पनि अवगुण हैन बरू गुण नै हेर्नुपर्छ। हामीले कसैका गुणहरूको वर्णन गऱ्यौं भने त्यसको हामीमा प्रेम हुनेछ, हाम्रो ऊसित प्रेम बढ्नेछ। किन्तु गुणहरूको गान साँचो गर्नुपर्छ, झुटो हैन। झुटा गुणगानले कसैमा पनि असर र लाभ दुवै हुँदैनन्। यदि कोही पनि मनुष्य झुटले लाभ उठाउन चाहन्छ भने ऊ गलत बाटोमा छ। गुणहरूको गान गर्नाले राम्रा पुरुष, देवतागण तथा जोभन्दा उच्च अरू कोही छैन उनी भगवान् पनि खुशी हुन्छन्। नीच र बदमाश पनि गुणहरूको गान गर्नाले खुशी हुन्छन्। यसरि नै यदि हामीले कसैलाई मान दियौं भने ऊ पनि खुशी हुन्छ। भगवान् स्वयं त अमानी हुनुहुन्छ, किन्तु उहाँ पनि अरूलाई मान दिनुहुन्छ- '**अमानी मानदः**'।

हामीहरूले पनि भगवान्बाट यो कुरा सिक्नुपर्छ कि स्वयं त मान नचाहौं तर अरूलाई मान देऔं। हामीले अरूलाई मान दियौं भने उनीसित हाम्रो प्रेम अवश्य नै बढ्नेछ। मान दिनाले, कीर्तिगान गर्नाले र हित गर्नाले प्रेम बढ्छ। यी प्रेम बढाउने

अकाट्य उपाय हुन्। हामी देवताहरूलाई मान दिन्छौं भने उनीहरू खुशी हुनेछन् भगवान्लाई मान दिन्छौं भने उनी खुशी हुनेछन्। नीच-भन्दा-नीच मान्छेको मान गरेमा पनि उ समेत खुशी हुनेछ, यहाँसम्म कि यदि हामी कुकुरलाई मान गर्छौं भने त्यो पनि खुशी हुनेछ। तपाईं प्रयोग गरेर हेर्नोस्, कुनै कुकुर छ र उसलाई मीठोसित मान गरेर बोलाउनोस् त ऊ पनि खुशी हुनेछ तर त्यसैको जब तिरस्कार तथा अपमान गर्नुहुन्छ त अनुहार उदास र निराश बनाएर जानेछ। यसबाट यो कुरा सिद्ध हुन्छ कि मान दिनाले कुकुर पनि खुशी हुन्छ, नीच र बदमाश मान्छे पनि खुशी हुन्छन् साधु-सन्त पनि मान पाएर खुशी हुन्छन् भगवान् पनि सन्तुष्ट हुन्छन् अतः सबैसित प्रेम बढाउने उपाय हो सबैलाई मान दिनु।

समस्त जगत्लाई भगवान्को प्रजा मानेर प्रेम गरौं, योभन्दा पनि अझ सबैलाई आफ्नो आत्मा मानेर प्रेम गरौं, अझ योभन्दा पनि बढेर सबैलाई भगवद्रूप मानेर प्रेम गरौं। भगवान्को स्वरूप कसरी? जसरी मनोराज्य र सपनाको संसार आफ्नो मनको संकल्प हो त्यसरी नै यो समस्त संसार भगवान्को संकल्प हो। परमात्माको संकल्प हुनाले उनैको स्वरूप हो- यो मानेर सबैसित प्रेम गर्नुपर्छ, सबैको सेवा गर्नुपर्छ। सबैको सेवाले सबैमा प्रेम हुन्छ। रामचरितमानसमा भगवान् श्रीराम भन्छन्-

**सो अनन्य जाकें असि मति न टरइ हनुमंत।**
**मैं सेवक सचराचर रूप स्वामि भगवंत॥**

(४। ३)

'चराचर ने भगवान्को स्वरूप हो र म उनको सेवक हूँ'- यसरी जसको मति हरसमय अटल रहन्छ, भगवान् भन्नुहुन्छ त्यो

मेरो अनन्यभक्त हो, यो भगवान्‌को अनन्यभक्ति पनि हो र यसैबाट उच्च कोटिको प्रेम पनि हुन्छ। यस्तो प्रेम हामी निष्कामभावले गरौं, स्वार्थलाई त्यागेर गरौं त त्यसबाट हाम्रो आत्मा शुद्ध हुन्छ र परमात्माको ज्ञान हुन्छ, फेरि परमात्माको प्राप्ति हुन्छ।

अब अर्को कुरा बताइन्छ। कसैको युवा छोरो मर्छ, उसलाई ठूलो दुःख हुन्छ। कसैको ज्वाइँ मर्छ, उसलाई ठूलो दुःख हुन्छ। कसैकी स्त्री मर्छे उसलाई ठूलो दुःख हुन्छ। यसरी घरमा जति छन् तिनीहरू सबै मर्नेछन् र एक-एकको दुःख हुनेछ। हामी थोरै विचारपूर्वक सोचेर एकै दिन सबै कुरा बुझौं। दुःख होस् त एकै दिन होस्, फेरि पछि कहिल्यै दुःख नहोस् नै, अतः दुःखको त अन्त नै गरिदिनुपर्छ। यदि मनुष्यशरीर पाएर पनि हामीले दुःखको अन्त गरेनौं भने फेरि पशु-पक्षीको योनिमा दुःखको अन्त त हुनु नै छैन। यो मनुष्यशरीर तपाईंलाई भगवान्‌ले दुःखहरूको अन्त गर्नका लागि नै दिनुभएको हो। जुन कुरा बित्यो त्यसका लागि शोक गर्नु मूर्खता हो। यसै कुरालाई एक ठाउँमा भनिएको छ- **'गतं न शोचामि कृतं न मन्ये।'** जुन कुरा बित्छ, त्यसको न त म शोक गर्छु र न आफ्नो बढाइँ नै गर्छु भने म मूर्ख कसरी? जुन मान्छे बितेका कुरालाई सोच्दछ त्यो मूर्ख हो।

म सबैका लागि एउटा व्यापक कुरा भन्छु। कोही पनि घरमा मर्छ, स्त्रीको पति मर्छ, पतिकी स्त्री मर्छे, कसैको भाइ मर्छ, कसैको बाउ मर्छ, कसैको आमा मर्छे, कसैकी छोरी मर्छे, कसैको छोरो मर्छ- यिनीहरू त मर्ने-जन्मने गरिरहन्छन्। सोच कि हाम्री छोरी थिई, त्यसको विवाह गरिदियौं, मँगनी गरिदियौं र ऊ मरी।

अब हामी त्यसको चिन्ता-शोक गर्छौं भने त्यो हाम्रो गल्ती हो। यसै प्रकारले यदि हाम्रो युवा छोरो मर्छ र यदि त्यसको हामी शोक गर्छौं भने हाम्रो मूर्खता हो। शोकरहितताको उत्तम विचार राख्नुपर्छ। भगवान्ने हामीलाई छोरी दिनुभयो, छोरा दिनुभयो। हामी तिनको सेवा गर्छौं, तिनको विवाह गर्छौं, ती मान्छेहरू जोसित पूर्वजन्मको ऋण थियो, सेवा गरेपछि ऋणको खाता बराबर भयो अनि भगवान्ने तिनलाई बोलाए। हाम्रोमा ती रहन्थे, त्यसको अपेक्षा भगवान्कहाँ गए त राम्रो कुरा नै भयो। भगवान्कहाँ जुन सुख छ त्यो हामीकहाँ थिएन। हामी त मोहवश चाहन्छौं कि यहीं नै रहून्। नरसी मेहताको छोरो मऱ्यो त उनी नाच्न लागे, कीर्तन गर्न लागे र भन्नुभयो कि भगवान्ले धेरै ठूलो उपकार गरेर मेरो छोरोलाई आफ्नोसाथ बोलाए। यसै प्रकारले आफ्ना घरमा कसैको जन्म हुन्छ भने त्यसको पनि कुनै भार छैन भन्ने बुझ्नुपर्छ। भगवान्ले त्यसलाई हामीकहाँ पठाएका छन्। भगवान्बाट पठाइएको मानेर हामी त्यसको सेवा गर्छौं भने भगवान् बडो खुशी हुन्छन् र जब ऊ यहाँबाट बिदा हुन्छ भने वहाँ ईश्वरकोमा त्यसको अझै राम्रो सेवा हुनेछ। अनि मृत्युका सम्बन्धमा हामी किन चिन्ता गरौं? हेर, यहाँ आश्रममा पनि धेरै-जसो दाजुभाइहरू आउँछन्। आएका दाजुभाइको खुब प्रसन्नता र आनन्दसित सबैले मिलेर सेवा-शुश्रुषा गर्नुपर्छ। एक जना गए भने अर्का आउँछन् उनको सेवा गर्नु छ र उनी गए फेरि अर्का आउँछन् उनको सेवा गर्नु छ। तात्पर्य यो हो कि हामीहरूले हरसमय सेवा गर्नु छ, आनन्द लुट्नु छ। जो गए तिनको चिन्ता गर्नु छैन, उनी जहाँ जानेछन् त्यहाँ भगवान्ले उनका लागि पहिल्यैबाट नै प्रबन्ध

गरिराखेका छन्। हामी किन चिन्ता गरौं? यसै प्रकार घरमा पनि जो जन्मिएर आउँछन् तिनको सेवा गर्नु छ र मरे भने जहाँ जानेछन् त्यहीं नै तिनको सेवा हुनेछ। भगवान्का सबै ठाउँमा प्रबन्ध छ अन्यथा यहाँबाट जुन मान्छेहरू बिदा भएर जान्छन् तिनका लागि पनि हामीले चिन्ता गर्न पर्थ्यो। यहाँ दस दिन रहून् पन्ध्र दिन रहून् तिनको सेवा-शुश्रुषाको प्रबन्ध गरौं, अब उनी गए भने तिनलाई अर्को ठाउँमा थाहा छैन के-के दुःख-सुख हुन्छ होला, यो आफूलाई के थाहा। आफूले त यही बुझ्नुपर्छ कि यहाँबाट अधिक सुख सबै ठाउँमा छ। यो हाम्रो कमजोरी हो कि हामीले अधिक सेवा-सत्कार गर्न सकेनौं। अब यस्तो चेष्टा गर्नुपर्छ कि हामी अझै धेरै सेवा गरौं। यो हाम्रो कर्तव्य हुनुपर्छ। किन्तु यहाँबाट बिदा भएपछि आफ्नो कुनै जिम्मेदारी छैन। सबै ठाउँमा तिनलाई आतिथ्य अधिक-भन्दा-अधिक भइरहनेछ। भगवान्ले सबै ठाउँमा तिनका लागि प्रबन्ध गरिराखेका छन्। यसै प्रकार आफ्ना घरमा कोही मान्छे मर्छ भने त्यसको पनि कहिल्यै चिन्ता-शोक गर्नुहुँदैन। शोक र चिन्तालाई छेवैमा आउन दिनुहुन्न।

यही कुरा अब अर्को दृष्टिकोणबाट भनिन्छ- जस्तै कुनै दाजुभाइले हामीकहाँ रूपियाँको थैली राखून् र भनून् कि म बदरिकाश्रम, गंगोत्री, कर्णप्रयाग, देवप्रयाग गएर आउँछु। यो रूपियाँको थैली तपाईं मुदुसमा राखिदिनुहोस्। पाँच-दस दिनपछि घुमी फिर्ता आएर भन्छन् कि दाइ! म तीर्थ गएर आएँ, ल्याउनुहोस् मेरो थैली। यदि हामीले थैली दिन आपत्ति गऱ्यौं भने हामी चोर हौं। नासोका रूपमा जुन थैली हामीकहाँ राखिएको थियो त्यसलाई दिन आना-कानी गर्छौं भने त अत्याचार

भइहाल्यो नि। थैली दिएर यदि पश्चात्ताप गरिन्छ भने त्यो पनि गल्ती हो। हेर त अमुकको थैली आफ्नो हातमा आएको थियो, मुदुसमा राखेको पनि थिएँ, ऐले उसलाई निकालेर दिएँ। पश्चात्ताप गर्नु ईमानदारीको कामै हैन। ठीक यसै प्रकार भगवान्ले हामीलाई छोरा या छोरी पठाए यानी एक थैली नासोका रूपमा पठाए र जब भगवान् त्यो नासो फिर्ता फर्काइदिन्छन् तब दुःख कुन कुराको? भगवान्को चीज थियो उनैले लगे। छोरीलाई उसको पतिले मँगनीमा लैजान्छ, हामी किन रोऔं? त्यसको चीज थियो त्यसले लग्यो। हामीले उसलाई खुशीले दियौं अथवा ऊ आफैं आएर आफ्नी पत्नी लैजाओस्, हामी चिन्ता किन गरौं? यसमा त अधिक सुखी पो हुनुपर्छ। यसै प्रकार यदि कोही मरोस् या भगवान्का घर जाओस् त त्यसका लागि चिन्ता गर्नुहुँदैन, बरू भगवान्सित प्रार्थना गर्नुपर्छ कि हे प्रभो! यसको आत्मालाई शान्ति मिलोस्।

यदि ज्ञानका दृष्टिले हामी विचार गर्छौं भने जस्तै एक यात्रुशालामा सबै मान्छेहरू जम्मा हुन्छन् र आफ्ना-आफ्ना समयअनुसार जान्छन् कोही पनि कसैको चिन्ता-शोक गर्दैन, त्यस्तै हो। रेलगाडीका डब्बाहरूमा एकसाथ धेरै दाजुभाइहरू सँगै यात्रा गर्छन् तर सबै आफ्ना-आफ्ना स्टेशनमा ओर्लिन्छन् शेष मान्छेहरू सोच्छन् कि धेरै राम्रो भयो, गाडी त रित्तो भयो, खूब भजन-ध्यान गर्दै हिंड। यसरी नै घरको कुनै मान्छे मर्‍यो त घर रेलका डब्बाहरू-जस्तै खाली हुन्छ, बुझ त्यसको स्टेशन आयो, ऊ ओर्लियो। अब खूब भजन-ध्यान गर्नुपर्छ। सानो बच्चा मरोस् त बुझ्नुपर्छ कि त्यो ओर्लियो, किनकि त्यसको स्टेशन आएको

थियो, यहींसम्मको त्यसले टिकट लिएको थियो।

यदि भनौं कि स्त्रीका लागि त पति नै सबभन्दा बढेर हुन्छ, पतिको आयु समाप्त भयो त पति मऱ्यो, युवावस्थामा नै बिधवा भई, धेरै नै दु:खको कुरा हो। यस्तो कुरा हैन, किनकि जे पनि हुन्छ सबै भगवान्‌को दृष्टिमा हुन्छ, भगवान्‌को इच्छाले हुन्छ, अत: भगवान्‌को इच्छामा नै आफ्नो इच्छा मिलाउनुपर्छ। भगवान्‌को इच्छा बिना कोही मर्दैन, भगवान्‌को इच्छाले, भगवान्‌का हुकुमले नै कोही पनि मान्छे मर्छ। कोही पनि मऱ्यो भने दु:खी हुनुहुँदैन। त्यो बिधवा स्त्रीले पनि यो बुझ्नुपर्छ कि भगवान्‌को ममाथि यो ठूलो दया हो। यदि भनौं कि यो दया बुझाइमा आउन्न भने कुन दया बुझाइमा आउला? स्त्री मिलोस्, रूपियाँ मिलोस्, पुत्र मिलोस् र संसारका पदार्थ मिलून् त भगवान्‌को दया हो रे अनि जब ती जान्छन् त हामीहरू भगवान्‌को कोप बुझ्छौं, आफ्ना पापको फल बुझ्छौं। किन्तु विचार गरेर हेर्नुहोस् कि भगवान्‌ले हामीलाई पुत्र, स्त्री, धन, घर, रूपियाँ र ऐश्वर्य दिनुहुन्छ त त्यो उहाँको साधारण दया हो, तर यदि फिर्ता लिनुहुन्छ भने भगवान्‌को विशेष दया बुझ्नुपर्छ। दिए भने थोरै दया र फिर्ता लिए भने अधिक दया हो। यो हाम्रो शरीरमा यदि आरोग्य रहन्छ भने भगवान्‌को थोरै दया हो, बिमार रहन्छ भने अधिक दया हो। यदि भन्छौं कि यस कुरालाई हामीले बुझेनौं त म सम्झाउँछु। बुझ्नुपर्छ कि स्त्री, पुत्र, धन, विद्या, ऐश्वर्य, मान-बढाइँ, प्रतिष्ठा र शरीरमा आरोग्यता- यी र यस्ता सबै चीजहरू जुन भगवान् दिन्छन् त्यो पुण्यको फल हो, त्यो भगवान्‌को दया हो। यसमा थोरै ख्याल यो गर्नुपर्छ कि यी कुराहरू दिनाले तपाईंको पुण्य

क्षय हुन्छ कि नाइँ? यी चीजहरू तपाईंको पुण्यका फलस्वरूप मिले भने पुण्यको खाता बराबर भयो र अब बाँकी पापको खाता उभिएको छ।

भगवान्कोमा तपाईंको एउटा पुण्यको खाता छ र एउटा पापको। तपाईंले जे-जति पुण्य गर्नुभएथ्यो, त्यस पुण्यका बदलामा ईश्वरले स्त्री, पुत्र, धन, ऐश्वर्य- यी सबै चीजहरू तपाईंलाई दिनुभयो। प्राप्तिले तपाईंको पुण्यको खातालाई बराबर गरिदियो। पुण्य सिद्धिएकै अर्को दिन तपाईं मर्नुभयो। पुण्यको खाता त बराबर भयो तर पाएका सबै पदार्थ यहीं रहे, साथमा न पुण्य न पदार्थ, अब तपाईं रूँदै-रूँदै यहाँबाट जानुपर्‍यो, के लाभ भयो? भगवान्ले तपाईंलाई यी सबै पदार्थ के कारणले दिनुभएथ्यो? यसकारण दिनुभएको थियो कि यीद्वारा तिमी ईश्वरको प्राप्ति गर भनेर। यी चीजहरूद्वारा भगवान्को प्राप्ति तब हुन्थ्यो जब ईश्वरप्राप्तिका काममा ती चीजहरूको सुविधालाई हामीले लगाइदिन्थ्यौं। हामीले जुन राम्रो काम गर्‍यौं, पुण्य गर्‍यौं, त्यसको फल भगवान्ले दिए। अब हाम्रो के कर्तव्य हुनुपर्छ? प्रभुलाई प्रसन्न गर्नका लागि, उनको प्राप्तिका लागि हामी आफैंलाई उनीमा सुम्पिदिऊँ, उनैलाई समर्पण गरिदिऊँ, यसैमा हाम्रो बुद्धिमानी छ र त्यसको फल हो भगवान्को प्राप्ति। रूपियाँलाई पनि भगवान्को काममा लगाइदिऊँ, शरीर आरोग्य छ भने यसलाई पनि भगवान्कै काममा लगाइदिऊँ, जे केही पनि भगवान्ले दिएका छन् ती सबै भगवान्को काममा लगाइदिऊँ, सेवा गर्न पाउनु नै भगवान्को ठूलो कृपा हो।

भगवान्ले हामीलाई यी सबै चीजहरू यसकारण दिएका थिए

कि हामी यिनबाट लाभ उठाऔं। परमात्मामा यिनलाई लगाउनुपर्छ तर हामी लगाइरहेका छैनौं, यसकारण भगवान् तिनको विनाश गर्छन् किनकि भगवान् बुझ्छन् कि यिनमा फँस्दा पछि गएर यसको दुर्गति हुनेछ। नफँसाउन भगवान्ले हामीबाट तिनलाई हटाउँछन् यो भगवान्को विशेष दया हो। भगवान् हामीलाई बिमारी पठाउँछन् त्यसको कारण यो हो कि हामीले कुनै पाप गरेथ्यौं, त्यस पापका फलस्वरूप हामीलाई बिमारी पठाए र त्यसलाई भोगेपछि हाम्रो पाप कटनी भयो। जति पनि कष्ट भेटिन्छन् ती पापका फल हुन् र ती कष्टलाई हामी स्वीकार गरौं त पापको भोग हुन्छ। भोगले हामी पापका ऋणबाट मुक्त हुन्छौं। भगवान् पापहरूबाट मुक्त गर्नका लागि नै संसारका यी दुःख पठाइरहेछन्। भीष्मपितामह जब शरशय्यामाथि परेका थिए त्यस समय भगवान्सित प्रार्थना गर्दै भन्छन् कि प्रभो! मैले जे-जुन पाप गरेको छु तिनलाई तपाईं रोगका रूपमा पठाइदिनोस् ताकि म पापहरूका ऋणले मुक्त होऊँ, मुक्तिले संसारमा फेरि मेरो जन्म नहोओस्। भीष्मजी त चाहन्छन् कि हामीले जुन पाप गरेका छौं तिनको फल हामीलाई यसै शरीरमा भोगाइदिऊन्। अर्को जन्मका लागि पनि नराखून्। उनी समझदार थिए, बुद्धिमान् थिए, उनी त कष्टको माँग पेश गर्छन्। यो कुरा महाभारतमा आएको छ।

अर्को कुरा यो हो कि रोग भोग्ने बेलामा समझदार र शास्त्रहरूमाथि विश्वास गर्नेवालाहरूलाई यो कुरा पनि सम्झना आउँछ कि हामी जुन बिमारी भोगिरहेका छौं यो मेरो पापको फल हो, भविष्यमा हामीले पाप गर्नुहुँदैन अन्यथा यसै प्रकारले पापको फल भोग्नुपर्नेछ। समझदारी बढ्नाले सावधान होइन्छ र

नयाँ पाप गर्नमा हच्किइन्छ, यो पनि हाम्रा लागि लाभको कुरा हो।

तेस्रो लाभको कुरा यो हो कि ऐश-आराममा, भोग-प्रमादमा हामी भगवान्लाई भुल्छौं र जब मार पर्छ तब भगवान्को सम्झना आउँछ। यो पनि भगवान्को दया हो कि भुलेका-भट्किएकाहरूलाई भगवान् सम्झना दिलाउने गर्छन्। जब मार पर्दैन त भगवान्को थोरै सम्झना आउँछ, यसैकारणले कुन्ती माताले भनिन् कि हे प्रभो! संकटसमयमा तपाईंको स्मृति विशेष हुन्छ, यसकारण म त यो नै चाहन्छु कि हामीमाथि सदा विपत्ति बनिरहोस्। कुनै भक्तले पनि भनेका छन्-

**सुखके माथे सिल पड़े जो नाम हृदयसे जाय।**
**बलिहारी वा दुःखकी जो पल-पल नाम रटाय॥**

भक्तको यो भनाइ छ कि जुन सुखले भगवान्को विस्मृति हुन्छ त्यस्तो सुखमाथि ढुंगा परोस् अर्थात् म त्यस सुखलाई चाहन्नँ। जुन दुःखले भगवान्को स्मृति हुन्छ त्यस्तो दुःखलाई सबै समर्पण छ अर्थात् त्यो दुःख पटक-पटक आओस्। जब कुनै पनि प्रकारको दुःख हुन्छ भने त्यसबाट ठूलो लाभ हुन्छ।

बिधवा माताहरूको प्रकरण चलिरहेको थियो। बिधवाका सन्दर्भमा हामीले यो भन्यौं कि जसका पति मरे तिनले यो बुझ्नुपर्छ कि यो भगवान्को विधान हो, भगवान्को इच्छाले यो कुरा भएको हो। यसमा समेत भगवान्को दया बुझ्नुपर्छ। यसरी पनि बुझाइमा आउँदैन भने यसरी सोच्नुपर्छ कि यदि पति जीवित हुन्थे भने छोराछोरीहरू हुन्थे, तिनको विवाह गर्नुपर्थ्यो, घरमा ज्वाइँ आउँथे, छोराकी बुहारी आउँथी, सासु-बुहारीमा लडाइँ हुन्थ्यो, रात-दिन घरमा क्लेश हुन्थ्यो, ज्वाइँ मर्थ्यो त घरमा छोरी

बिधवा भएर बस्थी, त्यसको एक क्लेश बढ्थ्यो। भगवान्ले बडो राम्रो गरे। भगवान् यो चाहन्छन् कि तिमी भजन-ध्यानमा लाग। हा?-मासुको पुतला! यस सांसारिक पतिलाई के पति बनाउँछ्यौ, म परमात्मालाई पति बनाऊ। यसरी भगवान्ले ठूलो दया गरे, उनी आफ्ना परमधाममा बोलाउन चाहन्छन्। स्त्रीले पति मरेपछि भगवान्लाई नै आफ्नो सर्वस्व मान र बुझ कि भगवान् नै हाम्रा माता-पिता हुन् भगवान् नै हाम्रा गुरू हुन् र भगवान् नै हाम्रा पति र हाम्रा सर्वस्व हुन्–

**त्वमेव माता च पिता त्वमेव, त्वमेव बन्धुश्च सखा त्वमेव।**
**त्वमेव विद्या द्रविणं त्वमेव, त्वमेव सर्वं मम देवदेव॥**

भगवान्ले आफ्ना भजनमा लगाउनका लागि सबै रोकावटहरू हटाइदिए, किन्तु यदि तिनले यदि कुनै बाबुलाई धर्मपुत्रका रूपमा लिन्छिन् त्यसको विवाह आदि गराउन थाल्छिन् भने त उनी स्वयं नै आफूमाथि झन्झट लिन्छिन् जसको फल पछि गएर तिनलाई भोग्नुपर्नेछ। अतः स्त्रीले आफ्नो तर्फबाट यस्तो स्थितिमा केही पनि गर्नुहुँदैन। पति गए, पुत्र गए, तिनीहरू त भगवान्को मर्जीले गएका हुन्। स्त्रीले त पतिलाई मारेकी हैनन् तिनले त केही पनि गरेकी हैनन् नि। ती घटना आफैं घटित भए, भगवान्का इच्छाले भए, त्यसमा खुशी नै हुनुपर्छ। प्रभु जे पनि गर्छन् त्यो राम्रो नै गर्छन् अतः त्यसमा आनन्द मान्नुपर्छ र भगवान्सित खूब प्रेम बढाउनुपर्छ। यसमा लोकप्रचलित एउटा सानो कथा यस्तो छ– एक समय भगवती उमादेवी शिवजीसित भन्न लागिन्– 'महाराज! तपाईं भगवान्का भक्तहरूको प्रशंसा गर्ने गर्नुहुन्थ्यो, भक्तहरूको दर्शन मलाई पनि गराइदिनुहोस् न।'

शिवले बोल्नुभयो- 'बहुतै ठीक' र उनलाई एक वैश्यकहाँ लैजानुभयो। स्वयं ब्राह्मणको रूप धारण गर्नुभयो र साथमा भगवती पार्वतीलाई ब्राह्मणी बनाएर त्यहाँ पुग्नुभयो। अतिथि मानेर वैश्यले यिनको बडो सेवा गरे। त्यसका घरमा दुईटा बाख्राहरू थिए। बाख्राको दूध दुहेर, खीर बनाएर, खीर-पुरी खुवायो र खूब सेवा गर्‍यो। बिदा हुने बेलामा शिवजीले भने कि 'तेरा सबै बाख्राहरू मरून्।' यस्तो सुनेर पार्वती धेरै रिसाइन् र बोलिन्- 'महाराज! त्यसले त तपाईंको त्यत्रो सेवा गर्‍यो तर तपाईंले त्यसलाई श्राप दिनुभयो।' शिवजी बोल्नुभयो- 'यसको रहस्य तिमीलाई एक सालपछि भन्नेछु।' पार्वतीले भनिन्- 'ठीकै छ।' एक वर्ष बित्यो। पार्वती र शिवजी त्यहाँ गएर हेर्छन् त त्यहाँ न त त्यसकी श्रीमती छे र न कुनै बाख्रा छन् सबै मरेका र त्यो वैश्य एकान्तमा बसेर भजन-ध्यानमा मस्त छ। त्यसका बाख्राहरू पनि मरेछन् र स्त्री पनि मरिछ। एक्लै आफ्नो भजन-ध्यानमा लागेछ। शिवजीले भने कि 'हेर, यो भजन-ध्यान गर्छ र मस्त छ, यो कुरा ठीक हो?' पार्वती बोलिन्- 'यही ठीक हो।' शिवजी बोल्नुभयो- 'भन मैले त्यो समयमा यसलाई श्राप दिएको रहेछु या वरदान? मैले यसको हितको लागि नै यस्तो काम गरेको थिएँ। अब यसलाई कुनै झञ्झट छैन, कुनै बाल-बच्चा छैनन् सबै झगडाहरू समाप्त। अब आफ्नो भजन-ध्यान गर्छ, हानि त हाम्रो स्वार्थको भयो किनकि पहिला आउँदा यसले यति सेवा गरेथ्यो अहिले त सोधेन पनि। उसलाई थाहा पनि छैन कि हामी यसकोमा आएका छौं र अहिले यसलाई कुनै लगन पनि छैन। लगन पनि तब होस् जब उसले जिम्मेदारी सम्झोस्। अब एक्लै छ, ध्यानमा मस्त छ।' यदि भगवान्ले घरमा सबैको

सफाइ गरिदिऊन् र एक्लै भजन–ध्यान गरोस् त राम्रो कुरा हो र यो पनि राम्रो कुरा हो कि भगवान् यदि छोराछोरी दिन्छन् भने तिनीसित पनि हामीले घृणा गर्नुहुँदैन। जे पनि भगवान्को विधान हुन्छ त्यसमा नै प्रसन्न रहनुपर्छ। जन्मोस् त आनन्द, मरोस् त आनन्द, लाखौं रूपियाँ जाऊन् त आनन्द, आऊन् त आनन्द। शरीर बिरामी होस् त आनन्द, मेटियोस् त आनन्द। आनन्दलाई निरन्तर कायम राख्नुपर्छ। आनन्द त्यही बेलामा कायम रहन सक्छ जब कहिल्यै पनि कुनै पनि घटना होस् त त्यसलाई भगवान्को कृपा सम्झोस्। यो सम्झोस् कि यो भगवान्को मङ्गलमय विधान हो। घटनालाई भगवान्को लीला मानेर प्रसन्न हुनुपर्छ। जे पनि संसारमा आफैं भइरहेछ त्यसबाट प्रसन्न हुनुपर्छ। संसारमा जसले जन्म लिनेछ त्यो मर्नेछ। यहाँ बसेका हामी सबैमा कोही पनि यस्तो छैन जुन मर्ने छैन। को कहिले मर्छ, दस वर्षमा, बीस वर्षमा, पचास वर्षमा, यसको मलाई कत्ति पनि ठेगाना छैन। तर यो ठेगाना छ कि सय वर्ष भित्र–भित्र सबै मर्नेछन्। यदि भन्नुहुन्छ कि भविष्यको कुरा तपाईंले कसरी भन्नुहुन्छ, मैले सोचेर–बुझेर मात्र यो कुरा भनेको छु। निश्चय नै सय वर्षपछि पनि कोही बाँचिरहोस् यो सम्भव छैन। यसकारण यस्तो भन्नुमा कुनै आपत्ति छैन र न त यहाँ कसैको रहनु निश्चित छ, मर्नेछन् यो निश्चित छ। सय वर्ष अधिक–भन्दा–अधिक अवधि भनेको छु। आजबाट लिएर सय वर्षको अवधिदेखि अधिक कसैको पनि आयु छैन। अब तपाईंले ख्याल गर्नुपर्छ कि सबै मर्ने नै हुन् कुनै भोलि मर्छ त कुनै पर्सि मर्छ। दुई महिनामा मरोस् त के र दस वर्षमा मरोस् त के? आखिरमा त मर्नु नै छ। यसकारण मृत्युको चिन्ता गरेर दुःखी किन हुने? यहाँका कुटुम्ब, रूपियाँ,

ऐश्वर्य, घर आदिबाट तपाईंको निश्चय वियोग हुनेछ। एक दिन वियोग हुनु नै छ। रूपियाँ गए भने पनि वियोग भयो र हामी गयौं भने पनि वियोग भयो। घरमा हामी मरे पनि वियोग भयो या घर खस्यो, भूकम्पमा नष्ट भयो भने पनि वियोग भयो, जसरी पनि वियोग, सबै चीजहरू नष्ट हुनेवाला छन्। लाख जतन गरेर पनि कुनै पनि चीज स्थिर रहन सक्दैन । घर आदि जड या चेतन जुन पदार्थहरूका साथमा तपाईंको सम्बन्ध छ ती सबसित सम्बन्ध-विच्छेद हुनेवाला नै छ। यदि तपाईं आफ्नै मनखुशीले यिनीसितको सम्बन्ध छोडिदिनुहुन्छ भने ठूलो आनन्दको कुरा हो, भगवान्ले जबर्दस्ती तपाईंको सम्बन्ध छुटाइदिंदा पनि त्यसलाई भगवान्को दया मानेर प्रसन्न बन्नुहुन्छ भने पनि आनन्द-नै-आनन्द, अन्यथा तपाईंलाई दुःख-नै-दुःख हुन्छ। कुनै चीज नष्ट हुनेवाला छ तर तपाईं त्यसको संयोग चाहनुहुन्छ भने तपाईंलाई दुःख हुनेछ। तपाईं यहाँबाट बिदा हुनुहुनेछ, यिनलाई छोडेर जानुहुनेछ भने तपाईंलाई दुःख हुनेछ तर यदि जानुभन्दा पहिल्यैबाट नै यिनीहरूसित स्नेह-प्रेम हटाएर निश्चिन्त भएर बस्नुहुन्छ भने छोड्दा पनि आनन्द नै मिल्नेछ। जस्तै टिकट काटेर मनुष्य आफ्नो गन्तव्य स्थानमा जान चाहन्छ र प्रतीक्षा गर्छ कि अब गाडी आओस् त म बसूँ, यसै प्रकारले मृत्युको प्रतीक्षा गर्नुपर्छ। तैयार भएर प्रभुको साथ, आफ्ना मित्र भगवान्को साथ जानु छ, चाँडो-भन्दा-चाँडो आफ्नो जानु होओस् भन्ने सोचेमा राम्रो हुन्छ। यसप्रकार सबै पदार्थ हुन्। ती सबै जड-चेतन पदार्थसित पहिल्यैबाट नै स्नेह तोडिदिनुपर्छ। जड पदार्थ के हो? रूपियाँ, ऐश्वर्य- यी सबै जड पदार्थ हुन्। आफ्ना कुटुम्ब, यी सबैसित प्रेम हटाएर एक भगवान्सित प्रेम गर्नुपर्छ। भगवान्मैं प्रेम

किन गर्नुपर्छ? यसकारण कि भगवान् कहिल्यै मर्दैनन्। भगवान्सित हाम्रो संयोग हुनेछ त्यसो भएमा फेरि कहिल्यै वियोग हुनु छैन। जुन चीजहरूसित अन्तमा वियोग हुनु छ, आखिरमा संयोगको त्याग गर्नु नै छ भने त्यससित पहिल्यैदेखि नै स्नेह तोडिदिनुपर्छ। विचार गर्ने बेलामा नै आफूलाई जे सुख-दुःख हुन्छ त्यो हुनेछ, तर फेरि भविष्यमा कहिल्यै हुने छैन। सबै संसारका पदार्थ दुःखरूप र नाशवान् हुन् यस्तो बुझेर, विचार गरेर ती सबैसित आफ्नो स्नेह हटाएर केवल एक भगवान्सित प्रेम गर्नुपर्छ। यी पदार्थहरूसित हामीले प्रेम गर्यौं भने यो ठूलो भारी गल्ती गर्‍यौं, किनकि यी सबै मरणधर्मा हुन्। उनीसित प्रेम गर्नाले के लाभ? जुन चीज रहनेवाला छैन, थोरै दिनका लागि त्यससित प्रेम किन गर्ने? प्रेम त त्यससित गर्नुपर्छ जुन चीज स्थिर रहनेवाला छ। त्यो हो परमात्मा। परमात्मालाई छोडेर संसारमा यस्तो कुनै पनि पदार्थ या व्यक्ति छैन जुन सदैव स्थिर रहोस्।

भगवान्ले गीतामा भन्नुभएको छ-

**ये हि संस्पर्शजा भोगा दुःखयोनय एव ते।**
**आद्यन्तवन्तः कौन्तेय न तेषु रमते बुधः॥**

(५। २२)

'इन्द्रियका जति भोग हुन् र यिनबाट जे सुख हुन्छन् ती दुःखका नै हेतु हुन् आदि र अन्तवाला हुन्। यस्तो बुझेर ज्ञानी-विवेकी यिनमा रमाउँदैनन्।' संसारका कुनै पदार्थमा न त प्रेम गर्न हुन्छ, न त्यसको संग गर्न हुन्छ। न त्यसको नष्ट हुनाले रून हुन्छ र न उत्पन्न हुँदा त्यसको हर्ष मान्न पर्छ। भगवान्ले गीताको उपदेश दिंदै सार कुरा भन्छन्। दोश्रो अध्यायको एघारौं श्लोकदेखि भगवान् उपदेश आरम्भ गर्छन् भगवान् भन्नुहुन्छ-

**अशोच्यानन्वशोचस्त्वं प्रज्ञावादांश्च भाषसे।**
**गतासूनगतासूंश्च नानुशोचन्ति पण्डिताः॥**

भगवान् भन्छन् कि हे अर्जुन! जुन शोक गर्न योग्य छैनन् तिनका लागि तँ शोक गर्छस् तर कुराहरू पण्डितहरूका-जस्तै गर्छस्। जसका प्राण गए तिनका लागि र जसका प्राण गएका छैनन् तिनका लागि पनि पण्डित-ज्ञानी-विद्वान् मान्छेहरू शोक गर्दैनन्। तिनका लागि मूर्ख मान्छेहरू शोक गर्छन् अज्ञानीजन शोक गर्छन्। भगवान्को भनाइ छ कि शोक गर्नयोग्य केही पनि छैन, फेरि जो मरेका छन् तिनका लागि शोक कुन कुराको? जो मरे तिनी मरे। तिनीहरू फिर्ता फर्केर आउनेवाला छैनन्। तिनका लागि शोक गर्नु व्यर्थ छ। तिनीहरूसित हाम्रो के सम्बन्ध छ? यति नै सम्बन्ध थियो कि तिनीहरूसित हाम्रो लेना-देना थियो, सबै छुट्यो, हिसाब चुक्ता भयो, बडो राम्रो कुरा भयो, तिनी आफ्नो बाटो गए, तिनका लागि शोक गर्नुहुँदैन। आत्माका दृष्टिले पनि शोक गर्नुहुँदैन, भगवान् भन्नुहुन्छ-

**न जायते म्रियते वा कदाचि-**
**न्नायं भूत्वा भविता वा न भूयः।**
**अजो नित्यः शाश्वतोऽयं पुराणो**
**न हन्यते हन्यमाने शरीरे॥**

(गीता २। २०)

यो आत्मा न जन्म लिन्छ न मर्छ। यो आत्मा अज, नित्य, शाश्वत र पुरातन छ। शरीरको नाश हुँदा आत्माको नाश हुन्न। यसकारण आत्माका लागि शोक गर्नुहुँदैन र शरीरका लागि पनि शोक गर्नुहुँदैन, किनकि शरीर रहने कुरो हैन।

**अव्यक्तादीनि भूतानि व्यक्तमध्यानि भारत।**
**अव्यक्तनिधनान्येव तत्र का परिदेवना॥**

(गीता २। २८)

सबै भूत-प्राणी आदिमा निराकार थिए, शरीरधारी थिएनन् र भविष्यमा पनि निराकार यानी अप्रकट हुनेवाला हुन्; बीचमा थोरै समयका लागि शरीरवाला प्रतीत हुन्छन्। फेरि यस्तो स्थितिमा के शोक गर्नु छ? रात्रि स्वप्नमा कहीं राज्य मिल्यो जुन न हिजो-अस्ति थियो र न आज छ, हामी त्यसका लागि शोक किन गरौं? वास्तवमा विचार गर्‍यौं भने हामीले न त शरीरका दृष्टिले र न त आत्माका दृष्टिले शोक गर्न हुन्छ। न शरीरको परिवर्तनको नै शोक गर्न हुन्छ, किनकि-

**देहिनोऽस्मिन्यथा देहे कौमारं यौवनं जरा।**
**तथा देहान्तरप्राप्तिर्धीरस्तत्र न मुह्यति॥**

(गीता २। १३)

जुन प्रकार जीवात्माको यो शरीर बालक-अवस्था, युवावस्था, वृद्धावस्थालाई प्राप्त हुन्छ, उसै प्रकार देहान्तरको प्राप्ति हुन्छ, किन्तु जो धीर हुन्छन् ज्ञानी हुन्छन् उनीहरू यसमा मोहित हुन्नन् मूर्खहरू नै मोहित हुन्छन्।

**वासांसि जीर्णानि यथा विहाय**
**नवानि गृह्णाति नरोऽपराणि।**
**तथा शरीराणि विहाय जीर्णा-**
**न्यन्यानि संयाति नवानि देही॥**

(गीता २। २२)

जस्तै पुराना वस्त्रहरूलाई छोडेर मनुष्य अर्को नयाँ वस्त्र

धारण गर्छ, उसै प्रकार यो जीवात्मा पुराना शरीरहरूलाई छोडेर अर्को नयाँ शरीर प्राप्त गर्छ, यसमा शोकको कुन कुरा हो। यसरी भगवान्‌ले दिएका उपदेशमा यो नै बताइएको छ कि न त शरीरका दृष्टिले शोक गर्न हुन्छ र न आत्माका दृष्टिले। यसै प्रकार रामचरितमानसको किष्किन्धाकाण्डमा पनि तारालाई बालिको मृत्युमा जब उनी व्याकुल भएर विलाप गरिरहेकी छिन् रोइरहेकी छिन् त्यस समयमा भगवान् श्रीराम उपदेश दिन्छन्-

**छिति जल पावक गगन समीरा। पञ्च रचित अति अधम सरीरा॥**
**प्रगट सो तनु तव आगें सोवा। जीव नित्य केहि लगि तुम्ह रोवा॥**

(११। २-३)

उनी भन्छन्- तारे! आकाश, वायु तेज, जल र पृथिवी- यी पाँच भूतहरूले निर्मित यो अधम-अपवित्र शरीर तिम्रा सामुन्ने रहेको छ, यसका लागि यदि रून्छ्यौ भने यो त कहीं गएको छैन यहीं उपस्थित छ र यदि आत्माका लागि तिमी रून्छ्यौ भने आत्मा त नित्य, सत्य वस्तु हो त्यसको कहिल्यै नाश हुन्न। तिम्रो रूनुको के कारण हो त्यो बताऊ। यो सुन्दाबित्तिकै तारालाई ज्ञान भयो। तिनले भगवान्‌सित श्रेष्ठ भक्तिको वर माँगिन्-

**उपजा ग्यान चरन तब लागी। लीन्हेसि परम भगति बर माँगी॥**

(११। ३)

तिनका हृदयमा त्यही समय ज्ञान उत्पन्न भयो, किनकि उपदेष्टा स्वयं भगवान् थिए। तारालाई ज्ञान भयो र भगवान्‌का चरणहरूमा नुगी र वररूपमा भगवान्‌को परम भक्ति मागिन्। यसबाट पनि यो कुरा सिद्ध हुन्छ कि तारा रूनु बेकार थियो। यस कुरालाई ध्यानमा राखेर हर एक माता-बैनीले जसका पति

मरेका छन् यस उपदेशको सम्झना गर्नुपर्छ, यो भगवान्-द्वारा ताराका निमित्त दिइएको सबका लागि उपदेश हो। हर एक माता-बैनीहरूले भगवान्का चरणहरूमा नमस्कार गरेर उनीसित परम भक्ति माग्नुपर्छ। यसै प्रकार घरमा कोही पनि मरेको छ भने गीता पढेर यो शिक्षा लिनुपर्छ कि यो शरीर त नाशवान् छ, यसका लागि शोक गर्नु आवश्यकता छैन। आत्मा अविनाशी छ, त्यसका लागि पनि शोक गर्नु आवश्यकता छैन र शरीर जब पुरानो हुन्छ भने बदल्नु आवश्यक छ। जस्तै कपडा पुराना हुन्छन् भने त्यसलाई साटिन्छ। साटिंदा प्रसन्नता हुन्छ, त्यसरी नै शरीर साटिंदा पनि हामीलाई प्रसन्नता हुनुपर्छ। कहिल्यै पनि चिन्ता र शोक गर्नुहुँदैन। वैराग्यका दृष्टिले विचार गरेर हेरौं त जति ठूलो कुटुम्ब रहन्छ त्यसमा त्यति नै आसक्ति हुने हुनाले उति नै जप-ध्यानमा कमी हुन्छ। चित्तमा वैराग्य हुन्छ भने त्यसलाई यी चीजहरू राम्रा लाग्दैनन् एकान्त स्थान राम्रो लाग्छ, ऊ कुटुम्बको वृद्धिलाई देखेर आत्तिन्छ। वैराग्यका दृष्टिले हेर्‍यौं भने धेरै-धेरै कुटुम्ब हुनु हाम्रा लागि राम्रो हैन। परमात्माको प्राप्तिमा सहायक हुन्न। अतः वैराग्यका दृष्टिले पनि हामीले शोक गर्नुहुँदैन। घरमा कोही मर्छ भने ज्ञानको दृष्टिले पनि शोक गर्नुहुँदैन, जस्तै गीता र रामायणको दृष्टान्त दिएर बताइयो।

भक्तिको दृष्टिले ख्याल गरेर हेरे पनि शोक गर्नुहुँदैन किनकि भगवान्को चीज भगवान्कै छेउमा गयो। सबै भगवान्का चीजहरू हुन् तिनले मँगाउँछन् भने हाम्रा लागि राम्रो कुरा हो। जसका प्राण गए तिनका लागि पनि शोक गर्नुको आवश्यक छैन। जसको प्राण अन्तमा जाने नै वाला हो तिनका लागि पनि यी रहिरहून् भनेर

चिन्ता गर्नु आवश्यकता छैन। भगवान् जे गर्छन् त्यसैमा हामीले आनन्द मान्नुपर्छ, प्रसन्न रहनुपर्छ। सबैमा भगवान्को दर्शन गरेर सबैको सेवा गर्नुपर्छ र प्रत्येक क्रियालाई भगवान्को लीला बुझ्नुपर्छ। जे पनि भइरहेछ त्यसलाई हेरेर खुशी हुनुपर्छ। जे हुनु छ त्यही हुनेछ, त्यसमा हेरा-फेरी त हुनु छैन, फेरि हामी चिन्ता-शोक र भय गरेर आफ्नो जीवनलाई किन नष्ट गरौं। आमा-बैनीहरू तथा दाजुभाइहरूले यतातिर ध्यान दिनुपर्छ। यो शोक-निवारणको कुरा भनियो।

तपाईं ख्याल गर्नुहोस् कि प्रह्लादमाथि एकसे एक विपत्ति आइरहे। उनीमाथि हरसमय अत्याचार भइरह्यो तर पनि प्रह्लादका मनमा प्रसन्नता बढिरह्यो। प्रह्लाद यस तत्त्वलाई बुझ्दथे कि यो सबै भगवान्को विधान हो र यसमा मङ्गल भरिएको छ, अतः यो भगवान्द्वारा पठाइएको पुरस्कार हो। तिनलाई आगोमा बसालिदिए तर त्यो आगो पनि शीतल भयो र उनी आनन्दमा मुग्ध भइरहे। तिनले कहिल्यै यो कुरा भनेनन् कि ममाथि अत्याचार भइरहेछ, मलाई ठूलो कष्ट दिइँदै छ, हे प्रभो! हे परमात्मा! यस कष्टलाई मेटाऊ, यस कष्टलाई हटाऊ, म तपाईंको भक्त हूँ, मलाई यस कष्टबाट बचाऊ। प्रह्लादले कतै पनि यस्तो कुरा भनेनन्। यदि चिन्ता गर्नु उच्च दर्जाको कुरा हुन्थ्यो भने प्रह्लादले पनि गर्थे र भन्थे। यो त हामीहरूको कमजोरी, अबुझाइ हो कि दुःखलाई मेटाउनका लागि प्रयत्न गर्छौं, चेष्टा गर्छौं, प्रार्थना गर्छौं, बरू भगवान्को मङ्गल-विधानलाई मानेमा त आफ्नो काम चाँडै सिद्ध हुन्थ्यो। हेर्नुहोस्, प्रह्लादलाई कति समय लाग्यो? थोरै समयमा भगवत्प्राप्ति भयो। असुरहरू आएर कष्ट दिन लागे,

किन्तु प्रह्लादज्यूका हृदयमा किञ्चित् पनि भय भएन। उनीमाथि कति विपत्ति आए, यसको प्रह्लादज्यूले कहिल्यै हिसाब समेत राखेनन्। यसै प्रकार ध्रुवज्यूलाई पनि थोरै नै समयमा अर्थात् साढ़े पाँच महिनामा नै भगवत्प्राप्ति भयो। ध्रुव र प्रह्लादलाई सम्झेर हामीले विचार गर्‍यौं भने निश्चय हुन्छ कि कुनै पनि घटना यदि हाम्रो मनभन्दा विपरीत हुन्छ भने भगवान्को प्राप्ति शीघ्र हुन सक्छ। भगवान्को विशेष दया बुझ्नुपर्छ कि समय-समयमा भगवान् हाम्रो परीक्षा गरिरहन्छन्। यसमा कहिल्यै फेल हुनुहुँदैन। दुःखमाथि दुःख, आपत्तिमाथि आपत्ति आउन लागे भने हाम्रा सबै पाप शीघ्र नै समाप्त हुन्छन् र पछि गएर हेर्दा त भगवान् उभिएका हुन्छन्। जस्तै ध्रुव र प्रह्लादले भगवान्लाई देख्नुभयो। तपाईंले आपत्तितिर त ख्याल गर्नुभयो, किन्तु त्यसको फलतिर ख्याल गर्नुभएन। तपाईंले फलतिर ख्याल गर्नुपर्छ। साढ़े पाँच महिना ध्रुवले ठूलो दुःख पाएपछि ध्रुवलाई साक्षात् भगवान् विष्णु मिले। प्रह्लादले पनि कष्ट सहे र सानै उमेरमा नै तिनलाई भगवान् मिले।

यसरी कस्तै पनि विपत्ति आओस् तर त्यसलाई भगवान्को पुरस्कार मानेर हाँसिरहनुपर्छ। कुनै पनि घटना हुन्छ त्यसैमा सहमत हुनुपर्छ कि यो भगवान्को इच्छा हो, भगवान्को इच्छामा नै आफ्नो इच्छा, भगवान्को खुशीमा नै आफ्नो खुशी, आफ्नो कुनै पनि इच्छा छैन, कुनै पनि मर्जी छैन, यो हाम्रा लागि परम सौभाग्यको कुरा हो, यसरी आफ्नो जीवन बनाउनाले धेरै चाँडै परमात्माको प्राप्ति हुन सक्छ। जस्तै आमा छोरालाई पिट्छिन् तर त्यस पिटाइमा अमृत भरिएको हुन्छ, सुख भरिएको हुन्छ,

छोराको हित भरिएको हुन्छ। त्यस पिटाइमा जुन हित हुन्छ त्यो त थोरै हो, अल्प हो तर भगवान्‌को मारमा जुन हित छ त्यो ठूलो हुन्छ। ऊ ठूलो आमा हो, त्यसको हृदय लाखौं, करोडौं माताहरूको भन्दा पनि बढी छ। हामीले थोरै विश्वास राख्नुपर्छ, धैर्य राख्नुपर्छ कि भगवान् हामीलाई पिटिरहेका छन् दुःख पुऱ्याइरहेछन् त यसैमा ठूलो हित छ। हाम्रो बुझाइमा नआए पनि यो कुरा हामीले मान्नुपर्छ। गुरुको जुन मार छ त्यसमा पनि हित हुन्छ, किन्तु भगवान्-जतिको हैन। यस्तो बुझेर हामी हाँसिरहनुपर्छ। कुनै पनि कुरा होस् भगवान्‌को लीला बुझ्नुपर्छ। वस्तुमात्रमा भगवान्‌को स्वरूपलाई अनुभव गर्नुपर्छ र चेष्टामात्र जुन आफैं भइरहेछन् अनिच्छाले, परेच्छाले भइरहेछन् ती सबै भगवान्‌का लीला हुन्। जुन अनिच्छाले भइरहेछन् तिनलाई भगवान् आफू गरिरहेका छन् र जुन कुनै कार्य परेच्छाले भइरहेछन् तिनलाई भगवान् गराइरहेछन्। यसमा भगवान्‌को भूमिका छ भन्ने बुझेर हामी प्रसन्न हुनुपर्छ कि हाम्रा मित्र, प्रेमी, मालिक, भगवान्‌को हात हो फेरि दुःखी हुनुको कुनै कारणै छैन। दुःख हुन्छ भने हाम्रो मूर्खता, बेवकुफी हो। शास्त्र र महात्माहरूमा विश्वास गरेर भगवान्‌को लीलामा हरसमय हामी प्रसन्न रहनुपर्छ।

नारायण! नारायण! नारायण!

॥ श्रीहरि: ॥

# प्रेमको तत्त्व-रहस्य

परमात्मा या मुक्तिप्राप्तिका लागि जति साधन भनिएका छन् तिनको आदर दिनु नै साध्यलाई आदर दिनु हो। परमात्माप्राप्तिको उपाय–श्रद्धा र प्रेमपूर्वक भगवान्‌को नामको जप, उनको स्वरूपको ध्यान- यिनलाई मुक्ति तथा भगवान्‌भन्दा पनि बढेर बुझ्नुपर्छ। यो भगवान्‌को नै आदर हो। यो भाव राख्नुपर्छ कि आफ्नो नित्य-निरन्तर भगवान्‌सित सम्बन्ध बनिरहोस्। उनको स्मृति पनि हरसमय बनिरहोस्। भगवान् चाहे नमिलून् भगवान्‌मा हाम्रो परम प्रेम हुनुपर्छ। विशुद्ध प्रेम हुनुपर्छ। अनन्य प्रेम हुनुपर्छ। भगवान्‌मा हाम्रो परम श्रद्धा हुनुपर्छ, किनकि भगवान्‌भन्दा बढेर यदि कुनै चीज छ भने त्यो हो श्रद्धा र प्रेम। श्रद्धा तथा प्रेम भयो भने नै भगवान्‌को स्मृति निरन्तर बनिरहन सक्छ। यसकारण गीतामा त यहाँसम्म भनिएको छ कि मेरो नित्य-निरन्तर स्मरण बनिरहनुपर्छ- यो सबभन्दा उत्कृष्ट हो र कहीं प्रेमको कुरा भनिएको छ। यसबाट यो बुझ्नुपर्छ कि जहाँ नित्य-निरन्तर स्मरण हुन्छ, त्यहीं नै प्रेम हुन्छ र जहाँ प्रेम हुन्छ त्यहीं नै नित्य-निरन्तर स्मरण हुन्छ। यसकारण एउटालाई भन्दा दुवै नै भनिए-

**अनन्यचेताः सततं यो मां स्मरति नित्यशः।**
**तस्याहं सुलभः पार्थ नित्ययुक्तस्य योगिनः॥**

(गीता ८। १४)

भगवान् भन्नुहुन्छ कि जुन पुरुष अनन्यचित्त भई नित्य-निरन्तर मेरो स्मरण गर्छ, त्यो नित्य-निरन्तर स्मरण गर्नेवाला

योगीका लागि म सुलभ छु, सहजमा नै प्राप्त हुन सक्छु। यसै प्रकार प्रेमको कुरा भनिएको छ। भगवान् भन्नुहुन्छ कि म प्रेमले मिल्छु। शिवजी पनि श्रीरामचरितमानसमा देवताहरूसित भन्छन्-

**हरि व्यापक सर्बत्र समाना। प्रेम तें प्रगट होहिं मैं जाना॥**

हरि सबै स्थानमा समान भावले व्यापक छन् उनी प्रेमले मिल्छन्। प्रेम एक उच्च कोटिको भाव हो। क्रियाका अपेक्षा भाव प्रधान हुन्छ। अतः भगवान्मा आफ्नो प्रेम-भाव हुनुपर्छ, फेरि अरू थप केही कुराको पनि खाँचो हुन्न। प्रेमका लागि हामीहरू पागल जस्तै हुनुपर्छ। जस्तै लोभी मान्छे रूपियाँका लागि पागल-जस्तो हुन्छ। यसरी नै हामीहरू पनि भगवान्को प्रेमका लागि पागल हुनुपर्छ। फेरि भगवान् त हाम्रा पछि-पछि घुम्नुहुनेछ। भगवान् स्वयं भन्छन्- 'मेरा प्रेमी भक्त जहाँ-जहाँ जान्छन् वहाँ-वहाँ म तिनका पछि-पछि हिंड्छु। म कसैले रोकेर रोकिन्नँ, किन्तु सत्संगले रोकिन्छु।' सत् परमात्मा हो र संग प्रेम हो। भगवान्मा प्रेम असली सत्संग हो। भगवान् प्रेमले रोकिन्छन् उनलाई रोक्ने अरू कुनै दोश्रो उपाय छैन। हामीमा शुद्ध-साँचो परम प्रेम छ भने भगवान् हाम्रा पछि-पछि घुम्नुहुनेछ। हामीलाई फेरि भगवान्को के आवश्यकता छ। उही पुरुष सबैभन्दा बुद्धिमान् हो कि ऊ जहाँ रहन्छ, त्यहीं नै आफ्नो खाँचो जन्माइदिन्छ। फेरि मालिकलाई आफैं खाँचो हुन्छ कि यो बिना मेरो काम चल्नै सक्दैन भन्ने किसिमले। यदि हामीमा प्रेम हुन्छ भने हामी बिना भगवान्को काम पनि चल्ने छैन। भगवान्लाई हाम्रो नै खाँचो पर्नेछ। यसप्रकारको स्थिति उत्पन्न गरिदिनुपर्छ कि भगवान्लाई हाम्रो आवश्यकता होओस्। फेरि भगवान्लाई पनि बोलाउनुको आवश्यकता छैन। नबोलाई आउनेछन्। एउटा सानो

कथा छ–

कलकत्तामा एक अंग्रेजको सुती धागो र कपडाको ठूलो कारखाना थियो। उसका भारतमा अरू पनि कैयौं कारखानाहरू थिए। हिन्दुस्तानमा ऊ समान कोही पनि थिएनन्। एक जना दाजुसित केही कपास थियो, तिनले दलालहरूलाई बोलाएर भने कि साहेबसित भन कि म केही कपास बेच्न चाहन्छु, के भाउ लिनुहुन्छ। दलालहरू मालिककहाँ गए। मालिकले कपास खरीद मूल्यभन्दा पनि धेरै थोरै दाममा लिन चाह्यो। दलालहरूले ती दाजुसित भने कि मालिकले त तिमीलाई पैसाको खाँचो भएको मानेर कपासको दाम खरीद मूल्यभन्दा पनि धेरै थोरै दिन चाहन्छ। दाजु स्वयं दलालसँगै साहेबकोमा गए। कसैले भित्र गएर भन्यो कि साहेब! कपासका थोक–व्यापारी अमुक सेठ भेटिनका लागि आएका छन् र उनीसित धेरै कपास छ। साहेबले भने– 'मलाई कपास लिनु छैन।' दलाल बोले– 'कुनै पनि इच्छा लागेको भाउमा लिनुहोस्।' साहेब बोले– 'कुनै पनि भाउमा लिनु छैन।' दलालले आएर दाजुसित भने– 'दाजु! साहेब ले त कुनै पनि भाउमा लिन चाहँदैनन्।' सेठले भने– ठीकै छ। तदनन्तर उनले घरमा आएर विचार गर्न लागे कि अब के उपाय गरूँ। फेरि तिनै दलालहरूलाई बोलाएर सोधे। दलालहरूले भने कि कुरा यो हो कि साहेबलाई कपासको खाँचो त छ, किन्तु थोरै दाममा लिन चाहन्छन्। दाजुले पनि भने– ठीकै छ, मलाई पनि अहिले बेच्नु नै छैन। तिनले कपासको खेला गरे। खेला के गरे त? दुनियाँभरि कपासका जति पनि कारखानाहरू थिए, जहाँजहाँ कपास तैयार हुन्थ्यो, त्यहाँत्यहाँबाट करोडौं रुपियाँको कपास किनेर आफ्ना हातमा लिए। अर्थात् हिन्दुस्तानको अधिकांश

कपास तिनैको हातमा पुग्यो। अब बल्ल साहेबलाई कपासको आवश्यकता पर्‍यो त दलालहरूसित बजार-भाउमा कपास किन्नका लागि अनुरोध गरे। बजारमा कपासको दाम धेरै महंगो भयो। दलालले भने- साहेब! दाम धेरै महंगो छ। साहेब बोले- सबैभन्दा अधिक कपास कोसित छ? दलाल बोले- अमुक सेठसित छ। साहेबले भने- ऊसित भेट। ती सेठसित भेटिनका लागि दलालहरू गए र भने- साहेब कपास किन्न चाहन्छन्। सेठ बोले- मलाई कपास बेच्नु नै छैन। दलाल बोले- भाउ त बताऊ। सेठ बोले- भाउ त तब बताऊँला जब मलाई बेच्नु पर्छ, मलाई त कपास बेच्नु नै छैन। दलाल बोले- कपासको के गर्नुहुनेछ? सेठ बोले- मेरो जे इच्छा हुनेछ, त्यही गर्नेछु। दलालहरूले साहेबसित गएर भनिदिए कि साहेब! उसले त कपासै बेच्दैन। साहेब बोले- बेच्दैन भने के गर्छ रे? उसलाई भन- हामी ठीक दाम दिनेछौं। फेरि दलालहरू आए र सेठसित भने कि साहेबले दाम अत्यधिक दिनेछन्। सेठ बोले- मलाई बेच्नु नै छैन, गएर भनिदेऊ। दलालले साहेबसित गएर भने- साहेब! ऊ त कुनै पनि भाउमा बेच्दैन रे। साहेब बोले- भेट त गराऊ वा त्यसलाई यहीं बोलाएर ल्याऊ। दलाले गएर बोलाए- सेठजी! साहेब बोलाउँछन्। उनले भने- मलाई त कुनै आवश्यकता नै छैन साहेबसित भेट्ने। मलाई कपास बेच्नु भए पो साहेबसित भेट्नु। दलालले गएर भने- साहेब! ऊ त आउँदैन। त्यसलाई त कपास बेच्नु नै छैन। साहेब बोले- कुरासम्म त गराऊ। दलाल बोले- साहब! ऊ त आउन पनि आउँदैन। साहेबले दलालहरूसित भने- त्योसित भन कि साहेब आउन चाहन्छन्। आफ्नो सुविधाअनुसार भेट्ने कुनै समय बताऊ। दलालहरूले सेठसित भने त सेठ बोले- मसित

भेट्ने कुनै समय पनि छैन। तिनीहरूले गएर भने- साहेब! ऊसँग भेट्ने समय पनि छैन। साहेब बोले- हिंड, जब आवश्यकता छ भने त्योसित आफैं गएर भए पनि मिल्नु नै पर्छ। गएर गद्दीमाथि बसे र त्यहाँका मान्छेसित सोधे- सेठ कहाँ छन्? मान्छेले भने- सेठजी भोजन गर्न गएका छन्। साहेबले भने- गएर भन कि साहेब आएका छन् गद्दीमा बसेका छन्। मान्छे भित्र गएर सेठलाई भनेर फर्की आयो। फेरि साहेबले सोधे त नोकरले भन्यो- भनिदिएँ, अहिले भोजन गरिरहनुभएको छ। केही समयपछि फेरि सोधे- भोजन गरे कि नाइँ। जवाफ आयो, गरे। फेरि सोधे- के गरिरहेका छन्। नोकरले भन्यो- हात धुँदै छन्। साहेब बोले- उनीसित भन कि साहेब धेरै समयदेखि कुरेर बसेका छन्। उसले भन्यो- साहेब! भनिदिएँ। फेरि बिस्तारै-बिस्तारै सेठ दाजु आए। साहेबले भने- तपाईंसित कपासको धेरै ठूलो स्टक छ? मेरा सबै कारखानाहरू कपासबिना बन्द भएका छन्। केही कपास मैले पाउँदिनँ जसबाट कारखानाहरू चल्न सकून्। मेरा कारखानाहरू बन्द रहने या कपास पाइने? उनी बोले- साहेब! कपास बेच्नु नै छैन। साहेब बोले- नबेचेर कपास के गर्नेछौ? सेठ बोले- जेसुकै गरूँ। साहेब बोले- त्यसो हो भने मेरा सबै कारखानाहरू तिमी लिअ भाइ! किनकि बिना कपासका ती चल्ने छैनन् तिमी नै चलाऊ। सेठ बोले- साहेब! तपाईंलाई सम्झना छ कि छैन जुन दिन मलाई कपास बेच्नु थियो, तब तपाईं मसित भेट्न पनि भएन र भन्न लगाइदिनुभयो कि कपास लिनु छैन। त्यस दिन तपाईंलाई लिनु थिएन आज मलाई बेच्नु छैन। साहेब बोले- भाइ! तिमी जित्यौ म हारें। अब तिमी जे भन्नेछौ उही गर्नका लागि म तैयार छु। सेठ बोले- ठीकै छ, तपाईं यदि यसरी तैयार हुनुहुन्छ

भने म पनि तैयार छु। जस्तो तपाईंको मर्जी। सबै कपास तपाईंको हो र म पनि तपाईंको नै हूँ। साहेब बोले- भाइ! सबै कारखानाहरू तपाईंका र म पनि तपाईंको, जस्तो इच्छा छ, गर। सेठ बोले- 'म पनि तपाईंको, कपास पनि तपाईंको, जे मर्जी छ सो गर।' यो दृष्टान्त हो।

दृष्टान्तलाई यहाँ परमार्थका विषयमा घटाएर हेर्नु छ। यहाँ साहब को हो? भगवान्। बीचमा वाणिज्य गराउनेवाला दलाल को हो? महात्माजन। कपासको स्टक गर्नेवाला सेठ को हो? साधना गर्ने साधक। कपास के हो? भगवत्प्रेम। पहिला त उनले कपास बेच्न खोज्दा साहेबले त्यतातिर ध्यान पनि दिएनन्। प्रेम बेच्छु प्रेम बेच्छु भने तर उनको प्रेम जब सकाम थियो तब भगवान्ले पर्वाह गरेनन्। दलालहरूले भने कि महाराज! अमुक मान्छे तपाईंसित प्रेम गर्छ र केही चाहन्छ त जवाफ आयो- मसित फुर्सद छैन। हामी व्यवहारमा पनि देख्छौं, धनी मान्छेहरूकोमा भिखारीहरू जान्छन् तर धनी मान्छेहरू बोल्नसम्म पनि बोल्दैनन्। यसरी नै मान्छेहरू भन्छन् सेठसित भेट्नु छ, बिचरा केही लिनका लागि जान्छन्। चाकरहरू सोध्छन्- मतलब के छ? जवाफ दिन्छन्- सेठसित भेट्नु छ। भेटिंदा रूपियाँको चर्चा गरिदिन्छन् त सेठ मुख पनि फर्काउँदैनन्। संसारमा धनी मान्छे स्वार्थी मान्छेहरूसित भेटिन चाहन्नन्। यसै प्रकारले सकाम प्रेमीसित भगवान् भेटिन चाहन्नन्। उसले सोच्यो कि नभेटिने भए प्रेम संग्रह गर। प्रेमको त तिनलाई पनि खाँचो छ नै। उसले जहाँकहीं प्रेम भेटियो संग्रह गर्दै गयो। जसरी कपास संग्रह गर्‍यो, त्यसरी नै प्रेम एकमुष्ट गर्‍यो। प्रेम एकमुष्ट गरेर प्रेमलाई बढाउने चेष्टा पनि शुरू गरिदिए। दुनियाँभरिको प्रेम किनेर एकमुष्ट गरे। प्रेम एकमुष्ट

गर्नु के हो? कोही पनि मान्छे भगवान्‌को भक्ति गरोस्, उनको सेवा गरोस्, यसरी ऊ प्रेम किन्छ। जसरी कपास एकत्र भयो, त्यसरी नै विशुद्ध प्रेम र अनन्य प्रेम एकमुष्ट भयो। प्रेम एकमुष्ट भयो। भगवान्‌लाई प्रेमको आवश्यकता थियो, बिना प्रेम उनको काम चल्दैन। उनका सबै कारखानाहरू बन्द हुन्छन्। तब दलालहरूलाई पठाए कि त्यस मान्छेसित भेटिन चाहन्छु। दलालहरूले भने- साहेब सम्झना गर्छन् उनी भन्छन् गर्न देऊ। मलाई कपास बेच्नु छैन यानी प्रेम बेच्नु छैन। हामीलाई प्रेम बेच्नु भए पो साहेब (भगवान्)-सित जाऔं। मलाई त उनको खाँचो छैन। भगवान् भन्नुहुन्छ- राम्रो, म आउँछु, प्रेमीसित त मिल्नु नै छ। भगवान् सोधाउँछन् कि भेटिनका लागि समय त बताऊ। उनी भन्छन्- मसित समय छैन। भगवान् आएर द्वारमा बस्छन् र भन्छन् भेटिन चाहन्छु। फेरि जब भेट हुन्छ तब उनी भन्छन् वरदान माँग। उनी भन्छन् मलाई केही लिनु छैन। उनी बोल्छन् जे तिम्रो इच्छा होस् माँग। उनी भन्छन् इच्छा छँदै छैन मेरो। उनी भन्छन् हामी त भाइ तिम्रो प्रेममा बेचिएर तिम्रा भयौं। तिमीलाई चलाउन होस् त चलाऊ। तब ठीक छ, मेरो जुन कपास (प्रेम) छ, म छु, सबै तपाईंका हौं, जे मर्जी हुन्छ सो गर, जे पनि छ सबै तपाईंको नै हो, म पनि तपाईंको हूँ। किन्तु तपाईंलाई थाहा छ नि, कुनै समयमा तपाईंलाई बोलाउनका लागि दलालहरूलाई पठाएँ र राम्रा-राम्रा पुरूषहरूबाट, साधुहरूबाट, महात्माहरूबाट धेरै चेष्टा गरें-गराएँ। तर तपाईंले कहिल्यै दर्शन दिन आउनुभएन। तपाईंकोमा जानका लागि तैयार भएँ। तब पनि तपाईं भेटिन चाहनुहुन्थेन। मैले तपाईंको अड्को बुझें कि भाइ, जब मलाई कपास बेच्नुको खाँचो छ, अर्थात् प्रेम बेच्नुको खाँचो छ तबसम्म भगवान्

किन्दैनन्। वहाँलाई जब प्रेम किन्नुको आवश्यकता हुनेछ, जब भगवान्‌लाई यस दुनियाँमा प्रेम मिल्ने छैन, तब दगुरेर आफैं नै आउनुहुनेछ। भगवान्‌लाई वशमा गर्नुको उपाय हो- विशुद्ध प्रेम; जुन प्रेममा कामना रहन्छ, वास्तवमा त्यो प्रेम नै हैन। भगवान्‌सित यस्तो विशुद्ध प्रेम गरोस् कि भगवान्‌लाई बाध्य भएर आउन परोस्।

एक सानो-जस्तै घटना यहाँहरूलाई बताउँछु। इतिहासमा पंढरपुरमा पुण्डरीक नाम गरेका एक व्यक्ति माता-पिताका भक्त थिए। पहिला उनी त्यस्ता भक्त थिएनन् किन्तु एक माता-पिताका भक्तलाई देखेपछि उनमा पनि भक्ति जन्मियो। उनी माता-पिताको खूब भक्ति गर्थे। एक दिन भगवान् आएर बोल्नुभयो- पुण्डरीक! उनी बोले- को हो! उहाँ बोल्नुभयो- भगवान्। उनले भने- कसरी आउनुभयो? उहाँ बोल्नुभयो- म तिमीलाई भेट्नका लागि आएको छु। पुण्डरीकले भने- महाराज! मलाई त अहिले कुरा गर्ने फुर्सद छैन। तपाईं आउनुभएको छ भने बस्नुहोस्। भगवान् उनका पछाडि उभिनुभएको थियो। उनका छेउमा एक ईंट्टा लडेको थियो, त्यसलाई आसनका लागि पछाडि सारिदिएर भने- यसमा बस्नुहोस्। भगवान् बोल्नुभयो- म भगवान् हूँ, तिमीसित भेट्नका लागि आएको छु तर तिमीलाई भने मसित भेट्ने फुर्सद पनि छैन? उनले भने- महाराज! यस समय फुर्सद छैन, म आफ्ना माता-पिताको सेवा गरिरहेछु, मैले त तपाईंलाई बोलाएको हैनँ, तपाईं किन आउनुभयो? भगवान् बोल्नुभयो- 'तिमी माता-पिताका भक्त हौ, यसकारण तिमीलाई दर्शन दिनका लागि आएको हूँ।' पुण्डरीकले भने- माता-पिताको सेवाको यति प्रभाव छ कि नबोलाईकन तपाईंलाई आउन पर्‍यो? भगवान्

बोल्नुभयो– माता–पिताका सेवाको त यस्तै नै प्रभाव छ। पुण्डरीकले भने– त तपाईं नै विचार गर्नुहोस्, जुन माता–पिताको सेवाको यस्तो प्रभाव छ कि नबोलाईकन तपाईंलाई आउन पर्‍यो भने ती माता–पिताको सेवालाई म तपाईंसित भेटिनका लागि छोडिदिऊँ? तपाईं बस्नुहोस्, यदि तपाईंसित समय छैन भने फेरि पछि कहिल्यै आउनुहोस्। भगवान् सम्मुख आएर बोल्नुभयो– म तिम्रो निष्ठा देखेर तिमीमाथि धेरै प्रसन्न छु। माता–पिताको सेवामा तिम्रो यति ठूलो निष्ठा। यसै प्रकार भगवान्‌को भजन–ध्यानमा पनि हाम्रो अनन्य निष्ठा हुनेछ भने तिनलाई आउन पर्नेछ। जब माता–पिताका भक्तका लागि उनी नबोलाईकन नै आउँछन् भने भगवान्‌को भक्ति गर्नेवालाहरूकहाँ किन आउने छैनन्! भगवान्‌को भजन–ध्यान श्रद्धा–प्रेमपूर्वक गर्नुपर्छ। फेरि भगवान्‌लाई त बाध्य भएर आउन पर्नेछ, जस्तै सूरदासजी भन्छन्–

**बाँह छुड़ाये जात हौ निबल जानिकै मोय।**
**हृदयसे जब जाओगे तब पुरुष बदूँगा तोय॥**

'मलाई कमजोर मानेर समातेको हात फुस्काउँदै तपाईं गइरहनुभएको छ किन्तु जब तपाईं मेरो हृदयबाट पनि निस्केर जानुहुनेछ तबमात्र म तपाईंलाई बलियो पुरुष बुझ्नेछु।' भगवान् फेरि फिर्ता आउनुभयो। सुरदासलाई नेत्र दिएर बोल्नुभयो– सूरदास! म तिमीसित प्रसन्न भएँ। सूरदास बोल्नुभयो– प्रभो! जब तपाईं प्रसन्न भएर मिल्नुभयो त अब बाँकी नै के रह्यो। भगवान्‌ले भन्नुभयो– तिमी वरदान माँग। सूरदास बोल्नुभयो– महाराज! म त यो नै वरदान चाहन्छु कि म पहिल्यै सूरदास थिएँ, त्यस्तो नै बनूँ, किनकि सुरदासको अवस्थामा नै तपाईंको दर्शन भयो, तपाईं मिल्नुभयो, तब ध्यान बडो राम्रो लाग्दथ्यो,

आँखाबाट अरू कुनै चीज देखिन्थेन; तपाईं-नै-तपाईं देखिनुहुन्थ्यो, त्यसरी नै मेरो ध्यान तपाईंमा लागिरहोस्। जुन ध्यानको समयमा तपाईं प्रकट हुनुभयो बस, त्यस्तै ध्यान सधैं चाहन्छु। भगवान् बोल्नुभयो- तथास्तु (त्यस्तो नै हुनेछ)। भगवान्भन्दा पनि ठूलो भगवान्को भजन-ध्यान हुन्छ। यदि हाम्रो भजन-ध्यान सकाम हुन्छ भने हामीलाई भगवान्को खुशामद गर्नुपर्नेछ तर यदि हाम्रो भजन-ध्यान श्रद्धाले भगवान्मा निष्काम प्रेम बढाउनका लागि हुन्छ भने फेरि भगवान्लाई हाम्रो खाँचो हुनेछ, हामीलाई भगवान्को खाँचो रहने छैन। आफ्नो सेवाको यस्तो आवश्यकता उत्पन्न गरिदिनुपर्छ कि जसबाट मालिकलाई आफ्ना खाँचो हओस्। फेरि मालिकले नै खुशामद गर्नेछन् हामीलाई खुशामद गर्नुपर्ने छैन। हनुमानजीले यस्तो भजन गरे कि भगवान्लाई आफ्ना वशमा गरे-

**सुमिरि पवनसुत पावन नामू। अपने बस करि राखे रामू॥**

जस्तै कामी पुरुषलाई कामिनी आफ्नो वशमा गर्छे। काम-दरिद्रलाई त्यसकी स्त्री आफ्नो वशमा गर्छे। यसै प्रकारले भगवान् प्रेमका वशमा हुन्छन्। स्वयं भगवान् भन्नुहुन्छ- '**अहं भक्तपराधीनः।**' म भक्तहरूका पराधीन छु। भगवान् प्रेमीहरूका पराधीन हुन्छन्-

**ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्।**

(गीता ४। ११)

भगवान् भन्नुहुन्छ कि जसले मलाई जुन प्रकारले भज्दछ म उसलाई त्यसरी नै भज्दछु। सबैभन्दा बढेर भगवान्को भजन-ध्यान हो र यो श्रद्धा तथा प्रेमले होओस् त योभन्दा बढेर कुनै कुरा नै छैन। हामी भगवान्लाई श्रद्धा र प्रेमले भज्नेछौं त भगवान्ले हामीलाई भज्नुहुनेछ। हामी भगवान्लाई कहिल्यै भुल्ने

छैनौं त भगवान्ले हामीलाई कहिल्यै भुल्नुहुने छैन। हामी भगवान्लाई आफ्नो सर्वस्व समर्पण गरिदिनेछौं त भगवान्ले पनि हामीलाई आफ्नो सर्वस्व समर्पण गरिदिनुहुनेछ। भगवान्लाई जित्ने यो सरल उपाय हो। यसरी जो भगवान्को भक्ति गर्छ, भगवान् त्यस भक्तका अधीन हुन्छन्। यस्ता भक्त जसका अधीन भगवान् छन् भगवान्भन्दा पनि बढेर हुन्। श्रीरामचरितमानसमा पनि भन्नुभएको छ–

**मोरें मन प्रभु अस बिस्वासा। राम ते अधिक राम कर दासा॥**
**राम सिंधु घन सज्जन धीरा। चंदन तरु हरि संत समीरा॥**

यसको अर्थ धेरै नै सरल छ, तैपनि शब्दार्थ भनिन्छ। हे प्रभु! मेरा मनमा यस्तो विश्वास छ कि रामभन्दा पनि बढेर रामका दास हुन्छन्। राम समुद्र समान हुन् र उनका भक्त बादल समान। यद्यपि बादल सागरबाट नै जल उठाउँछन् अधिकांश जल सागरबाट नै प्राप्त हुन्छ, परन्तु किसानहरू बादललाई नै चाहन्छन् सागरलाई चाहन्नन्। उच्च कोटिका महात्माहरू जब प्रेम, प्रभाव, गुणहरूको वर्षा गर्छन् त सुन्ने जति सबै मुग्ध हुन्छन्। किसान वर्षाको जल पाएर मुग्ध हुन्छन्। समुद्रको अपार तमतमाउँदो जल बादलको मुखमा आउनाले मीठो हुन्छ, यस्तै भगवान् जो निर्गुण-निराकार हुन् बुझ्नमा धेरै नै कठिन प्रतीत हुन्छन्। भगवान्का भक्त उनलाई सरलताले यस्तो मीठो गरेर भन्छन् कि सबै जना बुझ्न सक्छन्। यसकारण भगवान्भन्दा पनि बढेर भगवान्का भक्त हुन्। चन्दन-वृक्षका समान भगवान् र वायु समान भक्त हुन्। चन्दनका वृक्षको गन्धलाई लिएर वायुले सबै वृक्षहरूलाई चन्दन बनाइदिन्छ। वृक्षहरूले वायुलाई नै आशीर्वाद दिन्छन् तिनैको गुण गाउँछन्।

यो व्रज हो। यहाँ गोपिनीहरू भगवान्का भक्त थिए र गोपिनी तिनलाई थोरै मोहीका लागि समेत नचाउने गर्थिन् तथा भगवान् तिनीहरूका वशीभूत भएर नाच्ने गर्दथे। प्रेमका कारण भगवान् राधिकाजीको त एकदम नै वशमा थिए। सबै दुनियाँलाई आह्लादित गर्नेवाला भगवान्लाई आह्लादित गरिरहन्छिन् राधिकाजी। राधिकाजी भगवान्की आह्लादिनी शक्ति हुन्। सबै दुनियाँलाई आनन्द पुऱ्याउनेवाला भगवान्लाई आनन्द दिन्छिन् भगवान् उनका अधीन छन्। उनी जस्तो नचाउँछिन् त्यस्तै नाच्छन्। हाम्रा सबै क्रिया भगवान्लाई आह्लादित गर्नका लागि हऊन् हाम्रा हृदयका भाव, वाणीका शब्द, शरीरका क्रिया, सबै-सबै भगवान्लाई मुग्ध गर्नेवाला होऊन्; फेरि हामीलाई भगवान्को दर्शनको कुनै आवश्यकता पनि छैन। भगवान्लाई आवश्यकता होस् त उनी नै आएर दर्शन गरून्। यो उच्च कोटिको भाव हो।

भाव नै प्रधान हो। श्रद्धा, प्रेम, शान्ति, निष्काम, शान्तरस र माधुर्य आदि सबै भाव हुन्। भाव सर्वश्रेष्ठ चीज हो। जब मनुष्य भावावेशमा हुन्छ त भगवान् स्वयं आएर उसलाई चेत गराउँछन्। सुतीक्ष्णजीलाई भावावेश भयो त स्वयं भगवान् आएर उनलाई उठाउँछन्। ***'उठो उठो, द्विज मम प्राण सम'*** प्राणका समान मेरा प्यारा द्विज! उठ, म आएँ। किन्तु उनी ध्यान र प्रेम-भावमा यस्तो मस्त भए कि तिनलाई थाहा नै छैन कि भगवान् आएका छन्। फेरि भगवान्ले आफ्नो स्वरूपलाई लुकाए। तिनले आँखा खोलेर हेरे त भगवान् सामुन्ने खड़ा छन्। तब भगवान्को स्तुति गर्न लागे। प्रेममा मुग्ध भए। भगवान् नै त्यहाँ आए। भगवान् त यस्ता भक्तहरूलाई खोजिरहन्छन् खोजिरहन्छन्। हामीले भाव बढाउनुपर्छ।

पदार्थले समेत भावसित सम्बन्ध राख्छन्। जति चीजहरू छन् जब तिनको भाव (भाउ) तेज हुन्छ तब तिनको राम्रो दाम मिल्छ। हाम्रो हृदयको भाव तेज भयो भने त्यसको दाम राम्रो लाग्छ। प्रेम बढ्नुपर्छ। प्रेम उच्च कोटिको भाव हो। हृदयमा प्रेम संग्रह गर्नुपर्छ, बटुलेर एकमुष्ट गर्नुपर्छ। सबै दुनियाँको प्रेमलाई को एकमुष्ट गर्न सक्छ? जो भगवान्को अनन्य भक्त हुनेछ। सबैलाई भगवान् मानेर, सबका हितमा जो रत रहन्छ, सबका लागि जसले आफैंलाई समर्पण गरिदिन्छ, उसले सबैलाई जित्दछ, सबैलाई किन्दछ। भगवान् श्रीरामचरितमानसको किष्किन्धाकाण्डमा हनुमानजीसित भन्छन्–

**समदरसी मोहि कह सबै कोऊ। सेवक प्रिय अनन्य गति सोऊ॥**

सबै मलाई समदर्शी भन्छन् किन्तु अनन्य सेवक तथा अनन्य भक्त मलाई बढी प्रिय छन्। सम भएर पनि ममा यो एक विशेष कुरा छ। अनन्यभक्तका लक्षण यी हुन्–

**सो अनन्य जाकें असि मति न टरइ हनुमंत।**
**मैं सेवक सचराचर रूप स्वामि भगवंत॥**

मेरा अनन्यभक्तको बुद्धिबाट यो सिद्धान्त कहिल्यै टर्दैन वा हट्दैन कि यो चराचर भगवान्को स्वरूप हो। यस्तो साँचो सेवक बनौं, सबैलाई साक्षात् नारायण मानेर, सबैलाई भगवान् मानेर सबैको सेवा गरौं। जसले सबैका लागि आफूलाई समर्पण गरिदिन्छ त्यो भगवान्को अनन्य भक्त हो। सबैलाई जित्ने उपाय हो निष्काम भाव। भगवद्भावले सबैको सेवा गर्नेवालाले सबैलाई जित्दछ सबैलाई किन्दछ, सबैको प्रेमलाई आफूमा आकृष्ट गर्छ। सबै उसलाई चाहन्छन् सबै त्यसको प्रेमका अधीन हुन्छन् यस्ता

प्रेमीका भगवान् अधीन हुन्छन्। भगवान् भन्नुहुन्छ– म भक्तका अधीन छु। त्यस्ता भक्तका लागि मात्र भन्न सकिन्छ कि उनी भगवान्भन्दा पनि बढेर हुन्। हामीहरूलाई यस्तो नै बन्ने कोशिश गर्नुपर्छ। यो प्रेमभावको कुरा भनियो। भगवान्को प्रेमको विषयको तात्त्विक कुरा बताइयो।

अर्को कुरा छ भगवान्को रहस्यको। जुन लुकेको कुरा हो, रहस्यको कुरा हो कि भगवान् प्रेमीका अधीन हुन्छन्। प्रेमी बडो उच्च कोटिका महात्मा पुरुष हुन्छन् यो ठीक हो किन्तु यस संसारमा जो गएगुज्रेका छन् यस्ता पुरुषहरूका लागि पनि कुनै उपाय छ के? भगवान् भन्नुहुन्छ–

**अन्ये त्वेवमजानन्तः श्रुत्वान्येभ्य उपासते।**
**तेऽपि चातितरन्त्येव मृत्युं श्रुतिपरायणाः॥**

(गीता १३। २५)

जो मूर्ख छन् अज्ञानी छन् जान्नेवालाहरू छैनन् ती पनि जान्नेवाला पुरुषहरू, उच्च कोटिका महात्माहरूका छेउमा गएर, सुनेर तथा सुन्नुका परायण भएर मृत्युरूप संसार–सागरबाट तर्छन्। ती पनि उनका कुराहरू सुनून् र साधन गरून्। प्रश्न हुन्छ कि– जुन दीन छ, दुःखी छ, अनाथ छ, असमर्थ छ, कुनै लायक छैन र पापी छ त्यस्ताका लागि पनि कुनै उपाय भनिएको छ? भगवान् भन्नुहुन्छ–

**अपि चेत्सुदुराचारो भजते मामनन्यभाक्।**
**साधुरेव स मन्तव्यः सम्यग्व्यवसितो हि सः॥**

(गीता ९। ३०)

यदि अतिशय दुराचारी पनि मलाई अनन्यभावले भज्नेवाला

होस् त त्यो पनि शीघ्र नै धर्मात्मा भएर नित्य शान्ति प्राप्त हुन्छ। कस्तै पनि पापी होस्, कस्तै पनि नीच होस्, त्यो पनि भगवान्‌को अनन्य-भक्त बन्न सक्छ। अरू कुनै सरल उपाय छ? भगवान् भन्नुहुन्छ- '**सुहृदं सर्वभूतानां ज्ञात्वा मां शान्तिमृच्छति।**' मलाई सबैको सुहृद् जानेमा त्यसलाई शान्ति प्राप्त हुन्छ। सुहृद् भनेको भगवान् बिना कारण नै प्रेम गर्नेवाला हुन् दया गर्नेवाला हुन्। म भगवान्‌सित प्रेम गरूँ र उनी मसित प्रेम गरून् यो एक प्रकारले न्याय नै हो, यसमा उनको कुनै सुहृदयता छैन, भक्त नै सुहृद् हो भगवान्‌को अपेक्षा। उनले स्वयं यो कुरा भनेका छन्-

**उदाराः सर्व एवैते ज्ञानी त्वात्मैव मे मतम्।**

(गीता ७। १८)

जति मेरा भक्त छन् सबै उदार छन् ज्ञानी त साक्षात् मेरो आत्मा नै हो। सबै उदार यसकारण छन् कि तिनले ममाथि ठूलो उदारता गरे र मलाई भज्न शुरू गरे। यसकारण उनीहरू उदार हुन् श्रेष्ठ हुन्। म तिनलाई भज्न शुरू गर्थें यसभन्दा पहिल्यै तिनीहरूले मलाई भज्न शुरू गरे, यसकारण उनीहरू उदार हुन् श्रेष्ठ हुन्। आफ्नो तन, मन, धन र समय ममाथि विश्वास गरेर मलाई नै दिए। उनीहरूले आफ्नो सर्वस्व मलाई अर्पण गरिदिऊन् र म आफ्नो सर्वस्व उनीहरूलाई अर्पण गरिदिऊँ तैपनि उनीहरू श्रेष्ठ हुन् उनीहरूसँग जे-जति पूँजी छ त्यो सबै मलाई अर्पण गरिदिऊन् र मसँग जे पूँजी छ, म अर्पण गरिदिऊँ त बराबर हो, तैपनि म तिनको ऋणी भएँ, किनकि प्रथम समर्पण त तिनले नै शुरू गरे, अतः उनीहरू उदार हुन्। भगवान् तिनलाई उदार भन्छन्। भगवान्‌लाई हामी सुहृद् बुझ्यौं भने मुद्द डुंगा पार हुन्छ।

सुहृद् हुन् यो भज्नुको आवश्यक छैन, ध्यान गर्नुको आवश्यक छैन, किन्तु यो कुरा हामी बुझिलिऊँ कि भगवान् सबैका सुहृद् हुन् ती सबैमा हामी पनि हौं। भगवान् प्रेमी हुन् हाम्रा सुहृद् हुन् हामीमाथि बिना कारण दया-प्रेम गर्नेवाला हुन्। कारण होस् त कुरा नै के? भगवान्ले मनुष्य-शरीर हामीलाई यो मानेर दिनुभयो-

**कबहुँक करि करुना नर देही। देत ईस बिनु हेतु सनेही॥**

हामीहरू काल, कर्म र स्वभावले घेरिएका चौरासी लाख योनिहरूमा भौंतारिन्थ्यौं। हाम्रो यस दशालाई देखेर बिना नै कारण प्रेम र दया गर्नेवाला भगवान्ले हामीहरूलाई मनुष्यशरीर दिनुभयो। भगवान्ले करूणा गरेर यी जीवहरूलाई मनुष्यको शरीर दिन्छन्। बिना नै कारण उनी दया गर्छन् बिना नै कारण प्रेम गर्छन् उनलाई यस्तो सुहृद् बुझ्नाले पनि कल्याण हुन्छ। यदि भनौं कि हामीहरू यस्तो त सुन्छौं र पढ्छौं परन्तु वास्तवमा भगवान् यस्तै नै छन् हामी बुझ्दैनौं। यदि भनौं कि तपाईंलाई के थाहा। म सुहृद् नै बुझ्छु, यदि तपाईं पनि भगवान्लाई सुहृद् बुझ्नुहुन्थ्यो भने तपाईं पनि सुहृद् हुनुहुन्थ्यो। भगवान् बिना कारण दया-प्रेम गर्नेवाला हुन्। यस रहस्य-तत्त्वलाई यदि बुझ्नुहुन्थ्यो भने तपाईंहरू पनि त्यस्तै बन्नुहुन्थ्यो। कम्तीमा यो त हुन्थ्यो कि तपाईंहरूका मनमा प्रेम, आनन्द, शान्ति र दयाको एक समुद्र उर्लिन्थ्यो। तपाईं यो बुझ्नुहुन्थ्यो कि भगवान्को हामीमाथि यति दया छ, हामी जस्ता गएगुज्रेका तुच्छ जीवहरूमाथि भगवान्को यति दया, यति भारी प्रेम छ कि यसलाई बुझ्दाबित्तिकै नै पागल-जस्ता हुनुहुन्थ्यो। हामी हेर्छौं कि कोही साह्रै सानो मान्छे जसले कुनै प्रकारले एक रुपियाँको चिठ्ठा किन्यो तथा त्यस

चिठ्ठाबाट दुई-चार करोड रूपियाँ आयो, ऊ यसलाई सुनेर हर्षले भरिन्छ। जसको औकात सय रुपियाँको छैन तर अब मिलोस् करोडौं रूपियाँ त त्यो पागल-जस्तो हुन्छ, त्यसको खुशीको सीमा रहँदैन।

हामी एक तुच्छ मान्छे हौं र यो बुझौं कि भगवान्को हामीप्रति यति दया, यति प्रेम छ फेरि पनि हामीलाई होश रहँदैन। हाम्रो दशा बे-दशा हुन सक्छ। यो हामी सुन्छौं, पढ्छौं किन्तु कहाँ बुझ्दछौं? हिन्दुस्तानमा यदि यहाँका कुनै बादशाहको कसैमाथि अकारण दया-प्रेम होस् त ऊ मख्ख पर्छ। समस्त ब्रह्माण्डको मालिकको बिना नै कारण हामीप्रति प्रेम र दया भएको ज्ञान हामीलाई होस् त हाम्रो कुन दशा होला, त्यसलाई हामी सँमाल्न सक्दैनौं। यसको भाव यो हो कि भगवान् पात्रलाई त दया गर्छन् नै अपात्रमाथि पनि दया गर्छन्। छोरो कति नै कुपुत्र होस्, माता-पिताको त त्यसमाथि सदा दया नै रहन्छ। दया नरहोस् त केटो बाँच्न कसरी सक्छ। यदि तीन-चार सालको बच्चोले मातालाई हान्यो र पिताको जुँगा उखेल्यो या उद्दण्डता गर्यो भने पनि माता-पिताको त्यस बच्चामाथिबाट दया टाढा हुन्न, त्यस्तै भगवान्को दया पनि हामीमाथिबाट कहिल्यै टाढा हुन सक्छ? यस कुरालाई हामी बुझ्दैनौं। यसकारण त्यस लाभले वञ्चित रहन्छौं। हामीलाई भगवान्को दया देखेर-मानेर क्षण-क्षणमा मुग्ध हुनुपर्छ। छोरो दिसा-पिसाबमा कति नै भरिएको होस्, ऊ माताका लागि रून्छ भने माता त्यसको शुद्धि-अशुद्धिलाई भुल्छिन् र हृदयमा लगाउँछिन्। त्यसपछि आफ्नो र छोराका सबै कपड़ा सफा गर्छिन् स्नान गर्छिन्। यसरी जो भगवान्का लागि व्याकुल हुन्छ त्यसका लागि उनी व्याकुल हुन्छन् यसमा त भन्नु

नै के छ, किन्तु भगवान्‌को तत्त्व-रहस्यलाई जो बुझ्छ त्यसका लागि भगवान् भन्छन् कि उसलाई परम शान्ति प्राप्त हुन्छ। हामी कति नै कुपात्र किन नहोऔं, किन्तु भगवान्‌का दयाको रहस्यलाई बुझ्नाले प्रेमाश्रुका धारा बग्न लाग्छन् कि हेर भगवान्‌को हामीमाथि कति ठूलो दया छ। जसले आफ्नो सर्वस्व अर्पण गरिदिन्छ भगवान् पनि उसलाई सर्वस्व अर्पण गरिदिन्छन्। यो त न्याय हो, कानुन हो किन्तु यसमा कुन कुरा छ जुन आफ्नो केही पनि भगवान्‌लाई समर्पण गर्दैन, केही पनि दिन्न र भजन पनि गर्दैन तर यस तत्त्व-रहस्यलाई बुझ्छ कि भगवान्‌कोमा यस्ता पुरुषहरूका लागि पनि ठाउँ त छँदै छ तथा जो महान् नीच छन् पापी छन् उद्दण्ड छन् उनका लागि पनि भगवान्‌कोमा सम्भावना छ र भगवान्‌कोमा पनि सम्भावना नहोस् त फेरि कहाँ जाने? यो कुरा मनमा बुझ्नुहोस्। यो दयाको कुरा त्यस्ताको बुद्धिमा आयो भने भगवान्‌को दयाको सागर तीमाथि बर्सिरहन्छ। दयाका कुरा हेरीहेरी हामी मुग्ध हुनुपर्छ। हेर त हामीहरूप्रति भगवान्‌को कति भारी दया छ? भगवान् कस्ता दयालु हुन् कस्ता प्रेमी हुन्। यो कुराको भाव राख्नेवाला पुरुषले पनि भगवान्‌बाट अलौकिक लाभ उठाउँछ। हामीहरू जब आफूतिर ख्याल गरेर हेर्छौं त पापहरूको कुनै सीमा छैन। हामीहरूले कति जन्महरूमा कस्ता पाप गरेका छौं यसको कुनै सीमा छैन, तब पनि हाम्रा लागि भगवान्‌कोमा त्यो पद तैयार छ। सुरदासजीले भन्नुभएको छ– **'मो सम को कुटिल खल कामी?'** म समान संसारमा कुटिल अर्थात् नीच र कामी यस दुनियाँमा को होला? यस प्रकारको भावलाई मानेर तिनले भगवान् प्राप्त गरे। उनी आफ्नो दृष्टिबाट देख्दथे। अनन्त जन्ममा गरिएका पापहरूलाई, यस जन्मका

पापहरूलाई बुझ्दथे कि हेर हाम्रो कस्तो हीन दशा छ। यस हीन दशालाई मानेको प्रभावले नै उनको उद्धार भयो। जुन मान्छे मुखले भन्दैन र स्वयंलाई सबैभन्दा हीन मान्दछ, परमात्माको ज्ञान हुँदा सबै पापहरूबाट मुक्त भएर ऊ भगवान्‌लाई प्राप्त हुन्छ। भगवान् अर्जुनसित भन्नुहुन्छ–

**अपि चेदसि पापेभ्यः सर्वेभ्यः पापकृत्तमः।**
**सर्वं ज्ञानप्लवेनैव वृजिनं सन्तरिष्यसि॥**

(गीता ४। ३६)

यदि तिमी अन्य सबै पापीहरूभन्दा पनि अधिक पाप गर्नेवाला हौ तैपनि तिमी ज्ञानरूप नौकाद्वारा निःसन्देह सम्पूर्ण पाप–समुद्रदेखि राम्ररी तर्नेछौ।

नारायण! नारायण! नारायण!

॥ श्रीहरिः ॥

# भक्त र भगवान्‌को परस्पर लीला

भक्तहरूका हृदयमा जुन भाव छ, उद्‌गार छ, भगवान्‌मा पनि तिनै भाव र उद्‌गार भरिएका छन्। जब गोपिनीहरू परस्परमा जम्मा हुन्छन् तब प्रेमको चर्चा गर्छन्। तिनको यस्तो इच्छा हुन्छ कि हाम्रो शरीरको चूर्ण बनाएर त्यसमाथि भगवान् सुते पनि हामी मुग्ध हुनेछौं। आराले दाउरा चिर्दा दाउराका जुन कण झर्छन् तिनलाई चूर्ण भन्छन्। चन्दनको चूर्ण पीठो समान मसिनो हुन्छ।

शंका हुन्छ कि जब शरीरको चूर्ण बन्नेछ भने त्यस चूर्णमा प्राण त रहने छैन, मुग्ध को होला? किन्तु गोपिनीको भाव यो हो कि त्यस चूर्णभित्र पनि हाम्रो ज्यान कायम रहनेछ। तपाईंलाई थाहा हुनुपर्छ कि यसमा एउटा ससानो-जस्तै कथा छ। त्यो लोकोक्ति हो वा कहीं कुनै ग्रन्थको पनि हो मलाई थाहा छैन।

एक समयको कुरा हो। नारदजी भगवान्‌को परमधाममा गए। यहाँ परमधामको अर्थ द्वारकापुरी हो। भगवान् श्रीकृष्ण त्यस समय द्वारकापुरीमा वास गर्थे। नारदजीले गएर सोधे- प्रभो! तपाईंलाई सबैभन्दा बढेर प्रिय को छ? तपाईंको सबैभन्दा बढेर प्रेमी को छ? सबैभन्दा बढेर कसको भक्ति छ? तिनले भने- गोपिनीहरूको। नारदजीलाई यो कुरा पचेन। तदनन्तर एक दिन नारदजी पुनः आए। भगवान् सुत्नुभएको थियो।

नारदजीले भने- तपाईं आज यसरी पलंगमाथि किन सुतिरहनुभएको छ? भगवान् श्रीकृष्ण बोल्नुभयो- मेरो औंलामा

चोट लागेको छ। नारदजीले भने- महाराज! यस घाउको पूर्ति चाँडै कसरी हुनेछ? भगवान् बोल्नुभयो- यदि प्रेमी भक्तका रगतमा पट्टी भिजाएर घाउमा बेह्रियोस् त चाँडै आराम हुनेछ। नारदजीले भने- हस् महाराज, म यसका लागि चेष्टा गर्नेछु। कृष्ण बोल्नुभयो- अवश्य गर्नुपर्छ। तदनन्तर संसारमा जति भक्त भनिन्थे, उनीहरूभएमा नारदजी गए र भने- भक्तजी! भगवान्को औंलामा चोट लागेको छ, त्यसको औषधको रूपमा भक्तको रगतको ठूलो आवश्यकता छ, यदि आफ्नो रगत दिनुभयो भने त्यसमा पट्टी भिजाएर भगवान्को औंलामाथि बाँधिनेछ जसबाट उहाँलाई राम्रो हुनेछ। तिनीहरूले भने कि नारदजी! कुरा त ठीक हो, किन्तु हामी यस्ता भक्त हैनौं, जसबाट हाम्रो रगतको पट्टीले भगवान्लाई आराम होस्। हामी त साधारण मान्छे हौं। नारदजी जहाँ-जहाँ गए कसैले के भन्यो, कसैले के भन्यो, किन्तु कतै पनि भक्तको रगतको व्यवस्था भएन। त्यस समय नारदलाई सम्झना आयो कि भगवान् भन्नुहुन्थ्यो कि गोपिनीहरू सबैभन्दा बढेर मेरा भक्त हुन् त व्रजमा जाऊँ। घुम्दै-घुम्दै उनी व्रजमा आए र गोपिनीहरूका सामुन्ने जब यो प्रस्ताव पेश गरे त गोपिनीहरू धेरै खुशी भए, बोले- नारद बाबा! भगवान्को औंलामा चोट लाग्यो, त्यसो भए के भक्तका रगतले आराम हुन सक्छ? यदि हुन सक्छभने नारद! तिमीसित रगत राख्नका लागि के कुनै भाँडो छ? नारद बोल्नुभयो- यो कमण्डलु छ। गोपिनीहरूले नारदसित कमण्डलु लिएर आफ्ना जाँघहरू चिरी-चिरी त्यस कमण्डलुलाई रगतले भरिदिए र भने- नारदजी! हामीमा यस्तो भक्ति त छैन, तर हाम्रो रगत यदि भगवान्को काम आयो भने हाम्रो जीवन

सफल हुनेछ। नारदजी रगत भरिएको कमण्डलु लिएर त्यहाँ आए। भगवान्‌ले सोधे- नारदजी! यति रगत कहाँबाट ल्यायौ? यो तिमीलाई कहाँ भेटियो? कसरी भेटियो? नारद बोल्नुभयो- महाराज! म धेरै भौंतारिएँ, तर कहीं रगत मिलेन। यो रगत गोपिनीहरूबाट पाएँ। मैले जब उनीहरूसित रगतको कुरा गरें त तिनीहरूले धेरै हर्षको साथ हाँस्दै-हाँस्दै आफ्ना जाँघ काटीकाटीकन रगत दिन आरम्भ गरे जसबाट मेरो कमण्डलु भरियो। भगवान्‌ले भने- नारद! अब तिम्रो बुझाइमा आएको होला कि सबैभन्दा बढेर मेरो भक्ति कसमा छ? नारदले भने- महाराज! अब मेरो बुझाइमा आयो। जब तपाईंले भन्नुभएको थियो कि सबैभन्दा बढेर गोपिनीहरू मेरा भक्त हुन् तब त बुझाइमा आएको थिएन। महाराज! जब भक्तको रगत ल्याउनका लागि म यहाँबाट निक्लें त जहाँ गएँ त्यहीं नै सुख्खा जबाफ पाएँ, कसैले दिएन।

श्रीकृष्ण बोल्नुभयो- नारद! तिमी भट्किंदै किन घुम्यौ। के तिमी मेरा भक्त हैनौ? तिमीलाई यो कुरा फुरेन कि म किन भट्कीऊँ? यिनको औंलामा चोट लागेको छ त अहिले नै आफ्नो जाँघ काटेर आफ्नो रगत दिऊँ जस्तै गोपिनीहरूले दिए। तिमी पनि त दिन सक्दथ्यौ। नारद बोल्नुभयो- अँ, महाराज! यो कुरा त्यस समय मेरा हृदयमा नै आएन। कृष्ण बोल्नुभयो- गोपिनीहरूलाई कसरी बुझाइमा आयो? नारद बोल्नुभयो- अँ महाराज! अब मेरो बुझाइमा आयो म त झुटो नै भक्तिको अभिमान राख्दो रहेछु। तपाईंका भक्त त गोपिनीहरू नै हुन्।

एक समयको कुरा हो- भगवान् श्रीकृष्णको आफ्नो रनिवासमा रूक्मिणी आदिका सम्मुख प्रेमको विषय चलिरहेको

थियो कि कुन पटरानीको कस्तो प्रेम छ? भगवान् भन्नुहुन्छ– अँ, सबैसित नै प्रेम छ। तर रानीहरू सोध्छन् कि सबभन्दा धेरै प्रेम कोसित छ? तब श्रीकृष्णले भने– सबैभन्दा धेरै प्रेम त राधाजीसित छ। रानीहरूले भने– महाराज, कहिल्यै हामीलाई पनि उनको दर्शन गराउनुहोस्। कृष्ण भगवान् बोल्नुभयो– ठीकै छ, कहिल्यै हुन सक्छ! दुई–चार दिनपछि भनेजस्तो मौका मिल्यो। दरबारमा राधाजी सँगिनीहरूसित सँगै आइन्। रानीहरूले उनको ठूलो आतिथ्य गरे, सत्कार गरे, आदर गरे, पिउनका लागि अति उत्तम दूध दिए, राधाजीले पनि तिनीहरूसित खुब प्रेमपूर्ण व्यवहार गरिन्। रूक्मिणी र राधा दुवै जनाको परस्पर बडो प्रेमको व्यवहार रह्यो। फेरि राधाजी आफ्ना घर गइन्। रात्रिमा भगवान् रुक्मिणीको महलमा शयन गर्न आए। जब रूक्मिणीजी पाउसेवा गर्न लागिन् त भगवान्का चरणहरूमा ठेला देखिए। बोलिन्– यी ठेला कसरी भए? कृष्णले भने– यत्तिकै। रूक्मिणी बोलिन्– हैन, तपाईंलाई थाहा छ, भन्नुहोस्। कृष्ण बोल्नुभयो– रुक्मिणीजी त्यत्तिकै भयो, यसका बारेमा तपाईं किन सोध्नुहुन्छ? रूक्मिणी बोलिन्– हैन, म जान्न चाहन्छु। कृष्ण बोल्नुभयो– रूक्मिणी! आज दिनमा राधाजी आइबक्सेको थियो। उनलाई सत्कार तिमीहरूले गर्‍यौं? बोलिन्– अँ महाराज, जे पनि गर्न सकियो, गर्‍यौं! के उनलाई दूध पियाइएको थियो? रुक्मिणीजीले भनिन्– 'हँ महाराज, दूध पियाइएको थियो।' कृष्ण बोल्नुभयो– बस त्यही कारण हो। रूक्मिणी बोलिन्– महाराज! दूध पिलाउनु कसरी कारण भयो? कृष्ण बोल्नुभयो– अँ, दूध केही अधिक तातो थियो। रुक्मिणीले भनिन्– महाराज! दूध अधिक तातो

थियो त त्यसबाट तपाईंका चरणहरूमा ठेला कसरी भए? कृष्ण बोल्नुभयो- मेरा चरण राधाजीका हृदयमा नित्य वास गर्छन् र उनका चरण मेरा हृदयमा वास गर्छन् यसकारण त्यो तातो दूध मेरा चरणहरूमा पर्‍यो जसबाट ठेला भए। रुक्मिणीले धेरै नै पश्चात्ताप गरिन् भनिन्- महाराज! हामी यस्तो जान्दैनथ्यौं। यो हाम्रो गल्ती भयो, ठूलो अपराध भयो। तपाईंमा राधाजीको यति प्रेम छ कि तपाईंका चरणहरूलाई आफ्नो हृदयमा राख्छिन्! कृष्ण बोल्नुभयो- अँ, उनी मेरा चरण आफ्नो हृदयमा प्रत्येक क्षण राख्छिन्।

एक दिनको कुरा हो, सबै भगवान्‌का गुण र प्रभावका कुराहरू गर्न लागे यस्तैमा प्रेमको पनि कुरा गर्न लागे कि भगवान्‌को कोसित कस्तो प्रेम छ? सबैले यो नै निर्णय गरे कि सबभन्दा अधिक प्रेम राधाजीसित छ। यसपछि एक सखीलाई ढोकामाथि गेटमा बसालिदिए र भने कि बाहिरबाट कसैलाई भित्र आउन नदिनू, भगवान् पनि आएमा उनलाई समेत रोकिदिनू। भित्र राधारानी बसेकी छिन् अरू पनि सबै सखीहरू बसेका छन्। आपसमा एक भन्छे कि मलाई के रोग लाग्यो म उसलाई भुलाउन चाहन्छु तर भुलाउन सक्दिनँ। ममाथि कसैले जादू गरिदियो। रात र दिन म पागल-जस्तै घुम्ने गर्छु मेरो यो पागलपन कसरी हट्ला? हेर्छु कि भगवान्‌सित मिल्नु सिवाय यसको अरू कुनै औषधी छैन।

कसैले भने- कृष्ण यति काला किन भए? त्यसका उत्तरमा एक सखी भन्छे कि हामीहरू आफ्ना आँखाहरूमा गाजल हाल्छौं नि र उनी हाम्रा तिनै आँखाहरूमा बस्छन् यसैबाट हाम्रा गाजलले

उनी काला भए। यस प्रकारले उनीहरू विनोद गर्ने गर्थे।

एक सखीले भनिन् कि सखी! म तिनलाई कहिल्यै कतिखेरै भुलाउन सक्दिनँ। उनी रात-दिन मेरा हृदयमा बसिरहन्छन् कहीं यस्तो नहोस् कि म श्रीकृष्णलाई सम्झना गर्दागर्दै कृष्णमय बनूँ, दोश्री सखी बोलिन्- बनिस् भने यसमा के हानि छ? तँ रात-दिन श्रीकृष्णलाई सम्झना गर्छेस् र श्रीकृष्ण रात-दिन तँलाई सम्झना गर्छन् किनकि उनको नियम छ -

**ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्।**

(गीता ४। ११)

'जो जसरी मलाई भज्छन् म पनि तिनलाई त्यसरी नै भज्दछु।' जब तँ कृष्ण बन्नेछस् त उनी गोपी बन्नेछन् तिमीहरूको दाम्पत्य-प्रेम त कायम रहनेछ नै, यसकारण तिमीले चिन्ता गर्नुहुँदैन। यसरी कुनै केही, कुनै केही कुरा गरिरहेका छन्। यत्तिकैमा वहाँ गेटमा भगवान् आए। तिनलाई सखीले यो भनेर रोकिदिइन् कि राधारानीको आज्ञा छ कि भित्र कोही नआओस्। कृष्णले भने- त्यसो हो भने जाओ आज्ञा लिअ, भनिदेऊ कि श्रीकृष्ण आएका छन्। त्यसले भनी- राम्रो, तपाईं यहीं रोकिनुहोस्, म सोधेर आउँछु। भगवान् त्यहाँ रोकिए र ऊ सोध्न गई। सखीहरूले भने- अहिले नै हैन, अहिले त हाम्रा गोप्य कुरा भइरहेछन्। यदि उनी आए भने सबै कुराकानी बन्द हुनेछन्। जाऊ र भनिदेऊ कि अहिले थोरै बेर त्यहीं रोकिनुहोस्। गोपीले आएर विनयपूर्वक भनिन् कि अहिले त राधारानीको आज्ञा छैन। उनी भन्छिन् कि अहिले थोरै बेर यहीं प्रतीक्षा गरौं किनकि वहाँ अहिले परस्परमा जुन गोप्य कुराहरू भइरहेका छन् ती सबै तपाईं

जानाले बन्द हुनेछन्। श्रीकृष्णले भने- बन्द किन हुनेछन्? बोलिन्- तपाईंका गुणहरूका कुराहरू, तपाईंका प्रभावका कुराहरू, तपाईंका विषयका कुराहरू, तपाईंका सम्मुख गर्नुमा लज्जा हुन्छ, मनमा संकोच हुन्छ। भगवान्‌ले भन्नुभयो- जहाँ प्रेम हुन्छ त्यहाँ संकोच गर्नुहुँदैन।

सखीले गएर भनिन् कि उनी भन्छन् कि 'जहाँ प्रेम हुन्छ त्यहाँ संकोच गर्नुहुँदैन। मेरा सम्मुख पनि गरेमा केको आपत्ति छ। प्रेममा संकोच, भय, मान, प्रतिष्ठा- यी केही पनि रहँदैनन् भने तिमीहरूमा कहाँबाट आयो?' तब फेरि ऊ गई र वहाँदेखि यो आदेश आयो कि नाइँ, अहिले थोरै बेर बाहिरै प्रतीक्षा गर्नुहोस्। भगवान्‌ले यो भनेर उत्तर दिए कि म धेरै प्रतीक्षा गर्न सक्दिनँ, फेरि भगवान् भित्र गए, तिनलाई देखेर सबै गोपिनीहरू मुग्ध भए र भगवान्‌ले भन्नुभयो कि म आउनाले तिमीहरूलाई लज्जा हुन्छ? भय हुन्छ? उनीहरू बोले- हैन। भगवान्‌ले भने- मलाई त यस्तै बताइएको थियो त। राधारानी बोलिन्- त्यो त विनोदको कुरा थियो। कृष्णले भने- फेरि तिमीहरू सबै मेरा सामुन्ने कुराहरू किन गर्दैनौ, जुनसुकै कुरा होस् मेरै सामुन्ने गर। उनी बोलिन्- धेरै-जस्ता कुराहरू त तपाईंकै सामुन्ने गर्ने गर्छौं, कुनैकुनै कुराहरू भने यस्ता पनि हुन्छन् कि तपाईंको अनुपस्थितिमा गर्दा हामीलाई धेरै आनन्द आउँछ। त्यस्ता कुन कुरा हुन्? ती कुराहरू के हुन् भने तपाईंमाथि दोष वा आरोप लगाउनु।

कृष्णले भने- तब पनि तिमीहरूलाई भय किन भयो? दोष लगाए पनि मेरै सम्मुख लगाऊ न, म दोष सुनेर अप्रसन्न हुने छैनँ। राधा बोलिन्- महाराज! हामी तपाईंमाथि यो नै दोष

लगाउने गर्छौं कि तपाईंमा दया छैन, तपाईं हामी सबैलाई तडपाइरहनुहुन्छ, चाहे हामी तडपिंदै मरौं, तर पनि तपाईंलाई दया आउन्न। तडपाउनुमा तपाईंलाई के मज्जा आउँछ, यस कुरालाई हामी बुझ्दैनौं। यसकारण हामी कहिले–कता जब तपाईंको निन्दा गर्न बस्छौं त तपाईंलाई बाहिरै रोकिदिन्छौं। कृष्ण बोल्नुभयो– हैन, हैन, मेरो निन्दा नै भए पनि मेरै सम्मुख गर। म अप्रसन्न हुने छैनँ। गुनासोका लागि तिमीले न भय गर्न आवश्यक छ न संकोच। संकोच त गर्नु नै हुन्न। संकोच कुन कुराको? उनी बोलिन्– तपाईंका गुणहरूको कुरा तपाईंका सम्मुख भन्नुमा थोरै संकोच हुन्छ, पिठ्युँपछि भने हुन्न।

कृष्ण बोल्नुभयो– सम्मुख जुन संकोच हुन्छ यो नै प्रेमको कमी हो। संकोच हुनु नै हुन्न। जहाँ प्रेम छ त्यहाँ आदर, सत्कार, भय र संकोच– यी सबै कलंक हुन्। जहाँ आफ्नो विशुद्ध प्रेम छ, अनन्य प्रेम छ, त्यहाँ यी सबै हुनु नै हुन्न। प्रेमको तत्त्व वा रहस्यलाई जुन स्त्री या पुरुष बुझ्छन् त्यसबाट भय, संकोच, आदर र सत्कार बिदा हुन्छन्। जब साधक सबै भावहरूबाट माथि उठ्छ तब त्यहाँ फेरि यी सबै हुन्नन्। सबै भाव के? जस्तै माधुर्यभाव, दासभाव, सख्यभाव, वात्सल्यभाव, शान्तभाव। माधुर्य भावका पनि दुई रूप हुन्छन् एक स्वकीय र दोश्रो परकीय। आफ्नी धर्मपत्नीको माधुर्य प्रेम स्वकीय हो र अरूकी स्त्रीको माधुर्य प्रेम परकीय हो। दुवै प्रेममा फरक के छ? फरक यो छ कि आफ्नी स्त्रीका हृदयमा काम–उद्दीपन होस् या पुरुषका हृदयमा काम–उद्दीपन होस् त त्यसमा दोष छैन किनकि ऊ आफ्नी धर्मपत्नी हो। ऊसित सहवास गर्नमा पनि दोष छैन किन्तु

अरूकी स्त्री हो र उसका हृदयमा मधुर प्रेम छ विशुद्ध प्रेममा यदि कामवासना हुन्छ भने कामवासना कलंक हो। सहवासको त कुरा नै टाढा छ, त्यहाँ कामवासना पनि कलंक हो। जहाँ प्रेम हुन्छ, त्यहाँ कुनै पनि दोष रहँदैन। गोपीहरू सबैमा विशुद्ध प्रेम थियो, परन्तु तिनमा संकोच, भय, आदर, सत्कार आउँछ; जस्तै कुनै सखी जो दासी थिई, ऊ दासभाव राख्दथी, त्यसका मनमा स्वामीको भय हुन्थ्यो, संकोच पनि हुन्थ्यो। यसै प्रकार कसैको सख्यभाव हुन्छ भने त्यसमा केही-केही लज्जा हुन्छ। र जब सबै भावहरूबाट माथि उठिन्छ त यी दोष त्यहाँ आउँदैनन्। साथमा केही भाव रहन्छन् जब सबै भावहरूबाट माथि उठिन्छ भने ती अरू शेष भाव त्यो मूल भाव अन्तर्गत हुँदै ती भावहरूका कारण जे केही कमी रहन्छन् ती पछि गएर मेटिन्छन्। दासभाव धेरै उँचो छ। यसै प्रकार सख्यभाव पनि उँचो छ। हनुमानजीको श्रीरामचन्द्रजीमा दास्यभाव थियो, परन्तु अर्जुनको श्रीकृष्णजीमा दास्यभाव पनि थियो तथा सख्यभाव पनि। भगवान्‌ले आफैं भन्नुभएको छ कि '**भक्तोऽसि मे सखा चेति।**' अर्जुनले पनि श्रीकृष्णसित भन्नुभएको छ कि मैले तपाईंलाई आफ्नो सखा मानेर तपाईंसित आसनमाथि, शय्यामाथि र तपाईंसित अन्यत्र पनि जे-जस्तो व्यवहार गरेको छु, तिरस्कार गरेको छु ती सबैका लागि म क्षमा-प्रार्थना गर्छु। यो पनि अर्जुनका लागि उच्च भाव हैन। उद्धवको दास्यभाव पनि थियो र सख्यभाव पनि। जति गोप-गोठालाहरू थिए, ती सबैको सख्यभाव थियो र गोपिनीहरू उनका सखीहरू थिए। यिनको सख्यभाव पनि थियो र धेरैमा माधुर्य प्रेम पनि थियो र श्रीराधाजी सबै भावहरूबाट उठेकी थिइन् सबै भाव उनमा

समाविष्ट थिए, उनी आफैं सबै भावहरूबाट अतीत थिइन्। यसरी नै हामीहरूले पनि भगवान्सित गोपिनीका भावअनुसार प्रेम गर्नुपर्छ। यो बुझ्नुहुन्न कि सखीहरूमा जुन प्रेम छ त्यो स्त्रीहरूमा मात्रै हुन सक्छ पुरुषहरूमा हैन, यस्तो हैन किनकि त्यो त भाव हो, भाव त सबैमा नै हुन सक्छ। स्त्रीको पनि हुन सक्छ, पुरुषको पनि हुन सक्छ। पुरुष सखा भएर रहन्छ भने स्त्री सखी भएर रहन्छे। पुरुष दास भएर रहन्छ भने स्त्री दासी भएर रहन्छे। पुरुष पिता भएर रहन्छ भने स्त्री माता भएर रहन्छे। माताको पनि वात्सल्य भाव हो र पिताको पनि वात्सल्य भाव हो।

शान्तभाव हो साधनाका समयमा द्वैत भाव र त्यसको फल निर्गुण-निराकार ब्रह्ममा पर्यवसान यानी समाप्ति। साधन-कालमा त द्वैत र फलमा सच्चिदानन्द परमात्मा (अद्वैत) को प्राप्ति। निर्गुण-निराकार ब्रह्ममा जुन भाव हो त्यो शान्त भाव हो। सगुणको भक्ति गर्दागर्दै पनि जुन इच्छा त्यस भावको छ त्यो पनि शान्त-भाव हो, पुरुष पनि हर एक भावले भगवान्सित प्रेम राख्न सक्छन् स्त्रीहरू पनि राख्न सक्छन्। हामीहरूको भगवान्मा पवित्र भाव हुनुपर्छ र अनन्य प्रेम, विशुद्ध प्रेम हुनुपर्छ। यसको फल साक्षात् भगवान्को प्राप्ति हो। तर भगवान्को प्राप्तिरूप फललाई पनि चाहनुहुँदैन अनि त भगवान् त नकारेर पनि त्यहाँ पुग्छन्। भेटिनुको इच्छा पनि नराखेमा भगवान् अझै चाँडै आउँछन् यो अझै उच्च कोटिको भाव हो तर यसका भित्र पनि लुकेको कामना छ कि भगवान्सित शीघ्र मिल्नुको उद्देश्यले भेटिने इच्छा राख्नुहुँदैन भन्ने भाव। यसबाट पनि उच्च भाव यो हो कि जस्तो भगवान् मलाई तडपाउँछन् त्यस्तै-त्यत्तिकै म पनि भगवान्लाई

तडपाऊँ। तिनलाई मेरो खाँचो छैन भने मलाई पनि उनको खाँचो छैन। खाँचो हुँदा पनि भन्नु छ कि मलाई खाँचो छैन। यो विनोद हो। भगवान्लाई तडपाउनु अझै महत्त्वको चीज हो। आफ्नी धर्मपत्नीसित पतिको प्रेम हुन्छ र धर्मपत्नी यस कुरालाई बुझ्छिन् कि म बिना मेरो पति रहन सक्दैन त पतिको इच्छा भएर पनि आफ्ना पतिलाई तडपाइरहन्छिन्। यदि यस विद्यालाई हामीहरूले बुझ्यौं भने फेरि भगवान्लाई बोलाउन पर्ने छैन, उनी आफैं आएर चापलुसी गर्नेछन्। प्रेमको तत्त्व जति भगवान् जान्दछन् त्यति हामीहरू जान्दैनौं। साधक प्रेमको तत्त्व त्यति जान्दैन, जति साध्य जान्दछ। साधक त प्रेमी हो र साध्य प्रेमास्पद हो। प्रेमास्पद भगवान् प्रेमको तत्त्व जति जान्दछन् त्यति तिनलाई भक्त जान्न सक्दैन। त्यस रहस्यलाई जो बुझ्छ उसले भगवान्बाट आफ्नो खुशामद गराउँछ र भगवान् खुशामद गर्छन्। यसमा भगवान्लाई पनि मज्जा आउँछ र खुशामद गराउनेवालालाई पनि मज्जा आउँछ, प्रेमको मार्ग यस्तै नै छ। प्रेमका मार्गमा जहाँ विशुद्ध प्रेम हुन्छ त्यहाँ कोही सानो-ठूलो हुन्न, यसैकारणले त्यहाँ एक-अर्कासित लज्जा हुन्न, यसैकारणले त्यहाँ आदर-सत्कार पनि छैन। जहाँ सानो-ठूलो हुन्छ, आदर-सत्कार हुन्छ, त्यहाँ त आदर-सत्कार प्रेममा कलंक हो। प्रेमीको उद्देश्य यो रहन्छ कि हामी भगवान्लाई आह्लादित गरिरहौं, भगवान्लाई हामी आफ्ना चरित्रले मुग्ध गरिरहौं र भगवान्को उद्देश्य यो रहन्छ कि आफ्ना भक्तलाई आह्लादित गरिरहौं।

भगवान्का सबै क्रिया भक्तका लागि हुन्छन् र भक्तका सबै क्रिया भगवान्का लागि हुन्छन् आफ्ना लागि हुन्नन्। भगवान्को

दृष्टिमा भगवान्‌को भक्त प्रेमास्पद हो र भगवान् प्रेमी तथा भक्तको दृष्टिमा भक्त प्रेमी र भगवान् प्रेमास्पद हुन्। दुवै जनासित दुवै जनाको प्रेमको नाता हुन्छ। देख्दा प्रेमी, प्रेम र प्रेमास्पद तीन छन् किन्तु वस्तुले त एक नै हुन्। जस्तै ज्ञानमार्गमा एक ब्रह्म नै छ दोश्रो वस्तु छैन, यसरी नै प्रेमका मार्गमा पनि एक प्रेम नै हुन्छ, दोश्रो वस्तु हुन्न। यहाँ प्रेम, प्रेमास्पद र प्रेमी- यी तीनै चेतन हुन्। साधनकालमा जुन प्रेम हुन्छ त्यो जड हुन्छ। यो प्रेम चेतन हो, परमात्मा प्राप्तिपछि प्रेमको जुन अवस्था हुन्छ त्यो तीनवटैको एकै अवस्था हो। तीनवटा नै चेतन हुन् र साधनकालको प्रेम असली प्रेमको प्रतिबिम्ब हो। जस्तै असली चन्द्रमा बिम्ब हो र त्यसको तालमा जुन छायाँ पर्छ त्यो प्रतिबिम्ब हो। संसारमा स्त्री-पुरुषको जुन परस्पर प्रेम छ त्यो त प्रेम नै हैन, काम हो, मोह हो, किन्तु भगवद्विषयक प्रेम त्यस असली प्रेमको प्रतिबिम्बमात्र हो। ज्ञानी महात्माहरूका हृदयमा निर्गुण-निराकार ब्रह्मका स्वरूपको प्रतिबिम्ब नै आउँछ। ईश्वर त अँटाउन सक्दैन र अन्तःकरण बुद्धि पनि अल्प छ। अल्प बुद्धिमा त्यो निर्गुण-निराकार ब्रह्म आउनै कसरी सक्छ? यसै प्रकार साधनाकालमा साधकका हृदयमा अनन्त अनन्य र असीम प्रेम अँटाउन नै कसरी सक्छ? अझ भगवान्‌का हृदयमा जो बस्छ, भगवान् त्यसका हृदयमा बस्छन्।

**तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते।**
**प्रियो हि ज्ञानिनोऽत्यर्थमहं स च मम प्रियः॥**

(गीता ७। १७)

तिनमा नित्य ममा एकीभावले स्थित अनन्य प्रेमभक्तिवाला ज्ञानी भक्त अति उत्तम हो, किनकि मलाई तत्त्वले जान्नेवाला

ज्ञानीलाई म अत्यन्त प्रिय छु र त्यो ज्ञानी मलाई अत्यन्त प्रिय छ।

**समोऽहं सर्वभूतेषु न मे द्वेष्योऽस्ति न प्रियः।**
**ये भजन्ति तु मां भक्त्या मयि ते तेषु चाप्यहम्॥**

(गीता ९। २९)

म सबै भूतहरूमा समभावले स्थित छु किन्तु जसले मलाई प्रेमले भज्दछ त्यसका हृदयमा म र मेरा हृदयमा त्यो नित्य छ।

जुन चार प्रकारका भक्त गीताका सातौं अध्यायको १६औं श्लोकमा बताइएका छन् आर्त, अर्थार्थी, जिज्ञासु र ज्ञानी- ती सबैमा श्रेष्ठ ज्ञानी निष्कामी भक्त हो, जुन अनन्य भक्तिले युक्त छ। भगवान् भन्नुहुन्छ- 'त्यस ज्ञानीलाई म अतिशय प्यारो छु यसकारण ज्ञानी मलाई अतिशय प्यारो छ।' भगवान् आफ्ना प्रेमीहरूका हृदयमा नित्य वास गर्छन् र प्रेमी भगवान्‌का हृदयमा वास गर्छन्। भगवान्‌का सबै चेष्टा भक्तका लागि हुन् र भक्तका सबै चेष्टा भगवान्‌लाई खुशी गर्नका लागि हुन्। यसकारण यी दुवै जनाको लीला नै हो, एक भगवान्‌को लीला हो र दोश्रो भक्तको लीला हो।

नारायण! नारायण! नारायण!

॥ श्रीहरिः ॥

# अनन्य विशुद्ध प्रेम

भगवान्‌को प्रेमको विषय धेरै नै रहस्यमय छ, यसमा केही भन्नु बडो कठिन छ। वास्तवमा यो वाणीको विषय हैन। प्रेम हृदयको चीज हो। जसको हृदयमा प्रेमको जागृति छ उही यस कुरालाई बुझ्छ कि प्रेम के कुरा हो। तैपनि बुझाउनका लागि लौकिक दृष्टान्त दिएर बुझाइन्छ, वास्तवमा बुझाउन सकिँदैन। तुलसीदासज्यूले भन्नुभएको छ कि श्रीराम र भरतजीको मिलनको समयको प्रेम कविको वाणीको विषय नै हैन। कवि त्यसलाई वाणीद्वारा भन्न सक्दैन। जस्तै भेडाको नसाको डोरीले सुराग गाउन सक्दैन, यसै प्रकार कविको वाणीले भगवान् राम र भरतको प्रेमको वर्णन गर्न सक्दैन। जस्तै मान्छेहरूलाई स्वादको आनन्द आउँछ तर त्यस आनन्दको वर्णन स्वाद लिनेवाला वाणीद्वारा गर्न सक्दैनन् यसै प्रकारले प्रेमको वर्णन हुन सक्दैन। नारदजी भन्छन् कि प्रेम नित्य नयाँ बढिरहन्छ, पछिल्तिर जाँदैन। जो प्रेमी हो- भगवत्प्रेमी हो, ऊ पनि प्रेमको विषयको वर्णन वाणीद्वारा गर्न सक्दैन। फेरि म-जस्तो साधारण व्यक्ति त्यस प्रेमलाई कसरी भनूँ। प्रेमको चर्चा गर्नु राम्रो हो त्यसकारण केही भनिन्छ। जहाँ आफ्नो पन हुन्छ, ममता हुन्छ, त्यहाँ प्रेम हुन्छ। जसमा आत्मीयता हुन्छ कि 'यो मेरो' हो त्यहाँ प्रेम हुन्छ। प्रेमका लागि भगवान् समान कोही छैन कि जोसित प्रेम गरियोस्। भगवान् परम हितैषी हुन्। उनी समान दुनियाँमा कोही पनि

हितैषी छैन। श्रीरामचरितमानसमा बताइएको छ-

**उमा राम सम हित जग माहीं। गुरु पितु मातु बंधु प्रभु नाहीं॥**

यो शिवजीको वचन हो- शिवजी पार्वतीजीसित भन्छन् कि उमा! रामका समान हितैषी- हित गर्नेवाला दुनियाँमा कोही व्यक्ति छैन। सबैको हित गर्नेवाला जो गुरु हो, आचार्य हो, ऊ पनि रामका समान हित गर्नेवाला हुन्न। माता-पिता, गुरु, बन्धु कोही पनि यस्ता छैनन् जो स्वार्थरहित होऊन्। परमात्मा प्राप्ति गरेको पुरुषलाई छोडेर सबै आफ्ना स्वार्थबिना कुरा गर्दैनन्। कुरै-कुरामा आफ्नो स्वार्थतिर नै ध्यान राख्छन्। जस्तै गिद्ध पक्षीको दृष्टि मासुतिर रहन्छ, यसै प्रकार स्वार्थी मान्छेहरूको दृष्टि आफ्नो स्वार्थ-सिद्धितिर नै रहन्छ। कुनै पनि काम गर्छन् त पहिल्यै यो कुरा सम्झनामा आउँछ कि मलाई यसमा के मिल्नेछ। मलाई यसमा के लाभ हुनेछ। दुनियाँको लाभतिर कोही हेर्दैन। परमात्माको प्राप्तिवाला पुरुषलाई छोडेर अर्को चाहे कोही कुनै पनि किन नहोस् सबैको यही नै रीति हो-

**सुर नर मुनि सब कै यह रीती। स्वारथ लागि करहिं सब प्रीती॥**

देवता, मनुष्य र ऋषि-मुनि सबैको यो नै रीति हो कि आफ्नो प्रयोजनलाई देखेर मात्रै प्रीति गर्छन्। ती मुनिहरूमा कोही एक, ती साधकहरूमा कोही एक भगवत्प्राप्त पुरुष होला। ज्ञानी महात्मा होला उनको कुरा अलग्गै हो, उनका लागि तुलसीदासज्यूले यो कुरा भने कि उनी त भगवान्‌का अनुरूप नै हुन्छन्-

**स्वारथ मीत सकल जग माहीं। सपनेहुँ प्रभु परमारथ नाहीं॥**
**हेतु रहित जग जुग उपकारी। तुम्ह तुम्हार सेवक असुरारी॥**

श्रीरामचरितमानसको उत्तरकाण्डमा प्रजा भगवान्‌सित भनिरहेछन्

कि हे असुरारि! हे भगवन्! हे नाथ! सबै जना आफ्ना स्वार्थका मित्र हुन्। आफ्ना स्वार्थलाई लिएर मित्रता गर्छन्। स्वार्थलाई त्यागेर मित्रता गर्नेवाला दुईलाई छोडेर तेस्रो अरू कोही छैन। हेतुरहित हित गर्ने या त तपाईं हुनुहुन्छ या तपाईंका भक्त हुन्छन्। बाँकी त सबै स्वार्थका मीत हुन्।

भगवान्का समान भगवान् नै हुन्। यो कुरा बुझेर कि भगवान् नै हाम्रा एकमात्र परम मित्र हुन् भगवान् नै एकमात्र हाम्रा हुन् र उनी समान कोही पनि हाम्रो छैन, यस्तो परिस्थितिमा हामीले भगवान्सित नै प्रेम गर्नुपर्छ। भगवान् हाम्रा आत्मीय जन हुन् किनकि भगवान् सबैका आत्मा हुन्। '**अहमात्मा गुडाकेश सर्वभूताशयस्थितः**' भगवान् श्रीकृष्ण अर्जुनसित भन्छन् कि हे गुडाकेश! सबै भूतहरूका हृदयमा स्थित म नै सबैको आत्मा हूँ। जस्तै शरीरका मालिक माता-पिता हुन् किनकि शरीर ती माता-पिताको अंश हो, उसै प्रकार जीव परमात्माको अंश हो। परमात्माको अंश हुनाले एक प्रकारसित त्यसको एक अंग नै भयो। यस्ता परिस्थितिमा भगवान्लाई छोडेर अरूसित प्रेम गर्नु मूर्खता हो। तुलसीदासज्यू भन्छन्-

**ईस्वर अंस जीव अबिनासी। चेतन अमल सहज सुख रासी॥**

जीव ईश्वरको अंश हो, ईश्वरको कुनै टुक्रा हुन्न, किन्तु टुक्राहरू-जो एक अंश- जस्तै हो। जीवात्मा ईश्वरको नै एक अंश हो र यो अविनाशी हो, यसको विनाश हुन्न। शरीरको नै विनाश हुन्छ। शरीर बदल्नुलाई नै हामी भन्छौं कि मनुष्यको मृत्यु भयो। आत्मा त नित्य छ, त्यसको विनाश नै हुन्न, किनकि त्यो ईश्वरको अंश हो। जस्तै ईश्वर अविनाशी छ त्यस्तै जीव पनि

अविनाशी छ। यो चेतन हो, जड हैन। शरीर जड हो, आत्मा चेतन हो, चेतन र जडको यो कुरा हो कि जुन चीज जान्नुमा आओस् त्यो जड हो, जुन जान्नेवाला हो त्यो चेतन हो। जीवात्मा जान्नेवाला हो, जान्नुमा आउनेवाला पदार्थ हैन यसकारण चेतन हो र वास्तवमा मल-रहित छ, मायाले रहित छ, दोषहरूबाट रहित छ, जीवात्मा शुद्ध-स्वरूप छ, किन्तु अज्ञानका कारण मायासित आफ्नो सम्बन्ध जोडेर दोषी बनेको छ। वास्तवमा मलरहित शुद्ध छ र स्वाभाविक नै आनन्दको राशि हो, सुखको राशि हो। एक त निमित्तलाई लिएर आनन्द हुन्छ, परन्तु त्यो आनन्द त मायिक नै हो, चाहे सात्त्विक आनन्द नै किन नहोस्, त्यो स्वाभाविक हुन्न। किन्तु यहाँ भनिएको छ कि ऊ ***'सहज सुख रासी'*** हो। सहज शब्द यो बताउँछ कि ऊ शुद्ध छ, विकारको रूपमा छैन। सात्त्विक, राजस, तामस सुख विकाररूप हुन् किनकि यी मायाका नै गुण हुन्। सत्-रज-तम यी गुणहरूबाट अतीत छ चेतना। जीवको स्वरूप चेतन हो र आनन्दमय हो। भगवान्‌को जस्तै स्वरूप हो त्यसका अंशको पनि त त्यस्तो नै स्वरूप होला नि? यसकारण भगवान्‌को जस्तै स्वरूप हो त्यो सत्-चित्-आनन्दघन हो, निर्मल हो, शुद्ध हो। यसै प्रकार जीवात्माको स्वरूप पनि त्यस्तै नै हो, यसकारण भनिन्छ कि त्यसको अंश हो र त्यस अंशीसितै प्रेम गर्नु नै यसको कर्तव्य हो। यो यसको मूर्खता हो कि यस्ता ईश्वरलाई भुलाएर मिथ्या सांसारिक पदार्थहरूसितै प्रेम गर्छ। यदि यो कुरा बुझाइमा आयो भने हामीहरू जानीजानी मूर्ख किन बनौंला। कसैले कसैलाई मूर्ख भन्छ भने उसलाई नराम्रो लाग्ला तर काम दिनभरि उस्तै गर्छ, जसबाट उसलाई फेरि पनि मूर्ख भनियोस्। किनकि

हामीहरूका सबै क्रिया प्रायः अज्ञतापूर्ण हुन्छन् विवेकपूर्ण हुन्नन् यसकारण अज्ञता भन या मूर्खता भन, एकै कुरा हो। यदि यो अज्ञान हैन भने हाम्रा सबै क्रिया विवेकपूर्ण हुनुपर्थ्यो। ईश्वर र महापुरुषहरूका सबै क्रिया विवेकपूर्ण हुन्छन् हामीहरूले पनि यो विचार गर्नुपर्छ कि ईश्वरलाई छोडेर कसैसित पनि हामीले स्वार्थ लिएर प्रेम गर्छौं भने त्यो प्रेम तल्लो दर्जाको हो, घृणित हो। त्यसको आदर न त यहाँ छ र न परलोकमा नै छ। यस कुरालाई मानेर संसारका विषय-भोगहरूबाट प्रेम हटाएर केवल एक भगवान्सित नै प्रेम गर्नुपर्छ।

एक त स्वाभाविक प्रेम हुन्छ, त्यसलाई सहज प्रेम भनिन्छ। त्यो उत्तम दर्जाको हो र यो नै हुनुपर्छ। यसमा अर्कोतिर हामी ख्याल गरौं- स्वार्थतिर ख्याल गरौं, गुणहरूतिर ख्याल गरौं, सुन्दरतातिर ख्याल गरौं, प्रभावतिर ख्याल गरौं त भगवान् समान संसारमा न कोही गुणी छ, न कोही प्रभावशाली छ, न कोही सुन्दर छ। सबै दुनियाँका जे-जति सौन्दर्य छन् तिनलाई एकमुष्ट गरे पनि भगवान् जो एक सौन्दर्यका केन्द्र हुन् उनको एक कला पनि हुन सक्दैन त्यो सौन्दर्य। दुनियाँको सारा सौन्दर्य उनको एक अंशको समान पनि हुन सक्दैन। यस्ता श्यामसुन्दर भगवान् विष्णुलाई या रामलाई या श्रीकृष्णलाई छोडेर दुनियाँसित प्रेम गर्नु, मोह गर्नु त मूर्खता नै हो। गीतामा ज्ञानप्राप्तिका साधनहरूमा भगवान्ले भन्नुभएको छ-

**मयि चानन्ययोगेन भक्तिरव्यभिचारिणी।**
**विविक्तदेशसेवित्वमरतिर्जनसंसदि ॥**

(१३। १०)

हे अर्जुन! म परमात्मामा अनन्ययोगद्वारा अव्यभिचारिणी

भक्ति ज्ञानको ठूलो उत्तम साधन हो। अव्यभिचारिणी भक्ति अर्थात् जसमा व्यभिचार दोष छैन। भक्तिमा व्यभिचार दोष के? भक्ति माने प्रेम, विशुद्ध प्रेम; अव्यभिचारिणी भक्ति माने विशुद्ध भक्ति, जसमा कुनै दोष नहओस्; दोष के? कामनाको दोष– कुनै प्रकारको कामना छैन; कामना नै मैलोपन हो। निष्काम भक्ति र अनन्य भक्ति के? भगवान्‌लाई छोडेर र कसैमा पनि प्रेम नहोस्। कसैमा पनि भक्ति नहोस् अरू कसैका लागि पनि नहोस्। म परमात्मामा यस्तो अनन्य र विशुद्ध भक्ति होस् तथा एकान्त देशको सेवन होस्, जनसमूहमा प्रीतिको अभाव होस्, तात्पर्य यो कि म परमात्मालाई छोडेर कसैमा प्रीति नहोस्। यसै कुरालाई खुलासा गरेर यो कुरा बुझाए। यस्तो भक्ति भगवान्‌मा हुनुपर्छ र थोरै गहिरो विचार गर्नुपर्छ। यो कुरा यदि बुझाइमा आयो भने भगवान्‌मा प्रेम नै हैन विशुद्ध प्रेम, परम प्रेम, अनन्य प्रेम, पूर्ण प्रेम जुन शब्दहरूबाट तपाईं बुझ्नुहुनेछ त्यस्तो शीघ्र नै हुन सक्छ। एक क्षण पनि भगवान्‌लाई छोडेर हामीले अर्को वस्तुमा प्रेम गर्दा, त्यसमा हाम्रो जुन नोक्सान हुन्छ, हानि हुन्छ– त्यसको वर्णन गर्न सकिंदैन।

भगवान्‌मा हाम्रो अनन्य प्रेम हुनेछ, त्यसको कसी यो हो कि हरसमय हामीलाई भगवान्‌को स्मृति भइरहनेछ। हामीलाई भगवान्‌को स्मृति गर्नुपर्ने छैन। त्यो सतत् स्वाभाविक आफैं नै भइरहनेछ। यसबाट यो सिद्ध हुन्छ कि संसारका पदार्थहरूमा हाम्रो जुन केही प्रीति छ, त्यही कारणले यो मन भगवान्‌लाई छोडेर संसारतिर जान्छ। मनलाई कसैले सोधोस् कि किन संसारतिर जान्छस्? संसारमा कुनै पनि पदार्थको जे पनि प्रभाव प्रतीत हुन्छ त्यो सबै

भगवान्‌बाट नै हो, जे केही विभूति प्रतीत हुन्छ त्यो सबै भगवान्‌को नै हो। बल होस् तेज होस् या ज्ञान होस् जे पनि केही संसारमा राम्रा चीज छन् ती भगवान्‌का एक अंशमात्र हुन्। भगवान् गीतामा भन्नुहुन्छ–

**यद्यद्विभूतिमत्सत्त्वं श्रीमदूर्जितमेव वा।**
**तत्तदेवावगच्छ त्वं मम तेजोंऽशसम्भवत्॥**

(१०। ४१)

तात्पर्य यो हो कि जे-जे विभूतिवाला चीज छन् तथा जे-जति दसौं अध्यायमा भगवान्‌ले केही संक्षेप र केही विस्तारसित विभूतिहरू भन्नुभएको छ ती सबै-सबै विभूतिहरू भगवान् भन्नुहुन्छ कि मेरो जुन प्रभाव छ, तेज छ त्यसको एक अंशमात्रका प्रादुर्भाव हुन्। जुन-जुन विभूतिवाला चीज छन् केवल विभूतिवाला हैन, जुन बलवाला चीज छन् केवल बलवाला हैनन् जे कान्तिवाला चीज छन् शोभावाला चीज छन् ती सबै मेरा तेज-मेरा प्रभावका एक अंश हुन्। त्यस एक अंशको नै सबै प्रादुर्भाव हो। यसकारण संसारमा यत्किञ्चित् जे पनि केही प्रभाव देखिन्छ त्यो सबै भगवान्‌बाट नै हो। भगवान्‌को प्रभाव अन्तर्गत हुन्। भगवान् समान कोही प्रभावशाली छैनन्। वास्तवमा भगवान् गुणातीत भएर पनि सबै गुण भगवान्‌मा नै हुनुका नाताले यो गुणहरूको समूहरूप सबै संसार भगवान्‌को एक अंशमा छ–

**अथवा बहुनैतेन किं ज्ञातेन तवार्जुन।**
**विष्टभ्याहमिदं कृत्स्नमेकांशेन स्थितो जगत्॥**

(गीता १०। ४२)

भगवान् भन्नुहुन्छ– हे अर्जुन! तिमीलाई धेरै जान्नुसित के

प्रयोजन छ, यस सम्पूर्ण जगत्लाई म आफ्नो एक अंशले धारण गरेर स्थित छु। यानी सारा ब्रह्माण्ड मेरो एक अंशमा छ। मबाट बाहिर के रह्यो। कुनै पनि चीज बाँकी छैन। भगवान्भन्दा बढेर कोही प्रभावशाली पनि छैन। भगवान्भन्दा बढेर कोही गुणी पनि छैन, भगवान्भन्दा बढेर कोही शोभायुक्त सुन्दर पनि छैन फेरि हामी संसारतिर केका लागि हेरिरहेछौं, संसारको चमक-दमकलाई देखेर त्यसमाथि दौ? किन लगाइरहेका छौं। यो सबै हाम्रो मूर्खता हो, अबुझपना हो। यो कुरा बुझाइमा आयो भने भगवान्मा त्यसको अनन्य र विशुद्ध प्रेम हुनेछ। जब अनन्य विशुद्ध प्रेम हुनेछ त फेरि भगवान्सिवाय ऊ दोश्रो चीजको चिन्तन नै किन गर्ला? भगवान्को अनन्य चिन्तनले भगवान्को प्राप्ति आफैं सुगमताले हुन्छ, सहज नै हुन्छ, विलम्बको काम हुन्न।

**अनन्यचेताः सततं यो मां स्मरति नित्यशः।**
**तस्याहं सुलभः पार्थ नित्ययुक्तस्य योगिनः॥**

(गीता ८। १४)

अनन्यचित्त भएको पुरुष जो नित्य-निरन्तर मेरो स्वरूपको स्मरण गर्छ, यानी मेरो चिन्तन गर्छ त्यस नित्ययुक्त योगी भक्तका लागि म सुलभ छु। कुनै परिश्रमको काम हैन। कति उच्च दर्जाको कुरा हो। भगवान् भन्नुहुन्छ कि जसले मलाई आफ्नो हृदयमा बसाल्छ उसलाई म आफ्नो हृदयमा बसाल्छु।

भगवान्ले एकपटक यो कुरा रुक्मिणीजीप्रति भन्नुभएको थियो- राधिकाजी मेरा हृदयमा बस्छिन् र म राधिकाजीको हृदयमा बस्छु। यो त बुझाउनका लागि एक नाम भनिदिनुभयो, किन्तु उनको हृदय ठूलो विशाल छ। कुनै भक्तले भगवान्को

ध्यान गर्छ भने भगवान् त्यसको ध्यान गर्छन्। भगवान्‌को यो प्रतिज्ञा छ–

**ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्।**

(४। ११)

जो जुन प्रकारले मलाई भज्छन् म तिनलाई त्यसै प्रकारले भज्दछु। हृदयमा बसाल्ने कुरा भगवान् स्वयं गीतामा भन्छन्–

**समोऽहं सर्वभूतेषु न मे द्वेष्योऽस्ति न प्रियः।**
**ये भजन्ति तु मां भक्त्या मयि ते तेषु चाप्यहम्॥**

(९। २९)

म सबैमा समान भावले छु, किन्तु जसले मलाई प्रेमले भज्छन् तिनका हृदयमा म छु र तिनी मेरा हृदयमा हुन्छन्। जति प्रकारका मेरा भक्त छन् सबै श्रेष्ठ छन् उदारचित्त छन् किन्तु निष्कामी भक्त त मेरो आत्मा नै हो, मेरो स्वरूप नै हो–

**उदाराः सर्व एवैते ज्ञानी त्वात्मैव मे मतम्।**

(गीता ७। १८)

यी सबै भक्त उदार छन् '**एते**' को? अर्थार्थी, आर्त, जिज्ञासु र ज्ञानी। ज्ञानी माने निष्कामी– यिनीहरू सबै उदार छन्। तिनमा निष्कामी ज्ञानी भक्त त मेरो स्वरूप नै हो। त्यसका पूर्वमा भगवान् भन्नुहुन्छ–

**तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते।**
**प्रियो हि ज्ञानिनोऽत्यर्थमहं स च मम प्रियः॥**

(गीता ७। १७)

अर्थार्थी, आर्त, जिज्ञासु माने मोक्षाभिलाषी र ज्ञानी– यी चार प्रकारका भक्तहरूमा एकभक्तिवाला नित्ययुक्त ज्ञानी श्रेष्ठ हो।

एकभक्ति अर्थ ममा नै भक्ति छ कुनै अरूमा छैन। ज्ञानीलाई म अतिशय प्यारो छु यसकारण ज्ञानी मलाई अतिशय प्यारो छ। यो कुरा सातौं अध्यायको सत्रौं श्लोकमा छ। यसमा प्रेमको अधिकता भनिएको छ र नवौं अध्यायको उनन्तीसौं श्लोकमा हृदयमा नित्य स्थायी-रुपले वास गर्नुको विशेषता भनिएको छ। चौथो अध्यायको जुन एघारौं श्लोक छ- **'ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्'** त्यसमा भज्नुको विशेषता भनिएको छ।

**यो मां पश्यति सर्वत्र सर्वं च मयि पश्यति।**
**तस्याहं न प्रणश्यामि स च मे न प्रणश्यति॥**

(गीता ६। ३०)

जो मलाई जताततै देख्छ, सबैलाई ममा हेर्छ, म कहिल्यै त्यसबाट अलग हुन्नँ र ऊ मबाट कहिल्यै अलग्गै हुन्न। यसमा संयोगको विशेषता भनियो।

**सर्वभूतस्थितं यो मां भजत्येकत्वमास्थितः।**
**सर्वथा वर्तमानोऽपि स योगी मयि वर्तते॥**

(गीता ६। ३१)

भगवान् भन्नुहुन्छ कि म सबै भूतहरूमा आत्मरूपले स्थित छु यस्तो म परमात्मामा जो एकीभावले स्थित छ, अर्थात् ममा जो तन्मय भएको छ यस्तो भक्त संसारमा घुम्दै गर्दा पनि, त्यसको जुन विचरण छ, त्यसको जुन क्रीडा छ त्यो ममा नै हुन्छ। त्यसको दृष्टिमा म सिवाय कुनै वस्तु नै छैन। त्यो सबै ठाउँमा मलाई नै हेर्छ र ममा नै रमण गर्छ, यसमा एकताको विशेषता देखाउनुभएको छ। यसरी वास-स्थानतिर ख्याल गर्‍यौं भने भगवान्मा नै बस्नुपर्छ, त्यसभन्दा राम्रो वास-स्थान कुनै छैन।

भज्नुतिर ख्याल गर्‍यौं भने भजनका योग्य परमात्मा हुन् उनीभन्दा बढेर कोही भज्नलाई योग्य छैन। प्रेम गर्नुको कुरा भनेमा त भगवान् नै प्रेम गर्न योग्य हुन् उनी समान कोही पनि प्रेम गर्नयोग्य पात्र छैन। एकता गर्नु छ भने भगवान्मा, प्रेम गर्नु त भगवान्मा, ध्यान गर्नु त भगवान्को, भजन गर्नु त भगवान्को, वास गर्नु त भगवान्मा, मित्रता गर्नु त भगवान्सित, आफ्नो त भगवान् नै हुन्। यसरी हरप्रकारले भगवान् आफ्ना हुन्– यो कुरा यदि मनुष्यको बुझाइमा आओस् त ऊ एक क्षण पनि भगवान्लाई छोड्न सक्दैन, अलग्गै रहन सक्दैन। उनलाई भुल्न सक्दैन– यस्तो भाव, यस्तो स्थिति ती परमात्मामा परम प्रेमको साधन हो। त्यसलाई प्रेमको साधन भनिदेऊ या स्वरूप भनिदेऊ। अतः सबै काम छोडेर यसका लागि हामीहरूले प्राणपर्यन्त चेष्टा गर्नुपर्छ; तत्परतासित चेष्टा गर्नुपर्छ। जब पछि गएर तपाईंलाई यसमा आनन्द आउन लाग्नेछ, मज्जा आउन लाग्नेछ, तब त तपाईं आफैं नै छोड्न सक्नुहुने छैन। अँ प्राणपर्यन्त चेष्टा गर्नुपर्छ। यो कुरा यसकारण भनिन्छ कि जति चेष्टा हुनुपर्छ त्यति हुन्न। यदि पूरै चेष्टा हुन लाग्यो भने त ऊ आफैं नै छोड्न सक्दैन। यसकारण यो बुझ्नुपर्छ कि भगवान् समान हाम्रो कोही छैन, भगवान् हाम्रा परम हितैषी हुन् भगवान् हाम्रा परम प्यारा हुन् भगवान् स्वयं नै हाम्रा हुन् भगवान् हाम्रा आत्मा हुन्। यो जुन प्रेमको कुरा भनियो, यो बुझाइमा आउँदाबित्तिकै मनुष्य भगवान्को अनन्यप्रेमी बन्न जान्छ। यदि बन्दैन भने यो कुरा बुझेको नै छैन, सुनेर पनि विश्वास भएन। सुनेर यदि विश्वास होओस्, श्रद्धा होओस् त फेरि त्यसै बेला त्यो प्रेमी बन्नै पर्छ। त्यसको कसी यो हो कि

जुन समय प्रेमको यस्तो भाव हृदयमा उत्पन्न हुन्छ, हृदय एकदम गद्‌गद् हुन्छ, प्रफुल्लित हुन्छ, शरीरमा रोमाञ्च हुन लाग्छ। कहिलेकता अश्रुपात हुन लाग्छ, वाणी रोकिन्छ, कण्ठ रोकिन्छ, वाणी गद्‌गद् हुन्छ कहिलेकता नासिकाबाट पनि पानी बग्न लाग्छ। त्यस समय एक अलौकिक दशा हुन्छ, यस प्रकारको बुझाइ पाएर त्यसलाई परिवर्तन नगरेमा करुणाभावको जागृति हुन्छ। अर्थात् भगवान्‌सित भेटिने व्याकुलता जन्मिन्छ। भगवान्‌को वियोगमा विरहको व्याकुलता यस्तो हुन्छ कि नभेटिई ऊ रहनै सक्दैन। भगवान्‌का सम्मुख दिल खोलेर हृदयबाट रून्छ कि 'प्रभु! म के गरूँ? तपाईं विलम्ब किन गरिरहनुभएको छ? मलाई किन तडपाउनुहुन्छ?'

**एक बात मैं पूँछउँ तोही। कारन कवन बिसारेहु मोही॥**

प्रभो! यौटा कुरा म तपाईंसित सोध्छु कि तपाईंले केका लागि मलाई बिर्साइदिनुभयो, भुलाइदिनुभयो। विरहको व्याकुलता आउँछ, अर्थात् विरहको व्याकुलता बढ्न जान्छ, उसलाई चैन आउँदैन, रात्रिमा उसलाई निंद्रा आउन्न, दिनमा उसलाई खानु-पिउनु केही पनि राम्रो लाग्दैन। जे केही ऊ कार्य गर्छ ती उसलाई भार लाग्छन् पछि गएर पश्चात्ताप गर्छ। नविचारीकन गर्नेवालाहरूको जुन दशा हुन्छ उही दशा यसको हुन्छ, किनकि परमात्मालाई छोडेर दोश्रो कुनै पनि काम गर्छ, कसैमा पनि आफ्नो समय लगाउँछ, मन लगाउँछ, वाणी लगाउँछ, शरीर लगाउँछ, बुद्धि लगाउँछ भने त्यसका लागि ती सबै रूनुका स्थान हुन्। त्यसका लागि ती एक प्रकारले पश्चात्ताप गर्नुका स्थान हुन् कि हेर मेरो समय कस्ता काममा बित्यो। अतः हामीहरूले सोचेर-बुझेर काम

गर्नुपर्छ, नबिचारीकन क्षणमात्र पनि आफ्नो समय बिताउनुहुन्न। गिरिधर कवि भन्छन्-

**बिना बिचारे जो करै सो पाछे पछिताय।**
**काम बिगाड़े आपनो जगमें होत हँसाय॥**
**जगमें होत हँसाय चित्तमें चैन न पावै।**
**खान पान सनमान राग रँग मन नहिं भावै॥**
**कह गिरिधर कबिराय करम गति टरत न टारे।**
**खटकत है जिय माहिं कियो जो बिना बिचारे॥**

गिरिधर कवि भनिरहेछन् कि नबिचारीकन जो मान्छे केही गरिबस्छ उसलाई पछि घोर पश्चात्ताप गर्नुपर्छ। आफ्नो त काम बिगार्छ, संसारमा हाँसो हुन्छ, हेर कस्तो मूर्ख हो। संसारमा हाँसो हुन्छ, चित्तमा चैन हुँदैन। खानपान, सम्मान, राग-रंग त्यसका मनलाई राम्रा लाग्दैनन् राग-रंग भन्छन् सांसारिक चहल-पहल, विषय-भोग इत्यादिलाई। गिरिधर कविराज भन्छन् कि भाइ! जे हुनु छ त्यो हुनेछ नै, कर्मको गति को टार्न सक्छ। किन्तु त्यो चीज खट्किरहन्छ, जुन नविचारीकन गरिन्छ। यसै प्रकार भगवान्का विषयमा जुन मान्छे भगवान्लाई छोडेर एक क्षण पनि अरू काममा बिताउँछ त्यो काम त्यसै प्रकार खट्किनुपर्छ, जुन अविवेकी नविचारीकन काम गर्नेवालाहरूका दिलमा खट्किन्छ। हामीहरूको समय एक क्षण पनि यदि फाल्तु काममा बित्छ भने सहन गर्नुहुँदैन र यो निश्चय बुझ्नुपर्छ कि जब भगवान्मा अनन्य प्रेम हुन्छ, विशुद्ध प्रेम हुन्छ, तब भगवान्लाई भुलाएर पनि ऊ भुल्न सक्दैन। किन्तु संसारको कहिले विस्मृति हुन्छ र कहिले स्मृति हुन्छ र त्यो स्वप्नवत् हुन्छ। त्यो एक मायामात्र नै हुन्छ या

एक प्रकारसित भगवान्‌को लीला-जस्तै हुन्छ या सिनेमाको तमाशा-जस्तै हुन्छ, लीलाको रूपमा नै प्रेममय प्रतीति हुन्छ। सिनेमाको तमाशा-जस्तै या स्वप्नवत् हुन्छ, त्यसको अभाव प्रतीत हुन्छ, या त संसारको जस्तै प्रतीति भएर अभाव-जस्तो हुन्छ- संसार देखिंदै देखिन्न र देखिन्छ भने लीलाका रूपमा देखिन्छ, अतः दुवै प्रकारले हाम्रा लागि लाभदायक छ। संसारलाई यस्तो बुझ कि या त भगवान्‌को लीला भइरहेछ या भगवान् स्वयं नै चरित्र गरिरहेका छन्। भगवान् नै अनेक रूप धारण गरेर आमोद-प्रमोद गरिरहेका छन् क्रीड़ा गरिरहेका छन् यो भगवान्‌को क्रीडास्थली हो। यसरी देख्नाले-बुझ्नाले आनन्द उत्तरोत्तर बढ्दै जान्छ। प्रेम उत्तरोत्तर बढ्दै जान्छ र त्यस प्रकार यदि संसार एक सिनेमाको तमाशा झैं या स्वप्नवत् प्रतीत हुन्छ भने त्यो लुप्त हुन्छ, स्वप्नवत् भएपछि लुप्त हुन्छ। सम्झना रहँदैन। त्यसलाई त्यसरी नै भुल्छ जस्तै सपनालाई मनुष्य भुल्छ। फेरि यो संसार रहन्न नै, केवल भगवान् नै रहन्छन्- जब केवल भगवान् नै रहन्छन् त यस्तो जुन भगवान्‌को प्राप्ति हो त्यो अलौकिक हो। यस्तो सबै साधनहरूको फल हुन्छ, त्यहाँ प्रेमको नै राज्य हुन्छ। त्यहाँ सिवाय प्रेमास्पद भगवान् र प्रेम गर्नेवाला प्रेमीका अतिरिक्त तेस्रो-चौथो अरू कोही छैन। त्यहाँ छन् केवल प्रेमास्पद भगवान् र प्रेम गर्नेवाला प्रेमी। उनको क्रीडा नै प्रेम हो। लीलाको रूप धारण गरेका छन्। त्यहाँ लीला के हो? भगवान्‌को जुन चरित्र हो ती सबै लीला हुन्। भक्तको जुन चरित्र हो ती सबै लीला हुन्। भक्तको चरित्रले भगवान्‌लाई मुग्ध गरिरहन्छ र भगवान्‌को चरित्रले भक्तलाई मुग्ध गरिरहन्छ। एक-अर्कोमा

प्रेमलाई बढाउनेवाला, एक-अर्कोमा आनन्दलाई बढाउनेवाला, एक-अर्कोलाई आह्लादित गर्नेवाला, यस्तो त्यो अद्भुत प्रेमको स्वरूप छ। त्यहाँ लज्जा छैन एक-अर्काको, न त भक्त लज्जा गर्छ र न भगवान्। भगवान्का लागि भक्त प्रेमास्पद र भक्तका लागि भगवान् प्रेमास्पद हुन् त्यहाँ कोही सानो-ठूलो छैन, एकता छ। यो स्थिति सबै भावहरूबाट उठेको हो। त्यहाँ वात्सल्य-भाव छैन यानी जस्तै पिता-पुत्रको जुन भाव हुन्छ त्यस्तो यो भाव होइन। त्यहाँ सख्य-भाव छैन। जहाँ एक-अर्कासित एक-अर्कोले प्रेम गरोस् त्यो सख्य-भाव हो। यसलाई मित्रता भनिदिऊँ, चाहे मैत्री भनिदिऊँ। मित्रता त एक-अर्कासितै हुन्छ, किन्तु त्यहाँ त दोश्रोपनको भाव नै छैन। त्यहाँ कान्ताभाव पनि छैन कि पति-पत्नी भाव होस्। त्यो साधन-अवस्थामा हो, त्यहाँ स्वामी-सेवक-भाव छैन, दास-भाव छैन, शान्त-भाव छैन, अद्वैत ब्रह्मको प्राप्तिमा जुन शान्त-भाव हुन्छ, त्यो पनि होइन, किनकि त्यो अद्वैत ब्रह्मको प्राप्ति अर्कै प्रकारको हो। यो द्वैत हुँदाहुँदै पनि अद्वैत हो। र त्यो अद्वैत हुँदै अद्वैत मात्र हो। यिनीहरू दुई हुँदाहुँदै पनि एक हुन् र त्यो एक हुँदै एक मात्रै हो। यहाँ प्रेमको प्रधानता छ, अद्वैतमा ज्ञानको प्रधानता छ। ज्ञान नै परमात्माको स्वरूप हो र यहाँ प्रेम नै परमात्माको स्वरूप हो। लज्जा अरूसित हुन्छ, यहाँ लज्जा छैन, स्वामी-सेवक-भाव पनि छैन, यसकारण यहाँ कुनै आदर-सत्कार पनि छैन। को कसको आदर गरोस्। यहाँ गुण-गुणी-भाव पनि छैन। यहाँ त एक भगवद्भाव छ, भगवान्का सिवाय दोश्रो कुनै पदार्थ छँदै छैन। र सबै भाव यस अन्तर्गत हुन् किनकि ती भावहरूलाई फड्केर नै यो प्रेम-भावको प्राप्ति

भएको छ। या यसरी भन कि यो प्रेमको फल हो, प्रेमको स्वरूप हो जुन शब्दहरूबाट तपाईंको बुझाइमा आओस् ती शब्दहरूको प्रयोग तपाईं गर्न सक्नुहुन्छ। किन्तु वास्तवमा यहाँ शब्दको पहुँच छैन। यहाँ त चुप रहनुपर्छ, वाणी रोकिन्छ यहाँ भगवान्को स्तुति-प्रार्थना छैन स्तुति कसले कसको गरोस् र प्रार्थना कुन कुराको र कोसित गरोस्। यहाँ कुन चीज बाँकी छ जसका लागि प्रार्थना गरोस्। प्रार्थनाको साधनभन्दा उँचो स्थान स्तुतिको छ, स्तुतिको साधनबाट अझै अगाडि यो प्रेमको भाव छ। माधुर्य-भाव, सख्य-भाव, दास-भाव, वात्सल्य-भाव, शान्त-भाव आदि सबै भावहरूबाट अतीत अवस्था हो, तीनै गुणहरूबाट अतीत, पाँचवटै भावहरूबाट अतीत, तीनै अवस्थाहरूबाट अतीत, केवल विशुद्ध प्रेम, विशुद्ध प्रेमको स्वरूप भन या विशुद्ध प्रेमको फल भन या परमात्माको प्राप्ति भन या परम शान्तिको प्राप्ति भन या परमधामको प्राप्ति भन या परम आनन्दको प्राप्ति भन या परम प्रेमको प्राप्ति भन, जुन शब्दहरूबाट यो कुरा तपाईंहरूका बुझाइमा आओस्। सबै कुराहरू यसका अन्तर्गत हुन् सबै शब्द यसलाई बुझाउनका लागि हुन्।

नारायण! नारायण! नारायण!

॥ श्रीहरिः ॥

# प्रमाद नै मृत्यु हो

महाभारतको उद्योगपर्वमा एक कथा आउँछ कि सञ्जयले सनत्सुजात ऋषिलाई बोलाएर धृतराष्ट्रलाई उपदेश दिन लगाए। तिनले उपदेशका धेरै कुराहरू सुनाए, तिनमा एक कुरा यो पनि थियो 'प्रमाद नै मृत्यु हो'। यद्यपि यो कुरा सूत्ररूपमा भनिएको छ, तर म यसलाई विस्तार गरेर भन्छु। प्रश्न यो हुन्छ कि प्रमाद के हो? र प्रमाद मृत्यु किन हो? वास्तवमा गर्नयोग्य कार्यलाई नगर्नु नै प्रमाद हो। यसरी नै नगर्नयोग्य कामलाई गर्नु पनि प्रमाद नै हो; किनकि नगर्नयोग्य काम या त व्यर्थकर्म हो या पापकर्म हो। व्यर्थकर्म र पापकर्म- यी दुवै नै तामसी कार्य हुन् यसैकारणले यो पनि प्रमाद हो। यस कार्यमा जति समय जान्छ त्यो समय त नष्ट नै भयो अर्थात् हाम्रो अमूल्य जीवनको त्यति समय कालको मुखमा गयो, यसकारण यो भनियो कि 'प्रमाद नै मृत्यु हो।' अर्को कुरा यो हो कि व्यर्थचेष्टा र पापकर्मको फल दुःख हो। दुःख भोग्नका लागि जीवलाई नाना प्रकारको योनिहरूमा जन्म लिनुपर्छ जसका कारण जन्मिनु र मर्नु पटक-पटक हुन्छ र ऊ जन्म-मरणको बन्धनमा पर्छ। यसकारण यो भनियो कि 'प्रमाद नै मृत्यु हो।'

वस्तुतः कर्तव्यकर्मको पालन नगर्नु नै प्रमाद हो। जस्तै मनुष्यको कर्तव्य हो भजन गर्नु, जप गर्नु, दान गर्नु, तप गर्नु, अरूको उपकार गर्नु, तीर्थ गर्नु, व्रत गर्नु, माता-पिताको सेवा गर्नु, कुनै अतिथि आए भने तिनको सेवा गर्नु, ईश्वरको ध्यान

गर्नु, ईश्वरको भक्ति, स्तुति-प्रार्थना गर्नु, श्रुति-स्मृति, इतिहास-पुराणको स्वाध्याय गर्नु, वेदहरूको, उपनिषद्‌हरूको तथा गीता र रामायणको स्वाध्याय गर्नु यानी तिनको मन लगाएर अध्ययन गर्नु, त्यसको अर्थ र भावलाई बुझ्नु, सत्पुरुषहरूको संग गर्नु, मन र इन्द्रियहरूलाई विषयहरूबाट संयममा राख्नु, संसारबाट वैराग्य गर्नु, शास्त्रहरूमा मनुष्यका लागि यी सबै कर्तव्य बताइएका छन्। यी कर्तव्य आत्माको उद्धारका लागि अर्थात् आफ्नो कल्याणका लागि गर्नुपर्छ। मनुष्यद्वारा यी कर्तव्यहरू नगर्नु नै प्रमाद हो; किनकि हामी यी कर्तव्यरूपी साधनहरूलाई गर्दैनौं भने आखिरमा मर्नेछौं। यदि साधन गरेर आफ्नो काम बनाउँथ्यौं भने फेरि किन मथ्यौं, सदाका लागि अमर हुन्थ्यौं। यसरी मर्नुको कारण प्रमाद भयो। यसकारण प्रमाद नै मृत्यु हो। अतः मनुष्यलाई कहिल्यै निकम्मा रहनुहुन्न। जुन काम आफ्नो बुद्धिमा अति-सुन्दर भन्दा अति-सुन्दर र विशेष हितकारी होस् तथा जसबाट हाम्रो कल्याण होस् तिनै कार्य गर्नुपर्छ। यसरी परमात्माको प्राप्तिका लागि साधन गर्नु नै हाम्रो मुख्य कर्तव्य हो। अतः यसलाई अवश्य गर्नुपर्छ।

अब एक प्रश्न उठ्छ कि परमात्माको प्राप्तिमा विलम्ब किन भइरहेछ। यो विलम्ब प्रमादका कारण भइरहेछ एवं संसारका विषय-भोगहरूमा आसक्तिका कारण भइरहेछ। संसारका विषय-भोगहरूमा आसक्ति किन छ? यसकारण कि यी विषय-भोगहरूमा सुखबुद्धि बनेको छ। अर्थात् सुख लिनुको भावना छ। सुखबुद्धि किन छ? अज्ञानका कारण। अतः यसको मुख्य हेतु अज्ञान हो। त्यस अज्ञानको नाश कसरी होस्? यसको नाश ज्ञानले हुनेछ। र ज्ञानको फल हो परम शान्ति। ज्ञानको प्राप्ति

साधनाले हुनेछ। साधना श्रद्धाले तिव्र हुनेछ। अन्तःकरणको शुद्धिले श्रद्धा हुनेछ। निष्काम भाव-पूर्वक परोपकार गर्नाले अन्तःकरणको शुद्धि हुन्छ। परोपकार हाम्रो आत्माको उद्धारमा एक प्रधान जस्तो धन हो। यसरी बुझेर आफ्नो मुख्य कर्तव्य गर्नुपर्छ।

प्रमादका अतिरिक्त अरू के हेतु छन् जसले परमात्माको प्राप्तिमा विलम्ब भइरहेछ। यसमा हेतु यो हो कि हामी परमात्मालाई धोखा दिइरहेछौं। धोखा दिनेवालालाई भगवान् कसरी मिलून्? वास्तवमा ऊ स्वयंलाई धोखा दिन्छ कारण कि परमात्मालाई त यसको कुनै खाँचो छैन, यसकारण यसले आफैंलाई नै धोखा दिनु हो! भगवान्लाई प्राप्त गर्नुको सबैभन्दा उच्च सरल उपाय हो भगवान्माथि निर्भर हुनु, उनलाई सबै थोक समर्पण गरिदिनु, आफैंलाई पनि भगवान्लाई समर्पण गरिदिनु। सबै चीज भगवान्को हो; अतः उनको वस्तु उनीलाई नै समर्पण गरिदिनु। जसको यो भाव छ कि 'यो मेरो', 'यो मेरो' त्यसले पनि सबै थोक भगवान्लाई समर्पण गरिदिनुपर्छ। संसारका जति चीजहरूमा 'मेरोपन' छ 'म' र 'मेरोपन' को जुन अभिमान छ, यस शरीरमा पनि मोहको भाव छ यी सबैलाई भगवान्मा समर्पण गर्नुपर्छ। तथा शरीरसित सम्बन्ध राख्ने जति पनि, सजीव या निर्जीव पदार्थ छन्; जस्तै रुपियाँ-धन निर्जीव, स्त्री-पुत्र सजीव, यी सबैलाई भगवान्मा समर्पण गरिदिनुपर्छ। समर्पण पनि यस भावनाले गरोस् कि हे भगवन्! यी तपाईंका चीज तपाईंलाई नै अर्पण गर्छु, सबै चीज तपाईंका नै हुन्। वास्तवमा यी हाम्रा त हैनन् नै हामीले भुलले आफ्ना मानेका छौं अब हामी आफ्नो त्यस भुललाई मेटिदिन्छौं। यस भुललाई मेटाइदिनाले भगवान्का

चीजहरूमाथि हामी यो जुन अभिमान गर्छौं 'यो मेरो हो' 'यो मेरो हो' मेरोपनको अभिमान हटाइदिन्छौं र भगवान्‌को चीज भगवान्‌लाई नै अर्पण गरिदिन्छौं, यो कार्य ईमानदारी र सच्चाइसित गर्नुपर्छ। जब सबै थोक भगवान्‌लाई अर्पण गरिदिन्छौं भने फेरि हामी त्यसको उपभोग गर्छौं या त्यसमाथि आफ्नो अधिकार चाहन्छौं भने यो त एक प्रकारको बेईमानी हुन्छ तथा भगवान्‌लाई धोखा दिनु हुन्छ। धोखा दिनेवालाहरूलाई भगवान् दर्शन दिन्नन्। भन्न त भन्छन् सबै चीज तपाईंको हो परन्तु भगवान्‌लाई अर्पण गरेर, फेरि त्यस चीजमाथि आफ्नो अधिकार राख्छन् यो चोरी नै त हो।

यो चोरी पनि पाँच प्रकारले हुन्छ- (१) समयको चोरी (२) ऐश्वर्य अर्थात् धन-सम्पत्तिको चोरी (३) शरीरको चोरी (४) मनको चोरी र (५) बुद्धिको चोरी।

यी पाँचवटै भगवान्‌लाई अर्पण गरियो, जति ऐश्वर्यका पदार्थ हुन् ती सबै भगवान्‌लाई अर्पण गरियो र यो शरीर पनि अर्पण गरियो, मन पनि भगवान्‌लाई अर्पण गरियो तथा बुद्धि पनि भगवान्‌लाई समर्पण गरियो। यी सबै कुरा समर्पण गरेपछि पनि हामीसित जुन वस्तु छ त्यसमा ममता बँचेको छ- यो मेरी स्त्री, यो मेरो पुत्र, यो मेरो रुपियाँ- यी सबै जब तिमीले भगवान्‌लाई अर्पण गरिदियौ फेरि तिम्रो कसरी? वास्तवमा त पहिला पनि सबै थोक भगवान्‌कै थिए अब पनि भगवान्‌का नै हुन् केवल हामीले आफ्नो मानेका थियौं, अब पुनः भगवान्‌का चीज भगवान्‌लाई नै फिर्ता गरिरहेछु, भगवान्‌लाई अर्पण गरिदिएँ।

जब सबै थोक भगवान्‌लाई समर्पित गरिदियौ त यी रूपियाँमाथि तिमी शासन किन राख्छौ? उत्तर पाइयो कि यिनको

रक्षाका लागि। रक्षाका लागि शासन राख्नु त उचित नै हो परन्तु यदि तिमी रक्षकको ठाउँमा त्यसको भक्षक भयौ भने यो चोरी भयो कि भएन? चोरी कसरी भयो? तिमी भोजन आदि गर्छौ? लुगा आदि पहिरन्छौ? भोजन कसको हो? लुगाहरू कसका हुन्? शरीर कसको हो? उत्तर पाइयो- यो सबै भगवान्को हो। फेरि तिमी किन खान्छौ-पहिरन्छौ? शरीरको रक्षाका लागि। शरीरको रक्षा किन? बोले- भगवान्को चीज हो त्यसको रक्षा गर्नुपर्छ किनकि यस शरीरले भगवान्को नै त काम गर्नु छ। यो कुरा पनि ठीक हो। शरीरको रक्षाका लागि खाने र वस्त्र पहिरनुमा कुनै आपत्ति छैन पनि। शरीरको रक्षाका लागि वस्त्र र भोजनको उपयोग त उचित नै हो, परन्तु यो सबै शरीरको रक्षाका लागि गर्छौ या कुनै स्वाद, भोग, ऐश-आरामका लागि पनि गर्छौ? स्वाद, भोग, ऐश-आराम त संसारका चीज हुन् भगवान्सित यिनको कुनै सम्बन्ध छैन। यसकारण यो विचार गर्ने कुरा हो कि शरीरको रक्षाका लागि भोजन, वस्त्र आदिको उपयोग गर्नु त उचित नै छ परन्तु यी सबैमा जुन स्वाद, भोग र ऐश-आरामको भावना हुन्छ त्यो भगवान्को कार्य हैन यसबाट भगवान्लाई कुनै फाइदा छैन, यो तिम्रो आफ्नो व्यक्तिगत हो, यो नै चोरी हो। चोरी विषयहरूको पनि हुन्छ र धनको पनि हुन्छ। जुन धनको या वस्त्रको उपयोग शरीर-रक्षाका लागि अथवा शरीर-निर्वाहका लागि गरिन्छ त्यो चोरी हैन। यसमा कुनै पाप पनि छैन। गीतामा भगवान् भन्छन् कि **'शारीरं केवलं कर्म कुर्वन्नाप्नोति किल्बिषम्'** (४। २१)। शरीर-निर्वाहको लागि कर्म गर्दै गर्दा पुरुष पापको भागी हुन्न। अतः अनासक्तभावले विषयहरूको सेवन गर्नुपर्छ आसक्तभावले हैन। यसैकारणले ज्ञानी

महात्मा अनासक्तभावले नै कर्म गर्छन् र अनासक्तभावले विषयहरूको सेवन गर्छन् यसैकारणले तिनीहरू योगारूढ कहलाइन्छन्-

**सर्वसङ्कल्पसंन्यासी योगारूढस्तदोच्यते ॥**

(गीता ६। ४)

जुन कालमा ऊ विषयहरूमा आसक्त हुन्न तथा जुन कालमा ऊ जुन कर्म गर्छ त्यसमा आसक्त हुन्न, त्यस समय सर्वसंकल्पको त्यागी पुरुष योगारूढ कहलाउँछ। यसरी निष्कर्ष यो निक्ल्यो कि आफ्नो शरीरलाई भोगहरूमा बिताउनुहुन्न। शरीरको रक्षा गर्नुमा कुनै दोष छैन, परन्तु यस कुराको सावधानी राख्नुपर्छ कि शरीरलाई रक्षा गर्दागर्दै कहीं भोगहरूमा न फसियोस्। शब्द, स्पर्श, रूप, रस गन्ध जुन पाँच प्रकारका विषय हुन् यिनको संसर्ग हुनुमा कुनै दोषको कुरा हैन, परन्तु यिनमा रस लिनु ठीक हैन। पुष्प, अत्तर, पुष्पतेल आदि भोग-सामग्री कदाचित् प्राप्त होऊन् तर तिनमा रस लिनुपर्दैन। यस प्रकारका वस्तु प्राप्त होऊन् त यिनलाई भगवान्लाई समर्पण गरिदेऊ। यसै प्रकारले यदि कुनै विषयभोगको सामग्री अर्थात् भोजनको कुनै स्वादिष्ट वस्तु, पहिरनका लागि सुन्दर कपडाहरू इत्यादि अथवा कुनै ओढ्नुको चीज जस्तै कुनै दामी शल मिलोस् त आफ्नो काम त कम्बलले नै चल्न सक्छ, किनकि शरीर-निर्वाह र शीत-निवारणका लागि यो धेरै हो। कहिल्यै शीतको समय छ र रातमा सुत्नुपरेको छ, भूमिमाथि शयन गर्नाले बिरामी हुने अथवा निंद्रा थोरै आउने आशंका हुन्छ भने शरीरको रक्षाका लागि कुनै साधारण चीज ओच्छ्याएर काम चल्न सक्छ। कम्बल अथवा गुन्द्री बिच्छ्याउनाले काम चल्छ भने यसको उपयोग गर्न सकिन्छ। तात्पर्य यो हो कि आरामको दृष्टिले केही नओच्छ्याऊ, शरीरको रक्षाका लागि जति

आवश्यक छ त्यति नै ओढ्याऊ। शरीरमा कुनै दुःख नहोस्, शरीरमा कुनै पीडा नहोस्, कुनै बिमारी नहोस्, जुन प्रकार शरीरको रक्षा हुन्छ त्यसको निर्वाहका लागि आवश्यकतानुसार वस्तुको उपयोग गर्नुपर्छ। विशेष प्रकारले भोगहरूलाई भोगेर मोज गर्नु– यसैको नाम हो ऐश–आराम, जसलाई एकदम नै त्यागिदिनुपर्छ र विषयहरूको उपभोग एकदम नै छोडिदिनुपर्छ। शब्द, स्पर्श, रूप, रस, गन्ध यी इन्द्रियहरूका विषय हुन्।

**रागद्वेषवियुक्तैस्तु विषयानिन्द्रियैश्चरन्।**
**आत्मवश्यैर्विधेयात्मा प्रसादमधिगच्छति॥**
**प्रसादे सर्वदुःखानां हानिरस्योपजायते।**
**प्रसन्नचेतसो ह्याशु बुद्धिः पर्यवतिष्ठते॥**

(गीता २। ६४–६५)

जसको मन आफ्नो वशमा छ यस्तो जुन पुरुष इन्द्रियहरूद्वारा मात्र विषयहरूमा विचरण गर्छ, ऊ प्रसादलाई प्राप्त हुन्छ। प्रसाद चित्तको प्रसन्नता हो, प्रसाद अन्तःकरणको शुद्धि हो, प्रसाद ईश्वरको दया हो। त्यो मनुष्य ईश्वरको दयाको पात्र बन्छ, त्यसको अन्तःकरण शुद्ध हुन्छ र शुद्ध अन्तःकरणले त्यसमा सात्त्विक प्रसन्नता हुन्छ। सात्त्विक प्रसन्नताले त्यसका सबै दुःखहरूको हानि हुन्छ साथै नै यस सात्त्विक प्रसन्नताले त्यसको बुद्धि परमात्मामा स्थिर हुन्छ, जसका फलस्वरूप उसलाई परमात्माको प्राप्ति हुन्छ यसरी त्यो पुरुष परमात्माको प्राप्तिसम्म पुग्छ। नेत्रको काम हो देख्नु त नेत्रहरूले हेर, तर कुनै स्त्रीलाई नेत्रहरूद्वारा पापबुद्धिले नहेर, धर्मबुद्धिले हेर। नासिकाको काम हो सुगन्ध लिनु, तर यो सुगन्ध भोगदृष्टिले अत्तर, पुष्पतेल आदिको पनि लिन सकिन्छ, जुन लिनुहुँदैन। परन्तु भगवान्मा

चढाइएका तुलसी र त्यसका मकरन्दको सुगन्धी पनि प्रसादरूपमा धार्मिक भावले लिइन्छ जुन कल्याणकारी हो। यसै प्रकार कानहरूबाट सुन्नुको काम हो, सत्संग, कथा, कीर्तन आदि सुन्नु जहाँ एकातिर कल्याणकारी छ, त्यहीं नै सिनेमा आदिका फोहोर गीत सुन्नु हानिकारक छ। कानहरूको काम सुन्नुको हो, कानहरूले हामी सुनौं, किन्तु राग-द्वेषरहित भएर। भोजन पनि गरौं त राग-द्वेषले रहित भएर। यसरी विषयहरूमा विचरण गर्नु जहाँ मुक्तिको साधन हो, त्यहीं नै अर्कोतिर विषयहरूको सुखबुद्धिले उपभोग गर्नु जन्म-मरणको बन्धनको कारण बन्न जान्छ।

जब सबै वस्तु हामीले भगवान्‌लाई अर्पण गरिदियौं फेरि त्यसको उपभोग गर्‍यौंन भने यो चोरी हो। कुनै ब्राह्मणलाई गाई दान दिइयोस् र फेरि त्यस गाईलाई चराउनका लागि लगियोस् त यो उत्तम काम हो, परन्तु त्यस ब्राा्ह्मणको नजरबाट लुकाएर तपाईं त्यस गाईको दूध दुहुनुहोस् र आधा आफ्ना घर लैजानुहोस् तथा आधा तिनका घर पुर्‍याउनोस् त यो चोरी भयो कि भएन? यसै प्रकारले सबै चीज जब भगवान्‌लाई अर्पण गरिदियौं फेरि भगवान्‌का सबै चीजहरूको रक्षा गर्नु आफ्नो काम हो। कुनै पनि प्रकारले आफ्नो ऐश-आराम र भोगमा रूपियाँलाई खर्च गर्नु धनको चोरी हो। जब सबै रूपियाँ भगवान्‌का हुन् भने सबै रूपियाँ भगवान्‌का काममा लाग्नुपर्छ। भगवान्‌का कामका लागि तिमी चाहे लाख रूपियाँ जम्मा गर या करो?। भगवान्‌को सेवाका लागि संग्रह गर्नुमा कुनै हानिको कुरा होइन, किन्तु ऐश-आराम र भोगका लागि यदि यो संग्रह गरियो भने यो रूपियाँको चोरी भयो। यसरी यी सांसारिक पदार्थ र धन, ऐश्वर्य आदि सबै

भगवान्का हुन् जसको हामीले रक्षा गर्नुपर्छ तर उपभोग गर्नुहुँदैन। तात्पर्य यो हो कि रूपियाँ आदि वस्तुहरूमा अहंकार हुनुहुँदैन। तपाईंसित दुई लाख रूपियाँ छन् भने ती तपाईंका थोरै नै हुन् भगवान्का हुन्। यदि तपाईंले ती रूपियाँलाई आफ्नो मान-बड़ाईका लागि खर्च गर्नुको चेष्टा गर्नुभयो भने त्यो रुपियाँको उपभोग गर्नु हो। रक्षा त त्यसरी मात्र हुन्छ जस्तै बैंकका खजानाहरूमा लाखौं रूपियाँ रहन्छन् र त्यसको रक्षाका लागि तैनाथ सिपाही बंदूक लिएर चक्कर लगाउँछन् जसबाट कसैले त्यसको चोरी गर्न नसकोस्। यसरी तिम्रो अधिकार केवल रक्षा गर्नुको हो, उपभोगद्वारा चोरी गर्नु हैन।

समयको पनि चोरी यसै प्रकार हुन्छ। चौबीस घण्टाको समयमा छ घण्टा त तपाईं शयन गर्नुहोस् र अठार घण्टा भगवान्को काम गर्नुहोस्। अर्थात् यो जुन सावधानी या चौकीदारीको काम छ यो अठार घण्टाको काम हो-

**युक्ताहारविहारस्य युक्तचेष्टस्य कर्मसु।**
**युक्तस्वप्नावबोधस्य योगो भवति दुःखहा॥**

(गीता ६। १७)

युक्त आहार-विहार र यथायोग्य शयन तथा यथायोग्य चेष्टा गर्नेहरूलाई नै दुःखहरूको नाश गराउने योग सिद्ध हुन्छ। चौबीस घण्टालाई चार विभाग गरौं। छः घण्टा शयन, छः घण्टा आहार-विहार तथा छः घण्टा शरीर-निर्वाहका लागि जीविका-साधनको काम, जीविकोपार्जनको कार्य र छः घण्टा भजन-साधना। यसरी चौबीस घण्टा समयको उपयोग गरौं। यदि आहार-विहार तीन घण्टामा हुन्छ भने साधन-भजनलाई अझै बढाइदिऊँ। जीविकाको निर्वाह यदि छः घण्टामा हुन्न भने नौ घण्टा गरिदिऊँ। यसमा

हानिको कुरा छैन, परन्तु सबै समयमा परमात्माको प्राप्तिको साधन गरिरहनुहोस्। भगवान्का नामको जप, भगवान्का स्वरूपको ध्यान, निष्काम-भावना तथा ईश्वरमा श्रद्धा र प्रेम यी जुन-जुन खास-खास चीजहरू हुन् यिनको साधना गरिरहनुहोस्। चौबीस घण्टामा हरसमय हर बेला जप-ध्यान गर्नुपर्छ। छ घण्टा सुतिन्छ, यसमा कुनै हानि छैन, जाग्रत्-अवस्था अठार घण्टाहरूमा तपाईं जुन अभ्यास गर्नुहुनेछ, छ घण्टा सुषुप्तिमा पनि उही अभ्यास भइरहनेछ।

ध्यान सबै समय गर्न सकिन्छ, यो एक सामान्य कुरा हो। एकपटक बुद्धिद्वारा परमात्मालाई तत्त्वबाट बुझियोस् र यो विश्वास होस् कि परमात्मा सबै ठाउँ व्याप्त छन् जस्तै बिजुलीका तारमा बिजुली हुन्छ, सलाईमा अग्नि हुन्छ र बरफमा जल हुन्छ, उसै प्रकार परमात्मा पनि सर्वत्र व्याप्त हुन्छन्। यो कुरा यदि बुझाइमा आओस् र निश्चय होओस्, फेरि यो कुरा मनबाट कसरी टाढा हुन सक्छ? हामी स्वप्नमा पनि यसलाई भुल्न सक्दैनौं, सुतेका समयमा पनि यसलाई भुल्न सक्दैनौं, सदा यसको स्मृति बनिरहनेछ। बुद्धि र विवेकद्वारा परमात्माको स्वरूपलाई बुझ्नु र त्यस बुझाइअनुसार मनलाई परमात्मामा लगाइदिनू। वास्तवमा परमात्मा आनन्दस्वरूप नै हुन्। जब यो कुरा बुझाइमा आउँछ कि आनन्द नै परमात्माको स्वरूप हो फेरि मन आनन्दलाई छोडेर त्यसभन्दा बाहिर जानै सक्दैन। मनलाई अरू गर्नु नै के छ? आनन्दको ध्यान गर्नु छ, आनन्दको नै चिन्तन गर्नु छ र यसै आनन्दको अनुभव गर्नु छ। यदि आनन्दको अनुभव छैन भने फेरि परमात्माको ध्यान भयो नै कहाँ, परमात्माको स्वरूप आनन्दमय छ। यो आनन्द वास्तविक हो,

नित्य हो, सत्य हो, अपरिमित र असीम हो, यो चिन्मय आनन्द हो। आनन्द–नै–आनन्द हो। यसरी यो आनन्दघन हो। जब तपाईं यस कुरालाई पूर्ण रूपमा बुझ्नुहुन्छ फेरि यसलाई छोड्न कसरी सक्नुहुन्छ? जुन कुरा बुद्धिमा आयो, जसको अनुभव बुद्धि गरिरहेछ, त्यस आनन्दलाई पुरुष कसरी छोड्न सक्छ। कारण, संसारमा पशु–पक्षी, मनुष्य–देवता, यक्ष–राक्षस कोही पनि यस्तो प्राणी छैन जो आनन्द नचाहोस्, सबै यसलाई चाहन्छन्।

वास्तवमा संसारमा यस्तो कुनै व्यक्ति छैन, जो दुःख चाहन्छ। सबै आनन्द चाहन्छन्। यदि विवेक–बुद्धिद्वारा आनन्द बुझाइमा आओस् र त्यसको अनुभव होओस् त मनुष्य आनन्दलाई छोडेर दुःखतिर किन जाला। यस आनन्दमा स्वतः मन लाग्न थाल्नेछ। फेरि आनन्दको ध्यान त आफैं नै हुनेछ, गर्नुपर्ने छैन। मनलाई जब सुख मिल्नेछ, जब आनन्दको अनुभूति हुनेछ तब त्यो स्वतः त्यहाँ जानेछ र त्यहीं नै रहनेछ, कारण कि परमात्माको स्वरूप त पूर्ण आनन्दरूप हो। यो कुरा बुझेर त्यसको ध्यान स्वतः स्वाभाविक रूपले भइरहनेछ। यसरी यो परमात्माको ध्यान भयो।

अर्को कुरा हो नामको जप। जुन मान्छेहरू परमात्माको तत्त्वलाई बुझ्न सक्दैनन् तथा जसद्वारा उनको निरन्तर ध्यान हुन सक्दैन, तिनका लागि नाम–जप परम साधन हो। परमात्माको नामजपले परमात्माको स्वरूपको सम्झना दिलाइदिन्छ। यसकारण नाम–जपको विशेष महिमा छ। जब व्यक्ति नामीलाई वास्तविक रूपले बुझ्छ भने नाम उसलाई धेरै प्यारो लाग्न थाल्छ। व्यवहारमा पनि कोही आफ्नो प्रेमी व्यक्ति या मित्र होस्, जसलाई हामी आफ्नो मान्छौं, त्यसको नाम विशेष प्यारो लाग्छ। तर भगवान्को नाम त हजार गुना अधिक प्यारो हुन्छ, किनकि उनी हाम्रा

प्रियतम हुन् भगवान्का लागि भक्त प्रियतम हो र भक्तका लागि भगवान् प्रियतम र प्रियतमको नाम स्वाभाविक रूपले प्यारो लाग्छ नै। यसकारण लत लागेपछि त यदि कोही यसलाई छोड्न चाहन्छ भने पनि छोड्न सक्दैनन्। स्वतः नामजप हुन लाग्छ। कसैसित कुराकानीका क्रममा यदि व्यक्तिद्वारा जप हुन सक्दैन भने पनि आफ्नो त्यस प्रियतमको स्वरूप ऊ भुल्न सक्दैन। प्रियतमको स्वरूप हृदयमा प्रवेश भएका कारण निकाल्नाले पनि निक्लन्न। यसरी त्यो चीज अत्यन्त प्यारो हुन्छ। जबसम्म हामी त्यस तत्त्वलाई बुझ्दैनौं त्यति बेलासम्म जप र ध्यान गर्नुपर्छ। जबसम्म गर्नुपर्छ, तबसम्म त्यो पर्म जस्तै लाग्छ, परन्तु जब तत्त्व बुझाइमा आउँछ त अनि आनन्द-नै-आनन्द छ।

आफ्नो सम्पूर्ण समय जब हामी भगवान्मा लगाउँदैनौं र जुन समय अरू काममा लाग्छ त्यति समय व्यर्थ गयो, यानी त्यो समय हामीले बर्बाद गर्‍यौं अर्थात् आफ्नो कर्तव्यको काममा कमी आयो। समय मिलेको त छ भगवान्को कामका लागि र लगाउँछौं हामी अरू काममा, त्यो समयको चोरी भयो। जस्तै कुनै किन-बेच गर्ने लेखापालले आफ्नो ड्यूटीको समय मालिकको काममा पूरै नलगाएर आफ्नो निजी काममा लगायो भने त्यो समयको चोरी हो। यदि आठ घण्टाको ड्यूटी छ भने मालिकको काममा आठ घण्टा समय लाग्नुपर्छ, यसभन्दा अधिक लगाएमा मालिक धेरै खुशी हुनेछ। यसरी नै आफ्नो मालिक परमात्मा हो उसका लागि चौबीस घण्टा नै अर्पण गरिदियौं भने सारा समय भगवान्को हुनेछ। अनि त हामीले आफ्ना निमित्त केही राखेकै छैनौं। चौबीस घण्टामा अठार घण्टा यदि जप-ध्यानको अभ्यास भयो भने बाँकी छ घण्टा जुन विश्रामका लागि बँच्छन् त्यसमा

पनि उही स्थिति रहनेछ।

तेस्रो कुरा हो शरीरको चोरी। शरीरको चोरी के हो? शरीरले जुन ऐश-आराम र भोग हामी भोग्छौं, यो शरीरको चोरी हो। कारण, यो मानव-शरीर मिलेको छ परमात्माको प्राप्तिका लागि र तिमी लगाउँछौ संसारका विषय-भोगहरूमा, यो चोरी होइन भने अरू के हो? भगवान्‌को आज्ञा छैन कि तिमी ऐश-आराम र भोगमा आफ्नो शरीरको उपयोग गर। भगवान् भन्छन् कि तिमी आफ्नो शरीरको रक्षा गर र शरीरको सबै शक्ति तथा सारा समय भगवान्‌को काममा लगाऊ तथा खटेर परिश्रम गर। धेरै-जसो मान्छेहरू काम त गर्छन् परन्तु जति खटनी गर्नुपर्छ त्यति गर्दैनन् यसको सट्टा चिं-मुसी गर्छन्; कतिखेर ल्याङ्फ्याङ् गर्दै बिना आवश्यकता समय बिताउनका लागि शौच जान्छन् कहिले पिसाब गर्न जान्छन् कहिले के गर्छन् यसरी कुनै-न-कुनै कुराको बहाना लिएर समय बिताइदिनु र समय नष्ट गर्नु तथा आफ्नो शरीरलाई आराम दिनु, यो सबै शरीरको चोरी नै त हो। अतः शरीरलाई खूब काममा लगाउनुपर्छ, तर यस्तो पनि लगाउनुहुन्न, जसबाट बिरामी परोस्, शरीरको रक्षा गर्नु पनि आफ्नो कर्तव्य हो।

मनको चोरी के हो? भगवान्‌मा मन नलगाएर संसारमा मनलाई लगाइदिनु मनको चोरी हो। जसको मन विशेषरूपले संसारमा लागेको छ, त्यो कृतकार्य भएन। तिम्रो मन भगवान्‌लाई छोडेर अरूतिर जान्छ भने अझै तिम्रो साधनमा कमी छ र अहिलेसम्म तिमी साधक बनेनौ। यदि साधक बने पनि सिद्ध भएनौ। सिद्ध हुनका लागि आफ्नो मनको, बुद्धिको र शरीर कसैको पनि चोरी नगर। चोरी गर्नु यो नै हो कि यी सबैलाई

भगवान्‌को काममा नलगाएर अरू काममा लगाउनु। सबैमा भगवान् विराजमान छन् सबैलाई भगवान्‌को स्वरूप मानेर कसैको सेवा गरिरहेका छौ भने बुझ भगवान्‌को नै सेवा गरिरहेका छौ, कसैसित कुरा गरिरहेका छौ भने भगवान्‌सित नै कुरा गरिरहेका छौ, कसैकोमा हिंडेर गइरहेछौ भने बुझ कि भगवान्‌का लागि नै गइरहेका छौ। यसरी शरीर, मन, बुद्धिका साथै आफ्ना इन्द्रियहरूलाई पनि भगवान्‌का काममा नै लगाइदिनुपर्छ। नित्य उठेर भगवान्‌को दर्शन गर, कानहरूले भगवान्‌को नाम तथा चरित्र सुन, वाणीले भगवान्‌को कुरा गर। आफ्ना इन्द्रियहरूलाई र वाणीलाई भगवान्‌मा नै लगाउनु छ। अरूलाई सुख पुऱ्याउने कुनै कुरा हामी गर्छौं, यो भगवान्‌को सेवामा लगाउनु नै भयो। मनले पनि भगवान्‌को नै चिन्तन गर्नुपर्छ, भगवान्‌को सेवाका लागि कुनै अन्यको चिन्तन गर्नु पनि भगवान्‌को नै चिन्तन हो। यदि बुद्धिमा यो निश्चय होस् कि भगवान् सर्वव्यापक छन् यानी सबै ठाउँमा छन् नै, तथा तपाईंको यो भावना र बुझाइ दृढ भयो भने तपाईं जसको पनि सेवा गर्नुहुनेछ त्यो भगवान्‌को नै सेवा हुनेछ। यस कार्यमा सेवा र दर्शन दुवै साथसाथै भइरहनेछन् जस्तै गोपिनीहरू भगवान्‌को सेवा पनि गर्थे र भगवान्‌को दर्शन पनि गरिरहन्थे। घरको काम गर्नु पनि भगवान्‌को नै सेवा गर्नु हो। गोपिनीहरू भगवान् श्रीकृष्णका लागि गाई दुहुँछन् भगवान् श्रीकृष्णका लागि मक्खन निकाल्छन् भगवान्‌का लागि नै मोही बनाइरहेका छन् तिनका सबै काम भगवान्‌का लागि नै हुन्छन्। यसै प्रकार हामी सबैको पनि सबै काम भगवान्‌का लागि हुनुपर्छ।

भगवान्‌मा जसरी मन लगाउने कुरा छ, त्यस्तै बुद्धि पनि भगवान्‌मा नै लगाउनुपर्छ। यदि हामी बुद्धिलाई आफ्नो काममा

लगाउँछौं, भगवान्का तत्त्व र रहस्य बुझ्नमा यसको सदुपयोग गर्दैनौं, गीता-रामायणका अर्थ र त्यसका भाव बुझ्नमा बुद्धि लगाउँदैनौं भने यो बुद्धिको चोरी हो।

कुनै व्यक्ति सन्ध्या गर्छ, गायत्रीको जप गर्छ, तर वास्तवमा सन्ध्यामा त्यसको मन लागेको छैन, जप गर्ने बेलामा पनि जपमा अथवा गायत्रीमाताको स्वरूपमा त्यसको ध्यान छैन, बरू मन उटपटाँगको चिन्तन गर्न लाग्छ र यता-उता भटकिन्छ भने, यो सबै धोखा होइन भने अरू के हो? जगत्का अगाडि त ऊ साँचो बन्छ, महात्मा बन्छ, धर्मात्मा बन्छ, तर वास्तवमा यी सबै गुण त्यसमा हुन्नन्। यसरी ऊ आफ्ना बुद्धिद्वारा दुनियाँलाई धोखा दिन्छ, भगवान्लाई धोखा दिन्छ र आफैंलाई पनि धोखा दिन्छ। अतः सबै मान्छेहरूले यो निश्चय गर्नुपर्छ कि ऊ समयको चोरी नगरोस्, भगवान्का धनको चोरी नगरोस्, आफ्नो शरीरलाई चोरेर भोगहरूमा नलगाओस्। यसै प्रकार मन, इन्द्रिय र बुद्धिलाई पनि कुनै अर्को काममा नलगाएर भगवान्मा नै लगाउनुपर्छ। वास्तवमा जब हामीले सबैथोक भगवान्लाई अर्पण गरिदियौं र हृदयबाट हामीले यो मानिलियौं कि सबैथोक भगवान्को हो; फेरि ती चीजलाई आफ्नो काममा ल्याउनुको हामीलाई कुन अधिकार हुन्छ? अर्थात् यी सबैलाई आफ्नो काममा ल्याउनु नै चोरी गर्नु हो।

मनुष्य जबसम्म साधक हो, तबसम्म उसलाई सिद्ध बन्ने प्रयत्न गर्नुपर्छ। सिद्ध बनेपछि परमात्माप्राप्तिको लक्ष्य हुनुपर्छ। परमात्माको प्राप्ति भएपछि यी सबै काम लोकसंग्रहका लागि गर्नुपर्छ। लोकसंग्रह के हो? लोकको अर्थ हो सबै प्राणी र संग्रहको अर्थ हो सँगाल्नु अर्थात् चौरासी लाख योनिहरूमा

छरिएका प्राणीहरूलाई परमात्मामा लगाउनु, यो नै संग्रह गर्नु छ। छरिएको बुद्धिलाई नै छरिनु भन्छन्। मनुष्यमा एक बुद्धि छ भने उत्तम बुद्धि हो र जुन नाना प्रकारको बुद्धि हुन्छ त्यसले उसलाई भट्काउँछ। यो कुरा गीतामा पनि भगवान्‌ले भन्नुभएको छ–

**व्यवसायात्मिका बुद्धिरेकेह कुरुनन्दन।**
**बहुशाखा ह्यनन्ताश्च बुद्धयोऽव्यवसायिनाम्॥**

(२। ४१)

निश्चयात्मिका बुद्धि परमात्माको स्वरूपलाई निश्चय गर्नेवाला हुन्छ अर्थात् यो सबै कुरा एकमात्र परमात्मा नै हो, परमात्माका सिवाय अरू केही छैन भन्ने बुझ्ने हुन्छ। यसरी भक्तिको भावनाले एक परमात्मा नै हो अरू केही छैन भन्ने बुझिन्छ, ज्ञानका मार्गबाट पनि एक परमात्मा नै हो र ऊ सिवाय अर्को कोही पनि छैन अर्थात् सबैको अभाव छ केवल एक परमात्माको नै भाव छ र ऊ एक नै छ। यदि यस कुरामा कुनै दोष छ यानी जसको निश्चय एकीकृत छैन तिनको नाना बुद्धि हुन्छ र एक-एक बुद्धिका नाना प्रकारका शाखाहरू हुन्छन्। यही नाना प्रकारका बुद्धिले उसलाई संसारका अनेक योनिहरूमा भट्काउँछ। ऊ भट्किरहन्छ त ती भट्किनेवालाहरूलाई निश्चयात्मिका बुद्धिका बारेमा बताएर ती सबैको संग्रह गर्नु वा परमात्माको स्वरूपमा लगाउनु, यो नै कर्तव्यको पालन हो। भगवान् भन्छन् कि तिमी ख्याल गरेर हेर्नू मेरो लागि संसारमा कुनै कर्तव्य छ के? अर्थात् छैन–

**न मे पार्थास्ति कर्तव्यं त्रिषु लोकेषु किञ्चन।**
**नानवाप्तमवाप्तव्यं वर्त एव च कर्मणि॥**

(३। २२)

हे अर्जुन! मलाई यी तीनै लोकहरूमा न त केही कर्तव्य छ र न कुनै पनि प्राप्त गर्नयोग्य वस्तु अप्राप्त छन् तैपनि म कर्मको नै व्यवहार गर्छु। भन्नुको तात्पर्य यो हो कि तिमीले पनि कर्महरूमा व्यवहार गर्नुपर्छ तथा जो ज्ञानी-महात्मा हुन् तिनले पनि कर्महरूमा व्यवहार गर्नुपर्छ। तिमी यदि साधक हौ भने पनि कर्म गर्नुपर्छ र यदि सिद्ध हौ भने पनि कर्म गर्नुपर्छ।

**सक्ताः कर्मण्यविद्वांसो यथा कुर्वन्ति भारत।**
**कुर्याद्विद्वांस्तथासक्तश्चिकीर्षुर्लोकसङ्ग्रहम् ॥**

(गीता ३। २५)

हे अर्जुन! जस्तै सकामी अज्ञानी कर्महरूमा आसक्त भएर कर्म गर्छन् यसै प्रकार ज्ञानीले पनि अनासक्तभावले यानी आसक्तिले रहित भएर कर्महरूको आचरण गर्नुपर्छ। लोकसंग्रहका लागि इच्छा गर्नु वास्तवमा इच्छा हैन। संसारका मान्छेहरूको कल्याणको जुन इच्छा हो, यस इच्छामा कुनै दोष मान्न सकिंदैन। वास्तवमा यो इच्छा त संसारका सबै मान्छेहरूलाई भगवान्मा लगाउनुको उद्देश्यले हुन्छ। तिम्रो जस्तो स्थिति भएको छ, यस्तै स्थिति सबैको बनाउनुपर्छ। यसबाट यो सिद्ध हुन्छ कि साधकलाई परमात्माप्राप्तिका लागि कर्म गर्नुपर्छ र जसलाई परमात्माको प्राप्ति भयो, त्यस्ता ज्ञानी महात्माले पनि अरूलाई महात्मा बनाउनका लागि कर्म गर्नुपर्छ। 'सबैलाई परमात्माको प्राप्ति होओस्' यो कुरा विशेष महत्त्वको हो र यो अवसर सबैले पाउनुपर्छ; अतः यस उद्देश्यले कर्म गर्नुपर्छ। यसका लागि आफ्नो समयलाई उत्तम-भन्दा-उत्तम कार्यमा लगाउनुपर्छ। निरन्तर यो विचार गर्नुपर्छ कि मेरो समयको सदुपयोग मान्छेहरूको कल्याणका निमित्त अथवा मान्छेहरूको सेवाका निमित्त ठीकठीक भइरहेछ या

त्यसमा कुनै कमी छ। यदि त्यसमा कमी छ भने त्यस कमीलाई सुधार्नुपर्छ, समयलाई जब भगवान्का काममा नै लगाउनु छ भने पूरा लगाउनुपर्छ र यदि त्यसलाई भगवान्का काममा लगाइँदैन भने यो समयको चोरी गर्नु हो। समयको चोरी गर्नुको तात्पर्य हो भगवान्को आज्ञाको पालन नगर्नु। यसका साथै जे-जति पदार्थ छन् ती सबै भगवान्का नै हुन् कारण पहिले नै सबैथोक भगवान्लाई अर्पण गरिसकेका छौं अतः भगवान्का चीज भगवान्का काममा नै लगाउनुपर्छ। फेरि भगवान्का कार्यमा यसलाई लगाउन नसक्नुका के कारण हुन सक्छन्? अर्को कुरा तिम्रो शरीर भगवान्का लागि हो अतः शरीरलाई पनि सबै समय भगवान्का काममा नै लगाउनुपर्छ यसलाई पनि अरू काममा किन लगाउने? तिम्रो मनलाई पनि त्यही काममा लगाउनुपर्छ तथा तिम्रो जुन बुद्धि छ त्यसलाई पनि त्यही काममा लगाउनुपर्छ। तिम्रो बुद्धि या मन लाग्दैनन् भने यो पनि भगवान्को आज्ञाको पालन नगर्नु हो जुन हाम्रा लागि उचित हैन। भगवान्का सबै चीजहरूलाई भगवान्का कार्यमा नै लगाउनुपर्छ।

साधकलाई आवश्यक छ कि भगवान्का पदार्थहरू जस्तै- पुत्र, रूपियाँ र संसारका भोग- यी सबैलाई भगवान्का काममा नै लगाऊन्। शरीर, मन, बुद्धि, इन्द्रियहरू र समय- यी सबै भगवान्का काममा नलगाएर अरू काममा लगाउनु यिनको चोरी गर्नु हो। साधकलाई यस सम्बन्धमा सावधान रहनु नै पर्छ। सिद्धलाई पनि परमात्माको प्राप्ति गर्नुपर्छ। परमात्माको प्राप्तिमा विलम्ब किन भइरहेछ? यस विलम्बको कारण हो प्रमाद। न गर्नयोग्यलाई गर्नु र गर्नयोग्यलाई नगर्नु- यो नै त प्रमाद हो। यही कारणले परमात्माको प्राप्तिमा पनि विलम्ब हुन्छ, अतः यस

प्रमादबाट सिद्ध-महात्मा पुरुषलाई पनि बँच्नुपर्छ र मान्छेहरूमाथि दया गर्नुपर्छ! आफ्ना तन-मन-धन-बुद्धि- यी सबै पूर्णरूपले भगवान्का काममा लगाउनुपर्छ। परमात्माको प्राप्ति गर्नु भगवान्को धाममा जानु हो यानी उनमा विलीन हुनु हो। भगवान्का धाममा एकपटक जो गए उनीहरू संसारमा फर्किंदा अरूहरूको हित गर्छन् यस्ता पुरुषलाई कारक पुरुष भनिन्छ। यस्तो पुरुष भगवान्का साथमा आउन सक्छ, भगवान्बाट पठाइएर आउन सक्छ। भगवान्ले उसलाई पूर्ण अधिकार दिएर पठाउँछन् अथवा थोरै अधिकार दिएर पठाउँछन्। त्यो संसारमा संसारको उद्धारका लागि यानी कल्याणका लागि आउँछ। यो त्यसको कर्तव्य हो तथा हामीहरूका लागि भगवान्को यो उपदेश हो कि हामीहरूले पनि यस्तो नै गर्नुपर्छ।

नारायण। नारायण! नारायण

~~○~~

॥ श्रीहरिः ॥

# शरणागतिका तीन शाखाहरू

शरणागतिको विषय यानी भगवान्‌को शरण हुने विषय धेरै नै उच्च दर्जाको हो। भगवान् भन्नुहुन्छ-

**तमेव शरणं गच्छ सर्वभावेन भारत।**
**तत्प्रसादात्परां शान्तिं स्थानं प्राप्स्यसि शाश्वतम्॥**

(गीता १८। ६२)

'हे भारत! तिमी सर्वभावसित ती परमात्माका शरणमा जाऊ, तिनको कृपाले तिमीलाई परम शान्तिको, अविनाशी स्थानको प्राप्ति हुनेछ' उनलाई 'सर्वभाव' भन्नुको तात्पर्य के हो? तात्पर्य यो कि हे प्रभो! हाम्रा माता-पिता, भाइ-बन्धु सखा, धन, जन, प्राण, सर्वस्व- तपाईं नै हुनुहुन्छ। तपाईं नै हाम्रा स्वामी हुनुहुन्छ, विद्या हुनुहुन्छ, पति हुनुहुन्छ यानी जे पनि जीवनमा छन् सबैथोक तपाईं नै हाम्रो हुनुहुन्छ यो नै सर्वभाव हो। सर्वभावको अर्थ यदि 'म भगवान्‌को शरण ामा छु' भन्ने लिइन्छ भने त्यसमा आफ्नो मन, वाणी, तन, धन, जन, सबै थोक उनको शरणमा अर्पण गरिएको हुनुपर्छ। मनले शरण हुनु, बुद्धिले शरण हुनु, इन्द्रियहरूबाट शरणमा हुनु, वाणीले शरण हुनु- यी सबै सर्वभाव अन्तर्गत नै हुन्। शरीरले पनि उनको शरणमा हुनु र धन तथा जनले पनि शरणमा हुनु यानी जे-जे पनि छन् सबै भगवान्‌का चीज हुन् यस्तो मानेर भगवान्‌लाई समर्पण गरिदिनु छ। भगवान् भन्छन् कि त्यस परमात्माको कृपाले परम शान्ति यानी परमात्माको प्राप्तिले जुन शान्ति प्राप्त हुन्छ, त्यो परम शान्ति हो, शाश्वत स्थानलाई परमपद

भन्छन् त्यसैलाई परमात्माको प्राप्ति पनि भन्छन् त्यसमा तिमी प्राप्त हुनेछौ। यो कुरा भगवान् स्वयं भन्छन्। सर्वभाव या सबै प्रकारको भावको वर्तमानमा पूरै जानकारी छैन, जे-जति उस्नाटित अर्थ छन् तिनलाई नै सर्वभाव हो भन्ने बुझेर आफ्नो प्रयोगमा ल्याउनुपर्छ।

शरणागति विषयको अर्थ उस्नाटन वा आविष्कार धेरै नै थोरै छ, लुकेको छ। आम मान्छेहरू कसैको ज्ञानमा छैन। जति अर्थ संसारमा उस्नाटित-आविष्कृत छन् तिनको पनि सबैलाई ज्ञान छैन। उस्नाटित-आविष्कृत अर्थमध्ये एउटा अर्थ यो छ- उनीमाथि पूरा निर्भर हुनु, आफ्ना र आफूलाई उनका चरणमा सुम्पिदिनु, आफ्ना र आफूलाई उनमा समर्पण गरिदिनु।

परेच्छाले होस् या अनिच्छाले जे पनि प्राप्त हुन्छ, हाम्रो मनका अनुकूल होस् या विपरीत, ती सबैलाई भगवान्को मङ्गलमय विधान मानिलिनु। भगवान्को मङ्गलमय विधानको अर्थ भगवान्कै आज्ञाले सबै थोक हुन्छ भनेर बुझ्नु। जे पनि हुनेछन् ती सबै भगवान्को आज्ञाअनुसार हुनेछन् ती अवश्यम्भावी छन् जुन प्रारब्धका फल हुन् तिनको कुनै प्रतीकार छैन र तिनको प्रतिकार गर्ने पनि किन? जब भगवान्को विधान हो र मङ्गलमय पनि छ भने प्रतिकार किन गर्नु छ। अँ, भगवान्ले चाहेमा तिनको प्रतिकार गर्न सक्छन् किन्तु यसका लागि भगवान्सित किन प्रार्थना गर्ने कि हे प्रभो! तिनको प्रतिकार गरिदेऊ। प्रतिकार नगरीकन सर्वस्वीकार भावको यौटा उदाहरण छ। श्रृंगी ऋषिद्वारा राजा परीक्षित्लाई श्राप भयो कि आजका सातौं दिन तक्षक नागले तिमीलाई डस्नेछन्। यो सूचना श्रृंगी ऋषिका पिता शमीक ऋषिले राजा परीक्षित्कोमा पठाइदिनुभयो

कि आजका सातौं दिन तिमीलाई तक्षक नागले डस्नेछन्। सूचना सुनेर राजा परीक्षित खुशी भए कि मद्द्वारा जुन अपराध भएथ्यो, त्यसको दण्ड मिल्यो, धेरै आनन्दको कुरा हो। यो खबर पाएर राजा सावधान भए। ऋषि–मुनिहरूलाई बोलाएर आफ्नो समय भगवान्का गुण, प्रभाव, तत्त्व, रहस्यका कुराहरू सुन्नमा लगाए।

भाग्यले शुकदेवजी आए। शुकदेवले परीक्षितलाई भागवत् सुनाएर उनको आत्माको उद्धार गरिदिए। कश्यप ऋषि परीक्षितलाई सर्पदंश पश्चात् जीवित गर्नका लागि आइरहेका थिए। तक्षक नागले ऋषिलाई धन दिएर पछाडि फर्काइदिए किनकि यिनले जीवित गरिदिए भने मेरो प्रतिष्ठाको हानि हुनेछ भन्ने उनलाई लाग्यो। पछि तक्षकले ऋषि फर्काएको कुरा जब जनमेजयलाई थाहा भयो तब तिनले भने कि तक्षक नागले टोक्नु कुनै अनुचित थिएन, त्यो त ऋषिको श्राप थियो, त्यसमा तक्षकको कुनै दोष थिएन; किन्तु त्यसले कश्यप ब्राह्मणलाई धन दिएर फिर्ता फर्काइदियो, यो त्यसको अपराध थियो। यसकारण म सर्पयज्ञ गरेर त्यसलाई दण्ड दिनेछु भन्दै जनमेजयले सर्पयज्ञ गरे।

अब यसमा यो विचार गर्नुपर्छ कि ऋषिको ठूलो उदारता हो कि परीक्षित्कोमा सूचना पठाइदिनुभयो र राजा परीक्षित त्यसलाई सुनेर प्रसन्न भए, यो परीक्षित्का लागि गौरवको कुरा हो। यदि ऋषि खबर पठाउँदैनथे भने राजा परीक्षित सावधान हुन पाउँदैनथे। खबर पहिल्यै पाउनाले कति ठूलो लाभ भयो कि उनले आफ्नो आत्माको कल्याण गर्न सके, यो कुरा परीक्षित्का लागि धेरै लाभको हो। जनमेजयको यो भाव हो कि मेरा पिताको मृत्यु हुन्थ्यो, पछि फेरि कश्यप ऋषि आएर जीवित गरिदिन्थे। यो भावना या भाव जनमेजयका लागि उचित नै छ।

पिताका लागि यस्तो भाव हुनु धैरै उत्तम हो, यसमा ऋषिका वचनहरूको प्रतिकार पनि छैन र ईश्वरका कानुनको रक्षा पनि छ। राजा परीक्षित्‌लाई जुन श्राप परेको थियो, त्यो परेच्छा थियो। यसै प्रकार यदि कुनै घटना अनिच्छाले आउँछ भने चाहे आफ्नो मनको अनुकूल होस् या प्रतिकूल, त्यसलाई भगवान्‌को पुरस्कार मानेर खुशी हुनु भगवान्‌प्रति आफैंलाई अर्पण गर्नु हो। अनिच्छाले या परेच्छाले कुनै पनि घटना घटित होस् त त्यसलाई भगवान्‌को मङ्गलमय विधान मात्रै हैन बरू त्यसलाई मङ्गलमय पुरस्कार मान्नुपर्छ, त्यसमा भगवान्‌को बडो दया बुझ्नुपर्छ। एकदमै भगवान्‌माथि निर्भर हुँदै त्यस निर्भरतामा भगवान्‌द्वारा परिचालित सम्बन्धित घटनालाई हेरीहेरी खुशी हुनुपर्छ। घटनालाई लीलाको रूप दिंदै भगवान् लीला गरिरहेका छन् भगवान् मलाई तमाशा देखाइरहेछन् यस्तो बुझ्नु अझै उत्तम कुरा हो। त्यस लीलालाई हेरीहेरी क्षण-क्षणमा मुग्ध हुनुपर्छ। जति नै अधिक प्रसन्नता हुनेछ त्यति नै त्यो भगवान्‌का अधिक शरणमा छ। यो शरणागतिको एक अंश हो, एक शाखा हो, एक पक्ष हो। यी यति भाव जसमा हुन्छन् उसलाई ईश्वरले कल्याण गर्ने नै छन् उसको आत्माको उद्धार गर्ने नै छन्। अतः मात्र भगवान्‌माथि निर्भर होओस्, त्यस सम्बन्धमा केही पनि विचार नगरोस्, ईश्वरको क्रियालाई हेरीहेरी हाँसिरहोस्, खुशी भइरहोस्।

अब अर्को कुरा बताइन्छ-

**मदर्थमपि कर्माणि कुर्वन्सिद्धिमवाप्स्यसि॥**

(गीता १२। १०)

भगवान् भन्छन् कि मेरा अर्थमा (भगवदर्थ) कर्म गर्दागर्दै पनि पुरुष परम सिद्धिमा प्राप्त हुन्छ। भगवदर्थ के? भगवदर्थ

भनेको यो हो कि भगवान्मा प्रेम हुने गरी वा भगवान्को प्राप्तिको उद्देश्यले कर्म गरियोस्। जस्तै लोभी मान्छे रूपियाँको प्राप्तिका लागि व्यापार गर्छ। त्यसका सबै चेष्टा रूपियाँका लागि हुन्छन् यसरी नै आफ्ना सबै चेष्टा भगवान्का लागि होऊन्। यी जे-जति पदार्थ छन् सबै भगवान्का पदार्थ हुन्। म भगवान्को हूँ, भगवान् मेरा हुन् मेरा सबै क्रिया भगवान्का लागि हुन् यसरी भगवान्का हुकुमअनुसार, भगवान्का आज्ञाअनुसार जे-जति क्रिया हुन्छन् ती सबै भगवदर्थ हुन्। त्योभन्दा पनि बढेर यो कुरा होस् कि भगवान्को मुडअनुसार, उनको संकेतअनुसार चल्नु। भगवान्को जुन संकेत छ, इशारा छ, भगवान्को जुन दिशा छ, भक्तका हृदयमा त्यसको छाप परिरहन्छ। र योभन्दा पनि बढेर यो हुन्छ कि भगवान्को मुड भगवान्को सिद्धान्तअनुसार हुन्छ। भगवान्को जस्तो सिद्धान्त हुन्छ उसैअनुसार भगवान्को मुड हुन्छ। सिद्धान्तका विपरीत मुड कहिल्यै हुन्न। अतः भगवान्को सिद्धान्तअनुसार हामी हिंडौं। जस्तै गीतामा भगवान्को सिद्धान्त छ। जे पनि भगवान्को सिद्धान्त छ, भगवान्को मत छ, भगवान्द्वारा गरिएका निर्णय छन् भगवान्को जे पनि मान्यता छन् ती अनुसार हिँडौं। मान्यता अनुसार चल्नाले भगवान्का सिद्धान्तको गहिरो ज्ञान हुन्छ। भगवान्का सिद्धान्तअनुसार जो हिंड्न चाहन्छ त्यस भक्तलाई सिद्धान्तको अनुभव हुन्छ। भगवान्को सिद्धान्त या त भगवान्को भक्त जान्दछ या भगवान् नै जान्दछन्। जब मान्छे भगवान्को भक्त बन्छ भने त्यसका हृदयमा भगवान्का सिद्धान्तको प्रादुर्भाव हुन्छ, जसबाट त्यसको हृदय भगवान्का सिद्धान्तले परिपूर्ण हुन्छ। भक्तको जुन भाव हुन्छ त्यही सिद्धान्त हुन जान्छ। वेद के हो? महापुरुषहरूका हृदयको भाव हो। महापुरुष, जस्तै-

ब्रह्माजी हुन् भने ब्रह्माजीका हृदयको उद्गार नै वेद हो र त्योभन्दा पनि बढेर भगवान्को मनअनुसार हिंड्नु हो। हिंड्नुबाट भगवान्का मनको पनि ज्ञान उसलाई हुन्छ। भगवान्को मन र भगवान्का भक्तको मन एकै हुन्छन्। भगवान्को बुद्धि र भक्तको बुद्धि एकै हुन्छ। भगवान्को मनअनुसार चल्नु, भगवान्को बुद्धिअनुसार चल्नु, भगवान्को सिद्धान्तअनुसार चल्नु, भगवान्को मतअनुसार चल्नु र भगवान्को निश्चयअनुसार चल्नु- यी सबै कुरा एकै हुन्। यहाँसम्म जे हुन्छ त्यसमा सूक्ष्मभावले कर्तापन हुन्छ, सूक्ष्म अहंकार हुन्छ। सूक्ष्म अहंकार नै शुद्ध अहंकार हो। यहाँ पनि एक प्रकारले कर्तापन हुन्छ। यस कर्तापनलाई पनि भगवान्मा समर्पण गरिदिऊँ र त्यसको फल पनि अर्पण गरिदिऊँ। परेच्छाले र अनिच्छाले हुने जे-जति फल हुन्छन् तिनलाई भगवान्मा समर्पणको कुरा त पहिल्यै भनियो। तर स्वेच्छापूर्वक, क्रियाको फल पनि क्रिया गर्ने समयमा नै भगवान्लाई समर्पण गरिदिनुपर्छ। जस्तै कोही व्यापार गर्छ र केही चीज किन्छ भने त्यसमा जुन नाफा या घाटा हुन्छ त्यो स्वेच्छापूर्ण गरिएका कर्महरूको फल हो। त्यो फल पनि भगवान्मैं समर्पण गरिदिऊँ। फलसित आफ्नो कुनै प्रयोजन हुन्न, किनकि-

**कर्मण्येवाधिकारस्ते मा फलेषु कदाचन।**

(गीता २। ४७)

तिम्रो कर्म गर्नुमा नै अधिकार हुन्छ, फलमा कहिल्यै हुन्न। आफूद्वारा हुने क्रियाको फल पनि भगवान्मा नै समर्पण होस्, समर्पणलाई पनि भगवान्को विधान मानेर प्रत्येक क्षण खुशी हुनुपर्छ। आफ्ना क्रियालाई पनि भगवान्मैं समर्पण गरिदिनु यो अझै उच्च दर्जाको कुरा हो।

**चेतसा सर्वकर्माणि मयि सन्न्यस्य मत्परः।**

(गीता १८। ५७)

भगवान् श्रीकृष्ण भन्छन्- अर्जुन! तिमी आफ्ना चित्तले, मनले सबै कर्महरूलाई ममा समर्पण गरिदेऊ र मेरो शरणमा आऊ। आफैंलाई भगवान्मा समर्पण गरिदेऊ र आफूबाट हुने क्रियालाई पनि भगवान्मा समर्पण गरिदेऊ। क्रियालाई समर्पण गर्नु के हो? क्रियालाई समर्पण गर्नु यो हो कि जस्तै श्वास आफैं नै आउँछ, आउनुमा कुनै परिश्रम गर्नु पर्दैन, सहजता। मनुष्य एक त प्राणायाम गर्छ र अर्को आफैं श्वास आउँछ। जुन श्वास आफैं आउँछ त्यो आफैं हुने क्रिया हो र विधिका साथ जुन प्राणायाम गरिन्छ त्यो प्राणायामको क्रिया हो। सबै थोक आफैं नै हुन्छन् जस्तै कुनै केटो गुरुकोमा पढ्छ, क, ख, ग, घ, ङ लेखिरहेछ भने उसले भुल गर्न सक्छ, परन्तु उसका हातमा गुरुको हात रहोस् त ऊ भुल गर्न सक्दैन। गुरु आफूले उसको हात लिएर क, ख, ग, घ, ङ लेखाउँछन् भने भुलको कुनै सम्भावना रहँदैन। यसै प्रकार आफूबाट हुने क्रियाहरू पनि भगवान्मा अर्पण गरिदिऊँ र भनौं कि प्रभो! मसित एक त ज्ञान नै छैन, दोश्रो मबाट भुलहरू स्वाभाविक रूपमा हुँदै आएका छन् म ती भुलको अधिकारी होइनँ यसकारण तपाईंबाट मलाई जुन स्वतन्त्रता दिइएको छ, काम गर्नुको आज्ञा दिइएको छ कि '**कर्मण्येवाधिकारस्ते**' तिम्रो कर्म गर्नुमा अधिकार छ, किन्तु त्यस अधिकारको ठीक-ठीक उपयोग गर्नुको सामर्थ्य ममा छैन, यसकारण म तपाईंमा सबै कुरा समर्पण गरिरहेछु। तपाईं नै मबाट जस्तो इच्छा होस् गराउनुहोस्। फेरि भगवान् उसबाट जे कर्म गराउनुहुनेछ त्यसमा भुल हुने कुनै सम्भावना नै हुन्न। भगवान्का

जस्तै शास्त्रहरूमा पनि आज्ञा छ, अतः कर्मलाई गीता र शास्त्रहरूसित पनि तुलना गर्नुपर्छ। यदि ती क्रिया गीता या शास्त्र विरुद्ध छन् भने बुझौं कि ती कर्ममा भगवान्‌को हात छैन, त्यहाँ कामको हात छ। अर्जुनले यो कुरा सोधेका छन्–

**अथ केन प्रयुक्तोऽयं पापं चरति पूरूषः।**
**अनिच्छन्नपि वार्ष्णेय बलादिव नियोजितः॥**

(गीता ३। ३६)

'हे वासुदेव! यो पुरुष कसद्वारा प्रेरित भएर पापको आचरण गर्छ? यसको पाप गर्नुको इच्छा छैन, उद्देश्य हैन, तैपनि मानौं कोही बलात् यसबाट पाप गराइरहेछ। यसरी जो बलात् पाप गराइरहेछ त्यो को हो, जसको प्रेरणाले यसलाई बाध्य भएर गर्नुपर्छ' भगवान् भन्नुहुन्छ– अर्जुन!

**काम एष क्रोध एष रजोगणसमुद्भवः।**
**महाशनो महापाप्मा विद्ध्येनमिह वैरिणम्॥**

(गीता ३। ३७)

यो काम नै क्रोध हुन्छ, कामको उत्पत्ति रजोगुणबाट हुन्छ, काम महान् खन्चुरो छ, जस्तै अग्निभित्र जति नै ईंधन हालिदेऊ त्यो निभ्दैन, बरू प्रज्ज्वलित हुँदै जान्छ। यसै प्रकार यो काम अनल समान छ र महान् पापी छ। जति पनि पाप हुन्छन् तिनको मूल कारण यो काम नै हो। पाप गर्ने विषयमा तिमी यस कामलाई नै आफ्नो शत्रु बुझ, यसलाई आफ्नो वैरी बुझ। अभिप्राय यो हो कि शास्त्र विपरीत हामी जुन पाप गर्छौं, त्यस्ता क्रिया जब मबाट हुन्छन् भने यो बुझ्नुपर्छ कि त्यसमा भगवान्‌को प्रेरणा छैन, कामको प्रेरणा छ। यो निश्चय होस् कि जब कर्ममा भगवान्‌को प्रेरणा हुन्छ भने त्यस कर्मद्वारा हुने सबै क्रिया उच्च–

भन्दा-उच्च कोटिका हुन्छन् र त्यसको फल भगवान्मा समर्पण हुन्छ नै। जहाँ कुनै कर्ता नै हुन्न त्यहीं कर्ताले कर्मको फल पनि पाउन बाध्य हुन्न। त्यहाँ त भगवान् जस्तो गराइरहेछन् त्यस्तो नै ऊ गरिरहेछ। समर्पितका सबै क्रिया भगवान्का नै क्रिया हुन् जस्तै भगवान् अवतार लिएर क्रिया गर्छन् त्यसै प्रकारले समर्पितबाट हुने क्रिया पनि अवतार प्रजातिका हुन्छन्। जस्तै भगवान्का क्रिया, भगवान्का चरित्र एकै भगवान्का नै लीला हुन् त्यसै प्रकारले यस्ता महापुरुषका क्रिया पनि भगवान्का लीला नै हुन्। त्यसलाई लीला मानेर जो मान्छे खुशी हुन्छ उसको कल्याण हुन्छ। फेरि त्यस भक्तको कल्याण हुन्छ भने भन्नु नै के, ऊ त कल्याण-स्वरूप नै हो। त्यसका सबै क्रिया भगवान्का लीला हुन्। संसारमा जो-कोही महापुरुष छन् तिनको क्रियालाई हामी भगवान्को लीला मान्न थाल्यौं भने हाम्रो कल्याण हुन सक्छ, ऊ कल्याण-स्वरूप नै हुन्छ। त यो शरणागतिको दोश्रो पक्ष भनियो। दोश्रो शाखा भनियो।

अब तेस्रो शाखा यसरी भनिन्छ-

भगवान्को नाम, स्वरूप, गुण, लीला, प्रभाव, स्वभाव, तत्त्व, रहस्यलाई हेरीहेरी, सम्झीसम्झी हरसमय आनन्दमा मग्न हुनुपर्छ। भगवान्को नामलाई, स्वरूपलाई, भगवान्को लीलालाई र भगवान्का गुणहरूलाई, भगवान्का प्रभावलाई हरसमय स्मरण गर्नु धेरै उच्च दर्जाको कुरा हो। यसबाट पनि उच्च दर्जाको चीज यो हो कि गर्नु नपरोस्, बस आफैं नै भइरहोस्। एक हुन्छ भगवान्को नामको जप गर्नु र अर्को हुन्छ भगवान्को नामको जप स्वतः हुनु, एक त हुन्छ भगवान्को ध्यान गर्नु र अर्को हुन्छ भगवान्को ध्यान आफैं हुनु। गर्नुको अपेक्षा यदि आफैं नै हुन्छ

भने त्यो धेरै उच्च दर्जाको कुरा हुन्छ। त्यो हुनु पनि फेरि निरन्तर होओस्, हरसमय होओस् त यो अझै धेरै उच्च दर्जाको कुरा हो। यसरी गुण, प्रभाव, तत्त्व, रहस्यलाई बुझ्दै भगवान्का नामको जप हुनु, भगवान्का स्वरूपको ध्यान हुनु– त्यसभन्दा पनि अझै उच्च दर्जाको कुरा हो र यदि निरन्तर हुँदा निष्कामभावले हुन्छ भने त्यसका बारेमा त भन्नु नै के छ? त्यसमा पनि यदि क्षण–क्षणमा प्रसन्नता, शान्ति, आनन्दका लहरहरू उठिरहन्छन् भने त्यो त यति उच्च दर्जाको कुरा हो कि कसैले पनि यदि उसलाई हेर्‍यो मात्र भने पनि उसका पापहरूको नाश हुन्छन् र त्यो पनि परमात्मा प्राप्तिका लागि पात्र बन्छ। भगवान्का नामको जप र ध्यान यदि गुण, प्रभाव, तत्त्व, रहस्यसहित हुन लागेमा, अझ गुप्त रूपले निरन्तर भएमा तथा सबै थोक भएर पनि फेरि निष्कामभावले हुन्छ भने ती क्षणहरूमा त्यसको प्रसन्नता, शान्ति र आनन्दको कुनै सीमाना नै रहँदैन। त्यस्तो अवस्थामा त्यस भक्तको दर्शन गर्ने पुरुषले कति लाभ उठाउन सक्लान्। भरतजी भगवान् श्रीरामचन्द्रजीको दर्शनका लागि चित्रकूट जाने बेलामा बाटोमा भगवान्का चरणचिह्न जहाँ देखिन्छन् त्यहीं नै उनी धूलि उठाएर नेत्रहरूमा लगाउन लाग्थे, हृदयमा लगाउन लाग्थे र मस्तकमा धारण गर्न लाग्थे। धूलिग्रहणको त्यो बेलामा उनको प्रेमदशा देखेर गुहको दशा पनि दशारहित भयो। त्यहाँ जति दर्शक थिए, जड चेतन भए र चेतन जड भए। जस्तै जड वृक्ष प्रमुक्ति भए र गुह जस्ता चेतन मान्छेहरूले आफैंलाई भुलेर जड भए। तिनका शरीरमा रोमाञ्च हुन लाग्यो। मानौं शरीरका प्रत्येक नाडीहरू भगवान्का नामको उच्चारण गर्दै छन्। प्रत्येक रोमावली जुन फर्फराइरहेछन् मानौं तिनबाट पनि भगवान्को नामको उच्चारण

भइरहेछ। चाहे ओम्-ओम् भन, चाहे राम-राम भन। भरतका जुन क्रिया भइरहेछन् हल्लिनु, चल्नु ती सबैबाट एक प्रकारले मानौं भगवान्‌कै नामको जप भइरहेछ, स्मरण भइरहेछ। यस प्रकारको भावावस्था जसको अनुभवमा छ भने मानौं उनीद्वारा क्षणक्षणमा करोडौं नामको जप भइरहेछ।

**रग रग बोले रामजी रोम रोम रंकार।**
**सहजे ही धुन होत है ये ही सुमिरन सार॥**

जप गर्दा जब हृदय प्रफुल्लित हुन्छ, शरीरमा रोमाञ्च हुन लाग्छ, अश्रुपात हुन लाग्छ र त्यसैमा मग्न हुन्छ भने त्यस्ता दशाका भक्तलाई देखेर जो पनि मुग्ध हुन्छ। विरहमा व्याकुल भक्तको स्थिति यस्तै प्रकारको हुन्छ। यो त मबाट तपाईंलाई प्रेमानन्दमा मग्न हुने कुरा भनियो, जस्तै सुतीक्ष्ण भगवान्‌को ध्यानमा यसरी मस्त भए, उनका शरीरका रोम यसरी खडा भए जस्तै कटहरका फलको काँडा होस् र प्रसन्नता तथा शान्तिको यति बाढी-जस्तै आयो कि त्यसको वर्णन गर्नै सकिंदैन। भावावस्थाको यो प्रकार त हर्षको हो। दोश्रो प्रकार यसरी छ- जस्तै भरतजी महाराजमा विरहको व्याकुलता छ। यद्यपि प्रकारको भेद हो, किनकि प्रसन्नतामा रोमाञ्च हुन्छ, हर्ष हुन्छ, बडो शान्ति हुन्छ, परन्तु विरहको व्याकुलतामा हर्ष हुन्न, रोमाञ्च हुन्न बरू अश्रुपात हुन्छ, जस्तै हनुमानजीले जब भरतको अवस्था देखे-

**बैठे देखि कुसासन जटा मुकुट कृस गात।**
**राम राम रघुपति जपत स्रवत नयन जलजात॥**

(रा० च० मा० ७। १ (ख))

भरतजी महाराज भगवान् रामको विरहको व्याकुलतामा बसेका छन् कि भगवान् राम अहिलेसम्म आएनन् भगवान्‌को

वियोगमा प्राण जाने तैयारी भइरहेछ। भगवान्को विरहमा व्याकुल छन्। यस्तो स्वरूपलाई हनुमानजी देखिरहेछन् हनुमानजी हेर्छन् कि भरतजी कुशको आसनमाथि बसेका छन् जटाको नै उनको मुकुट छ, शरीर कृश भएको छ र भगवान्को विरहको व्याकुलतामा नेत्रहरूबाट आँशुका धारा बगिरहेछन् उनी रघुनाथजीका नामको- राम-नामको जप गरिरहेका छन्। त्यो देखेर हनुमानजीको यस्तो दशा भयो कि उनको शरीरमा पनि रोमाञ्च भयो। हनुमानजी मुग्ध भएर बोल्नुभयो कि महाराज! जुन नाम तपाईं जपिरहनुभएको छ उनै श्रीराम सीता र लक्ष्मणसहित आइरहेछन्। यो सुनेर भरतमा पहिल्यै जुन व्याकुलताको बाढी आइरहेको थियो, त्यो एकदम हर्षमा परिणत भयो। विरहको व्याकुलताको अवस्था पनि कल्याण गर्नेवाला थियो र फेरि यति प्रसन्नता भयो, यति प्रसन्नता भयो कि जस्तै प्यासो मान्छेलाई कसेले अमृत पियाइदेओस्; यो पनि तुलना दिन सकिंदैन। यसका लागि तुलना दिनयोग्य केही छँदै छैन। यो भरतजीको करुणाभाव हो र त्यस करुणाभावको फल हो भगवान्को प्राप्ति। पहिला हनुमानजी मिलून् र त्यसपछि फेरि राम। करुणाभाव र प्रेमका कारण हर्षको प्रादुर्भाव- यी दुवै नै कल्याण गर्नेवाला उच्च कोटिका भाव हुन्। पहिलो कुरो यो हो कि हरसमय भगवान्को नाम र स्वरूपलाई स्मरण गर्नुपर्छ तथा भगवान्को लीला र उनका गुणको स्मरण गर्नुपर्छ एवं भगवान्को प्रभाव र स्वभावको स्मरण गर्नुपर्छ तथा भगवान्को तत्त्व र रहस्यलाई बुझ्नुपर्छ। यिनमा भगवान्को नाम, रूप, गुण, प्रभाव इत्यादिको जे कुरा भनियो त्यो यसकारण कि भगवान्को नाम, रूप, गुण, प्रभाव, स्वरूप र लीलालाई नित्य स्मरण गर्नु, पछि गएर स्मरण गर्न नपरोस्,

यी सबैको निरन्तर स्मरण हुनु कुनै पनि प्रकारले रोकिन सक्दैन- यसका लागि कुनै चेष्टा गर्न आवश्यकता छैन आफैं नै भइरहोस्। यसैबीच तत्व-रहस्यलाई बुझेर आफूलाई स्वयंमा मुग्ध राख्नु, यसका फलस्वरूप जब परमात्मा प्रकट हुन्छन् भगवान् जब साक्षात् दर्शन दिन्छन् फेरि साधक सबै भावहरूबाट उठेर, पार भएर या यसो भनौं कि सबै भावहरूबाट माथि उठेर परमात्मालाई प्राप्त गर्छ। त्यहाँ न लज्जा छ, न भय छ, न मान छ, न आदर छ, न सत्कार छ, न स्तुति छ र न प्रार्थना छ। त्यहाँ भगवान् र भक्त दुवै जना एक नै रूपमा छन् दुई हुँदा पनि भावले एक रूपमा छन्। प्रेम, प्रेमास्पद, प्रेमी स्वरूपले तीन हुँदा पनि धातुले एकै हुन् मानौं चिन्मय चेतन प्रेम नै तीन रूपमा विभाजित भएर त्यहाँ प्रकट भएको छ। त्यो बेला भगवान्सित हुने सबै क्रियाले भक्तलाई आह्लादित गर्छन्। भक्तबाट हुने सबै क्रियाले भगवान्लाई आह्लादित गर्छन्। सबै क्रिया प्रेममय हुन् भावमय हुन्। भगवत्प्राप्ति भएपछि महापुरुषको जुन स्वाभाविक स्थिति हुन्छ साधकका लागि त्यही साधन हो। यो जुन परमात्मा प्राप्त हुनुपछिको कुरा भनियो, साधना अवस्थामा यसैलाई लक्ष्य बनाएर यसको अनुकरण गर्नु, यसैलाई आधार बनाएर यसअनुसार हिंड्नुपर्छ। यो पनि शरणागतिको भाव हो। यसको आश्रय लिनुपर्छ। भगवान्को प्रेममा जो मुग्ध हुन्छ त्यस समय प्रेम, प्रेमास्पद, प्रेमी- यिनीहरू स्वरूपले बेग्ला-बेग्लै भएर पनि वस्तुले एकै हुन्। यस्तो बुझेर तिनको अनुकरण गर्नुपर्छ। यसरी अनुकरण गर्नुका अपेक्षा अझै धेरै दामी हुन्छ कि गर्नै नपरोस्। यस्तो परिस्थिति आफैं नै होओस्- पहिला त्यसको नकल गरोस्, अनुकरण गरोस्, त्यसअनुसार बनोस्, फेरि त्यस्तो स्थिति

विस्तारै आफैं नै हुनेछ। त्यस्तो स्थिति जब आफैं नै हुन्छ, त्यसका लागि कुनै क्रिया गर्नुपर्दैन र स्वभावसिद्ध त्यस्तो स्थिति हुन्छ भने त्यसको फल भगवान्को प्राप्ति हो। भगवान्को प्राप्ति आफैं नै होओस्। भगवान्को शरणको यो पनि एक पक्ष हो, यो पनि एक शाखा हो। महापुरुषहरूमा, भगवान्का भक्तहरूमा, गुणातीत महापुरुषहरूमा जुन स्वाभाविक गुण हुन्छन् जुन तिनका स्वाभाविक स्थिति हुन्छन् साधक पुरुषका लागि तिनै साधन हुन्। तिनैलाई लक्ष्य बनाएर तिनैलाई आधार बनाएर तिनैअनुसार आफूलाई बनाऔं। पहिला बनाऔं, फेरि बनाउनुको आवश्यकतै नपरोस्। त्यत्तिकै स्वाभाविक नै होओस्। सबै कुरा स्वाभाविक नै हुन लागोस्।

नारायण! नारायण! नारायण!

॥ श्रीहरिः ॥

# वासुदेवः सर्वम्

जुन दाजुभाइले भगवान्सित भेटिने जति अवधि (भाका) बनाउँछन् त्यति नै समयमा भगवान् मिल्छन् अवधि यस जीवनको अन्तसम्मको त बनाउन सकिन्छ तर यसपछिको बनाउनुहुँदैन। हामी संसार मानिरहेका छौं, जबकि भगवान् भन्नुहुन्छ कि म नै संसारमा अनेक रूपले देखिइरहेको छु। अतः यो जन्म अन्तिम जन्म बुझ्नुपर्छ।

**कबहुँक करि करुना नर देही। देत ईस बिनु हेतु सनेही॥**

भगवान्ले करूणा गरेर बिना नै कारण मानव-शरीर दिन्छन् हाम्रा आचरणहरू उनी देख्दैनन्। हामीले भगवान्लाई सुहृद् मानेमा हाम्रो कल्याण हुनेछ। भगवान्ले आहार, निंद्रा, मैथुनका लागि यो शरीर दिएका हैनन् मनुष्य-शरीरमा मात्रै यो बुझाइमा आउँछ कि सबै वासुदेव हो। मनुष्य बनाइदिए, पूर्ण दया भयो। मनुष्य-शरीर दिएर आफ्नो प्राप्तिको मौका दिए, यो भगवान्को सुहृदता हो, यो थाहा पनि गराइदिए, '**वासुदेवः सर्वमिति**' यो घोषणा पनि गरिदिए, अतः विश्वास गरेर बुझ्नुपर्छ कि भगवान्ले नै यस्तो रूप धारण गरेका छन् यो मानेर भगवान्को दर्शन गर्दै आफूलाई भगवान् प्राप्त भए नै, यस्तो मानिलिओस् यौटा कुरा त यो हो।

अर्को कुरा- आज नै भगवान् भेटिनका लागि तैयार छन् विश्वास गर्नुपर्छ, साथै प्रतीक्षा पनि गर्नुपर्छ, पटक-पटक बाटो

हेरिरहनुपर्छ, जस्तै मानौं कोही आफ्नो मित्र आउनेवाला होस् र गाडीको समय सूचित नगरोस्, त्यस्तो परिस्थितिमा प्रतीक्षा गर्नेले सबै गाडीहरूलाई हेर्छ र जब पनि मित्र आउँछ त भेटिन्छ नै। एकएक मिनेटमा सबै गाडीलाई हेर्छ के यो हो- हैन, यो हैन- यसरी हाम्रो जीवनमा समेत कोही पनि देखियोस्, भित्र खिटिक्क हओस्, सबैमा भगवान्कै आउने बाटो हेरोस्, यसरी आतुरतासित प्रतीक्षा गर्नु साँचो भजन हो। गाडीमा आउने आफ्ना मित्रको त विचार बदलिन पनि सक्छ, किन्तु भगवान्को आगमन त हाम्रो भावमाथि निर्भर छ।

भरोसा गरेर भन्नुपर्छ। भगवान् आए, भगवान् आए यसरी भन्नुपर्छ। सारा अवध भगवान्को विमानलाई देखेर उफ्रिन लाग्यो। सबैलाई आतुरता लागेको थियो। सबै धेरै उत्साहित भइरहेका थिए। भगवान् हेर्छन् कि यिनको त वैकुण्ठवासीहरूको भन्दा पनि अधिक प्रेम छ जस्तै चखेवाहरूको झुण्ड चन्द्रमालाई हेर्छन् उसरी नै सबैले हेर्थे, कष्ट एकदमै भुले, भगवान्ले पनि तिनको भावअनुसार कार्य गरे, एक क्षणमा सबैसित भेटिए।

**छन महिं सबहि मिले भगवाना। उमा मरम यह काहुँ न जाना॥**

क्षणमा भगवान् सबैसित भेटिए, अनन्त रूपमा भए।

**अमित रूप प्रगटे तेहि काला। जथा जोग मिले सबहि कृपाला॥**

जोसित मिल्छन् उही आनन्दित हुन्छ। भगवान् दोषहरूतिर ख्याल गर्थेनन्। फेरि हामी दोषहरूतिर हेरेर अनुत्साहित किन होऔं।

**जन अवगुन प्रभु मान न काऊ। दीन बंधु अति मृदुल सुभाऊ॥**

भगवान् बहुतै दयालु छन्। उद्धार गर्नका लागि सदा तैयार रहन्छन्। धूलिका कण गन्न सकिन्छ तर हाम्रा कति जन्म भए

यो गन्नु कठिन छ। यो अन्तिमको जन्म, मनुष्यको जन्म दिए, ठूलो दया गरिदिए। भगवान्को यस दयालाई यदि हामी स्वीकार गर्दैनौ भने हाम्रो ठूलै मूर्खता हुनेछ। जब भगवान् भन्नुहुन्छ–

**बहूनां जन्मनामन्ते ज्ञानवान्मां प्रपद्यते।**
**वासुदेवः सर्वमिति स महात्मा सुदुर्लभः॥**

(गीता ७। १९)

धेरै जन्महरूका अन्तिम जन्ममा तत्त्वज्ञानलाई प्राप्त पुरुष, सबै थोक वासुदेव नै हो– यो भावमा मलाई भज्दछ, त्यस्तो महात्मा अत्यन्त दुर्लभ छ।

तब हामी अज्ञानी किन बनौं, सबै परमात्मा हो यो मान्नुमा के लाग्छ। यसरी जो भज्दछ उही महात्मा हो। जब यस्तो कुरा हो भने हामी सबै कुरालाई परमात्मा नै किन नबुझौं। यो कुरा मनुष्य-जन्ममा मात्रै मान्न सकिन्छ, पशु-पक्षी आदि योनिहरूमा यसलाई बुझ्ने कुनै साधन नै छैन। यसकारण हामीले त यो जन्ममा नै, यस जन्मको पनि थोरै समयमा नै भगवान्लाई प्राप्त गर्नुपर्छ।

भगवान्का स्वरूप निराकार भनिएको छ, त्यसका अनुसार यो युक्ति बुझ्नुपर्छ–

बादलका भित्र-बाहिर सर्वत्र आकाश छ, बादलमा –जस्तै दृश्य शरीरमा सर्वत्र आकाश यानी विज्ञान आनन्द-घन परमात्मा बाहिर-भित्र, माथि-तल- सबै तिर परिपूर्ण भइरहेका छन्। हामी परमात्माका संकल्पका आधार हौं। हामीले नेत्रहरू बन्द गरौं त आफ्ना भित्र-बाहिर, माथि-तल आनन्द-नै-आनन्द परिपूर्ण छ, यस्तो बुझिलिऊँ। हामी आनन्द-नै-आनन्दरूपबाट परिपूर्ण छौं।

यो शरीर ब्रह्मबाट नै उत्पन्न भएको छ, उसैमा स्थित छ र उसैमा लीन हुन्छ। परमात्मा आनन्दरूपले हाम्रा बाहिर-भित्र परिपूर्ण छन्। आनन्दका सिवाय कुनै वस्तु छैन। उही आनन्द सुखका रूपमा आउँछ। आनन्द अत्यन्त सुखरूप छ, त्यस सुखको कुनै सीमा छैन। आनन्द-नै-आनन्द छ, आनन्दलाई ब्रह्म मानेर उपासना गर्नुपर्छ, बुद्धिमा निश्चय गर्नुपर्छ, मनले मनन गर्नुपर्छ। त्यस आनन्दको नाम नै नारायण हो।

नारायण, नारायण, नारायण, आनन्दमयको उच्चारण गर्नाले आनन्दमय अनुभूति हुन्छ, जस्तै कुनै आनन्दको समुद्र उर्लिएर आएको छ। त्यो आनन्द अपार छ, उसमा कुनै दोश्रो वस्तु छैन, अतः त्यो पूर्ण आनन्द हो, शान्त आनन्द हो, सम छ, ऊ यति गहिरो छ कि त्यसमा त्यसका अतिरिक्त अर्को वस्तु नै छैन, ऊ जड छैन, चेतनस्वरूप हो, अनन्त हो। त्यसको सीमा छैन, त्यो सबै जग्गा समभावले परिपूर्ण छ। त्यो नित्य छ, अचल छ, यस्तो त्यो आनन्द छ। अव्यक्त छ, शुद्ध छ, निर्विकार छ।

यस्तो आनन्द शरीरका बाहिर-भित्र सबै जग्गा परिपूर्ण छ। शरीर हिंड्छ त आनन्दमा नै हिंड्छ। आकाश झैं आनन्द सबै जग्गा छ, साधन-कालमा पनि आनन्द, सिद्धावस्थामा पनि आनन्द। शब्द, अर्थ, ज्ञान सबै आनन्द-नै-आनन्द, आनन्दका सिवाय अर्को वस्तु नै छैन, हृदयमा आनन्दको नै अनुभव गर्नुहोस्। प्रत्यक्षमा पनि आनन्द, साधनमा पनि आनन्द, फलमा पनि आनन्द। सबै भूत-शरीर आखिरमा आनन्दमा नै विलीन हुन्छन् र एक आनन्द-नै-आनन्द रहन्छ, जस्तै सबै बादल जब आकाशमा विलीन हुन्छन् तब एक आकाश नै रहन्छ, त्यस्तै एक

आनन्द नै रहन्छ। यसरी नै ध्यानमा मस्त भएर हिंडौं। सगुणको विषयमा अर्को कुरा भनिन्छ- हामीहरूले यो बुझ्नुपर्छ कि उनी साक्षात् परमात्मा नै हाम्रा साथमा क्रीडा गरिरहेका छन् जस्तै राम रूपमा प्रकट भएर भाइहरूसित गरेथे, कृष्ण रूपमा गोपिनीहरूसित गरेथे, त्यस्तै हामीसित क्रीडा गरिरहेका छन् यसरी हेर्नुपर्छ। रमण भन, क्रीडा भन, एकै कुरा हो। जस्तै अत्यन्त प्रिय मित्रसित खेलिन्छ, हाँसी-हाँसी बोलिन्छ त्यसरी नै उनैसित सँगसँगै हिँडौं। सुत्छौं त छेवैमा सुतून् हाँस्छौं त भगवान्सितै हाँसौं। सबै क्रियामा एक-अर्काको नकल गरौं, उनको वाणी बडो आनन्ददायिनी छ, दयालु छन् सुनेर शरीरमा कम्प हुन्छ। हृदयमा क्षण-क्षणमा कम्पन आउन लाग्छन्। हृदयरूपी सागरमा भगवान्का भावलहरहरू उठ्छन्। मनमा अन्तर-नेत्रहरूले दर्शन भइरहेका छन्। बहुतै मधुर रूप छ मानौं नेत्रहरूद्वारा रसास्वाद मिल्छ, नेत्रहरूद्वारा मानौं अमृतलाई नै पान गरिरहेछु। स्पर्श गर्छु त दिव्य स्पर्श छ, स्पर्शद्वारा अमृतको आस्वाद लिइरहेछु। दिव्य गन्ध स्वाभाविक नै नासिकाभित्र गइरहेछ। उनै भगवान् हामीलाई हेरिरहेछन्। आफ्ना प्रेममयी दृष्टिद्वारा प्रेमले भिजाइरहेछन् त्यस आनन्दरूपबाट हामी पूर्ण भइरहेका छौं। भगवान् जसलाई कृपादृष्टिले हेर्छन् फेरि उसलाई चिन्ता भय शोक कहाँ।

प्रेमको दृष्टिले हेर्दै हामीलाई प्रेमले पूर्ण गरिरहेका छन्। यसरी प्रभुलाई हरसमय हेरिरहौं। चन्द्रमाले जसरी चाँदनी छिरलेर शीतल गर्छन् त्यसरी नै भगवान् प्रेमरस बर्साउँछन्। सबै रोम-रोम, मन-बुद्धि सबै भगवान्का प्रेमले परिपूर्ण भए। जस्तै कसैले जादू गरेर आफ्नो वशीभूत गर्दो होस्। प्रेमको डोरीले यस्तो

बाँध्यो कि हामी उनलाई छोड्नै सक्दैनौं। बस हाम्रो यो अवस्था सदा नै बनिरहोस्, हामीलाई अरू केही आवश्यकता छैन, बस सदा प्रेम-रस पिई नै रहियोस्। श्रीमन्नारायण, नारायण, नारायण। आनन्दमय, आनन्दमय, आनन्दमय। पूर्ण आनन्द, घन आनन्द, अचल आनन्द, आनन्द-नै-आनन्द।

अब यौटा अर्को कुरा सुनाइन्छ। उपनिषद्हरूमा तत्वका प्रसंगमा यस्तो कुरा आएको छ कि यो यस्तो विषय हो यदि सुख्खा दाउरालाई सुनाइन्छ भने त्यो पनि सजीव हुन्छ। हामीहरू जुन मुर्दारजस्ता छौं तिनमा पनि रस आउन पर्छ। भगवान् श्रीकृष्ण जब प्रेमले वंशी बजाउँथे त बलिरहेका दाउरा पनि द्रवीभूत भएर चिसा हुन्थे, हरिया हुन्थे, तिनबाट धुआँ निक्लन लाग्थ्यो, भान्छा ठीकसित हुन्नथ्यो।

यी कुराहरू श्रीकृष्णका हुन्। मेरा खल्तीका त हैनन् म त फोनोग्राफ-जस्तै बोलिदिन्छु। सबै भगवान्का नै वचन हुन्। कैयौं वचन सोझै आएका छन् कैयौं केही थप मिसिएर आएका छन्। भगवान्का वचन आकाशवाणीबाट पनि ओर्लिन्छन् महात्माहरूका वचनहरूलबाट ओर्लिन्छन् शास्त्रहरूबाट पनि ओर्लिन्छन्। आफूले त यो बुझ्नुपर्छ कि यी हुन् त भगवान्का वचन। तर रंग किन चढ्दैन? वस्त्र जति सफा हुन्छ उति नै रंग चढ्छ। अवश्य पनि थोरैथोरै रंग हामीमाथि पनि चढ्छ, किन्तु यसबाट मात्रै संतोष गर्नुहुँदैन। रंग यस्तो हुनुपर्छ कि चम्किन लागोस्, यस भगवद्विषयको रंगमा साबुन पनि छ। मैलो छ भने पटकपटक रगड्नाले मैलोलाई काटीकाटी कपडाहरू साफ गरिदिन्छ र एकदमै रंग चढ्छ। फेरि यदि भनौं रंग चढ्न यति विलम्ब किन? यो नै कुरा

हो कि कपडा मैलो छ। भगवान्का तत्त्व-रहस्यका कुराहरू नै रंग हुन् पटक-पटक तिनमा डुबकी लगाउनुपर्छ समय-समयमा नामको उच्चारण गर्नु साबुनको रगडाइ हो। रगडाइले हृदय एकदम सफा हुन्छ तथा तुरून्त रंग चढ्छ।

चुम्बक (चुंबक) छ भने भुइँमाथि लाग्दा फलामका परमाणु त्यससित टाँस्सिएर आउँछन् तर चुम्बकको मसाला घोटेर सफा गरिदिएमा फलाम तान्न सक्दैन। हाम्रो हृदयमा मैलो छ त्यही भएर त विषयहरूतिर जान्छ, त्यसलाई घोटेर सफा गरिदिए फेरि विषयतिर जानै सक्दैन। प्रेम या ज्ञानका साबुनले घोटेर सफा गरिदिए फेरि मैलोलाई छुँदै छुँदैन, साना बच्चाहरूलाई ज्ञान हुन्न त्यही भएर त मैलातिर जान्छन् जब घृणा हुन्छ फेरि जान्नन्। पटक-पटक घृणा गराउनाले यस्तो घृणा हुन्छ कि घृणा गराउनेवालाहरूसित पनि धेरै घृणा हुन्छ, त्यसरी नै जब विषयहरूमा घृणा हुन्छ त तिनमा दुर्गन्ध आउँछ। छेउमा पनि जान सक्दैन। जब वैराग्यको नशा चढ्छ फेरि अत्तर-पुष्पतेल पिसाब समान हुन्छन् जति पनि स्त्री आदि छन् सबै विष्ठामूत्रमय लाग्छन्। विष्ठा-मूत्रमा र त्यसमा फरक नै के छ, दिसाका समान त हुन्। त्यस साक्षात् आनन्दलाई छोडेर घृणित पदार्थतिर दृष्टि गर्नु मूर्खता हो। थोरै पनि ज्ञान भयो भने फेरि छेउमा पनि जान्न।

जब प्रभुमा प्रेम हुन्छ त भक्तले त्यो छोडेर कतै जानै सक्दैन, आनन्द नै प्रेमका रूपमा प्रादुर्भाव हुन्छ। रस, आनन्द, प्रेम त्यसैका मोटामोटी रूप हुन्। जस्तै आकाशमा बादल नै थोपा, असिना र बरफका रूपमा हुन्छ, त्यस्तै त्यो आनन्दमय परमात्मा नै रस, आनन्द, सुखका रूपमा परिणत हुन्छ, त्यस आनन्दमा

डुबेपछि फेरि उसलाई छोड्न नै कसरी सक्छ। त्यस भगवान्‌को वियोगले उसलाई तडपाउँछ, जस्तै माछाको जब जलबाट वियोग हुन्छ तब फेरि उसलाई जलमा हाल्नाले मात्रै त्यसमा प्राण आउँछन्। भगवान्‌का कपडाहरू डुब्छन्। सर्वत्र रंग-नै-रंग होओस्, चेतनतारूप जलमा घोलिएको रंगमा यसरी रंगिएका छौं कि उसका सिवाय अरू केही छैन। सबै तन्मय भएर आनन्दरूप भइरहेका छन्।

जहाँ हिंड्छन् त्यहाँ इष्टरूप साथ-साथै हिंड्छन्। उनको दर्शन, भाषण, स्पर्शले उत्तरोत्तर यति मुग्ध भइरहेका छौं कि आफूलाई नै भुलेका छौं, उसका सिवाय न कुनै दोश्रो चीज देखिन्छ र न अनुभव नै हुन्छ।

**॥ सियावर रामचन्द्रको जय॥**